# आभार

यो मेरो पहिलो उपन्यास र पहिलो पुस्तकाकार उत्साह हो। पुस्तक छाप्नु धेरै जनाको ऋणी हुनु हो भनेर कुनै सज्जनले लेखेका छन् र म यति बेला त्यही सम्झँदै छु ।

सर्वप्रथम *कान्तिपुर* जसको हरेक चरणमा संलग्न भएर मैले सोह्र वर्ष अनवरत देशदेशावर सोधीखोजी गर्दै आफ्नो दृष्टि उघार्न र कलम तिखार्न पाएँ। सहकर्मीहरू जोसँग प्रायः सधैँ सैद्धान्तिक र सिर्जनशील ठाकठुक परेको छ । तमाम देशीविदेशी पत्रकार र लेखकहरू जसका रचना पढेर मैले आफूलाई कतै उभ्याउने प्रयास गरेको छु। आमा प्रेमकुमारी र भाइ जनक जसले मेरो अव्यावहारिक जीवनशैली खपेर मलाई एकलकाँटे हुन दिएका छन् ।

र, *कफीगफ*का पाठकहरू जसले फुर्क्याइदिएकै भरमा म आफ्नो क्षमताको यो परीक्षा दिँदै छु।

किरणकृष्ण श्रेष्ठ जसले यो पुस्तक लेख्न बस्दैखेरि *नेपालय* अन्तर्गत प्रकाशन सुरु गर्न कम्मर कसे। नवीन जोशी जसले पुस्तकको भाका बुझेर आवरण र सज्जा लयबद्ध गरे। चन्द्रशेखर कार्की र अमृत गुरुङ जसले मेरो लेखकीय स्वभाव चिनेर सुहाउँदो तस्बिर दिए । पारसप्रकाश नेपाल जसले मेरो भाषागत कमजोरी एक मेहरोमै छिमलछामल पारे । *मार्टिन चौतारी* जसको लेखन–शिविरमा मैले यसलाई पहिलोपल्ट लिपिबद्ध गर्न थालेँ। ज्योति अधिकारी जसले लामा पदयात्राहरूमा मेरो टस बसाए ।

र, द्वन्द्व भोग्ने नागरिकहरू जसले मलाई यो कथा बुन्न प्रेरित गरे ।

*नारायण*

# पल्पसा क्याफे

'कफीगफी वाग्ले,' वीरेन्द्र अन्तर्राष्ट्रिय सम्मेलन केन्द्रभित्र मेरो सिटछेउ माथि बरन्डाको भरिभराउ दर्शक-समूहबाट एउटा चरारूपी कागज उड्दै आयो, जसमा लेखिएको थियो- 'तिम्रो उपन्यास कहिले आउँछ ?'

गायक दीप श्रेष्ठको एकल सन्ध्या सुरु हुन आँट्दै थियो। पर्दा खुल्न बाँकी थियो। बत्ती निभ्नुअघि मैले त्यो चिट पढेँ र वरिपरि साथीहरूलाई देखाएँ। उनीहरू हाँसे। दुई घण्टा लामो कार्यक्रममा दीपले अर्केस्ट्राको लैबरीसँगै कैयन् नयाँ-पुराना गीत गाए। उनले *म त दूरदेखि आएँ* ... गाइरहेका बेला त्यो चिट फेरि पढेँ धमिलो प्रकाशमा।

बरन्डातिर टाउको घुमाएँ तर त्यो हूलमूलमा मान्छे चिन्न सकिन्थेन। कोही हात हल्लाउँदै मतिर हाँसेजस्तो लाग्यो। गायक गाउँदै थिए- *साइँलीबरी चियाबारीमा* ...।

मैले *कान्तिपुर*मा आफ्नो साप्ताहिक स्तम्भ *कफीगफ* रोकेको थिएँ ताकि थालिएको उपन्यास टुङ्गियोस्। 'एडिटर भइसकेपछि केको उपन्यास लेख्नु नि अब !' कसैले भन्यो।

'पत्रकारले नन-फिक्सन पो लेख्नुपर्छ,' अर्को कसैले मलाई हपारेको स्वरमा भन्यो।

समाचारको माचोमा मैले थालेको उपन्यास बिथोल्न देशको समय तीव्र हुन थाल्यो। यसबीच मेरो प्रमुख पात्र र राष्ट्रको जीवनमा अकल्पनीय घटनाक्रम अपरिहार्य बन्दै गयो। यो आख्यान र रचना-समयबीचको सम्बन्ध कम्ती नाटकीय छैन। हामी आफैँ त्यस्तो समय भोग्दै छौँ जहाँ वास्तविकता र कल्पना अनि भ्रम र सच्चाइबीचको दूरी क्रमशः मेटिँदै गएको छ।

हिउँदे झरीले पखालेको काठमाण्डूमा मैले नापिरहेको सडक ठमेलतिर लाग्यो । 'हिउँ परेजस्तो छ' भनेर युवकहरू मोटरसाइकलमा नगरकोटतिर हुर्रिरहेका थिए । कारहरूको लाइन पनि भक्तपुरतिर तेर्सिएको थियो । काठमाण्डूको चिसोमा माटोको गन्ध बेग्लै थियो । आकाश सफा भयो भने रुफटप रेस्टुरेन्टबाट ताजा हिउँ देख्न सकिएला ।

भऱ्याङको टुप्पामा ट्रेबाट एउटा हात झिकेर एक जना वेटरले भन्यो- 'अस्ति मैले तपाईंको फोटो देखेको थिएँ ।'

म रोकिएँ, उसले थप्यो- 'फोटोमा तपाईं धूवाँ उडाउँदै लेखिरहनुभएको थियो ।'

हो त के गर्छौ ? म बन्दुकबाट धूवाँ फालिरहेको त छैन नि !

छेउबाट पास हुन खोज्दा उसको आवाज थपियो- 'यतै कुन रेस्टुरेन्टमा हो तपाईंले किताब लेखिरहेको ?'

'सरी है सर,' उसले म केही नबोली हिँडिरहेको देखेर भन्यो ।

'माथि टेबल खाली छ ?' मैले सोधेँ ।

गमलाको बाबियोछेउ टेबलबाट कफीपट अर्डर गरेर मैले साथीलाई फोन गरेँ ।

'म आउँदै छु ल,' दृश्यले झिजो मानेझैँ बल्लतल्ल मोबाइल उठाउँदै जवाफ दियो ।

म उससँग थप अन्तर्वार्ता गर्न चाहन्छु । उपन्यास टुङ्ग्याउनुअघि उसका बारेमा मैले अझ धेरै थाहा पाउनु छ । यो उसको कथा हो । यसमा उसको भूगोलको चित्र छ । उसको भोगाइ र कल्पनाको ध्वनि छ । ऊ चित्रकार भएकाले लेखनशैलीको उत्तिकै परख गर्छ । उसैले घचघच्याएको हो मलाई यो लेख्न । म एउटा चित्रकारको कहानीलाई अहिले फत्ते गर्दै छु । एउटा सम्बन्ध छ हामीबीच, चित्र र दर्शकको जस्तो । उसको कथा मैले कसरी लेखेको छु भने पाठकले यो मेरो आफ्नै जीवन हो भन्ने सोच्न सक्नेछन् ।

उसको एउटा योजना छ, कफीखेती गर्न पश्चिम पहाडको एउटा पाखालाई चक्लाबन्दी गर्ने । ऊ त्यहाँ कला र कफीको संयोजन गर्न चाहन्छ । त्यसैका लागि ऊ फेरि जाँदै छ र ऊ हिँड्नुअघि म उसलाई यो सुनाउने ध्याउन्नमा छु । पाखामा स्थानीय वास्तुकला र सामग्री प्रयोग गरी ऊ शिविर बनाउन चाहन्छ जहाँ कला ग्यालरी होस्, वैकल्पिक रुटका पदयात्रीहरू बस्ने होटल होस्, पुस्तकालय होस् । इन्टरनेटसहितको ग्यालरी क्याफे होस् जसको नाम उसले सुझाइसकेको छ– पल्पसा क्याफे ।

# *पल्पसा क्याफे*

पल्पसा क्याफे दृश्यको भविष्य हो जसलाई ऊ विचारमग्न कलापारखीहरूको गन्तव्य बनाउन चाहन्छ । ग्यालरी र पुस्तकालयको बायाँपट्टि घुमाउरो भऱ्याङ हुँदै पुगिने क्याफेबाट पारि भित्तामा होटल र त्यसभन्दा माथि हरियो पहाड र अझ त्यसभन्दा माथि मौसम सफा भएको बिहान धानचुली हिमाल देख्न सकियोस् । र त्यसमाथिको आकाशको निर्मल हावामा कावा खाँदै डुल्ने लामो यात्राका आप्रवासी चराहरू आकर्षित गर्ने बास्नाका लागि बाऱ्हैमास लहरीझुत्त फलफूलको बगैँचा होस् । पल्पसा क्याफेबाट हिमालफेदीसम्म चार दिन लामो पदयात्राको रुट पनि विकास गर्न खोज्दै छ ऊ ।

यस्तो रचनाका लागि के यो समय ठीक छ ? के ऊ यावत् प्रतिकूलता सामना गर्न खोज्दै छ ?

उसको यो खाकाबाट म कायल छु। यस्तो बेला ऊ त्यस्तो खाका कोर्दै छ जसलाई फिक्का पार्न देशले बन्दुक भिरेको छ । र ऊ बन्दुकविरुद्ध उभिन आँटिरहेको छ ।

कफीको पहिलो सुरुपसँगै अर्को टेबलबाट म्याउँ गर्दै बिरालो आइरहेको देखेँ । मैले धूवाँ उडाउँदै लेखिरहेको तस्बिरसहित यो उपन्यास-तयारीको खबर छाप्ने *नेपाल* म्यागेजिनमा मलाई मन पर्ने अर्को रेस्टुरेन्टको बिरालोबारेको प्रसङ्ग समावेश थियो । त्यस्तै बिरालो मतिर लम्किरहेको थियो । छेउमा कृत्रिम रूपले उमारिएका लालुपातेका बेर्नाहरू हुर्केर फुल्न थालेका थिए । त्यो बिरालो काखैमा आएर बस्यो, त्यो अर्को रेस्टुरेन्टमा झैँ ।

खै त, दृश्य आइपुगेन । एक कप सकिसकेपछि मैले फेरि उसलाई मोबाइल गरेँ । बिरालो लुसुक्क टेबलमुनि छिऱ्यो ।

'यहाँ पाँच जना साथीहरू आइपुग्नुभएको छ,' उसले जवाफ दियो- 'उहाँहरूसँग कुरा सकेर म आउँछु ।'

उसका अचम्मका 'साथीहरू' ! फोन राख्दै भन्यो- 'कफी लिँदै गर ।'

केहीबेरमा पत्ता लाग्दै थिए ती उसका 'साथी' होइनन् । बिरालो मेरो काखमा फर्क्यो । मैले कफी तानेको उसले स्वाद मानी हेरेको देखेँ ।

यसो बिरालो हेर्छु, कति शान्त र क्लान्त छ ! उसलाई हामी बाँचेको घटनापूर्ण समयको ख्याल छैन । आफ्नो जीवन निर्विघ्न व्यतीत गरिरहेको छ । यो भाग्यमानी

बिरालो हो किनभने यहाँ संसारका अनेकानेक कुनाबाट पर्यटक आउँछन् । पल्लो टेबलबाट एउटी पर्यटक मेरो काखको बिरालोको फोटो खिचिरहेकी छ । उसले आफ्नो फ्रेममा मलाई पारेकी छ कि छैन, थाहा छैन । तर म सतर्क भएको छु । बित्थैमा सतर्क हुनुपर्ने समय छ ।

कफीको अर्को सुरुप तान्दा मोबाइल बज्यो । बस लुटेर केही माओवादी बम पड्काईवरी जङ्गल फर्केछन् । धन्य कसैको ज्यान गएको छैन भनेर उसले फोन राख्नुअघि भन्यो- 'म यसको डिस्प्याच पठाउँदै छु, अलि ढिलो होला ।'

'किन ढिलो ?'

'आज पनि सदरमुकाम तनावग्रस्त छ अस्तिको लाठीचार्जदेखि,' उसले भन्यो- 'बिहान हवाई फायर भयो । विद्यार्थीहरू कलेजभित्रबाट ढुङ्गा हानिरहेका छन् ।'

'एउटा जाबो कम्प्युटर किनेर इमेलमा पठाउने गर्दैनौ !' मैले भनेँ- 'सधैँ फ्याक्स गर्न पीसीओकै भर पर्छौ ।'

'आफू चैँ अफिसबाट पेस्की मिलाइदिने होइन !' भनेर उसले फोन राखेपछि बिरालो मबाट पल्लो टेबल सर्‍यो ।

खै त, दृश्य आइपुगेन । कफी तानेँ । ऊ आउने छाँट भएन । उसको पल्पसा क्याफे !

त्यस क्याफेआसपासको गाउँ कस्तो होला ? पानीढलो ढुङ्गे छत भएका घरहरू । खोटो पोतिएका काला ढोकाहरू । कमेरो र गेरु लिपिएका भित्ताहरू । बाछिटाले हानेर कमेरो लतपतिसकेका भुइँहरू । एकबार ऊ मलाई त्यो गाउँ देखाउन लैजाला जहाँ उसको कल्पनाको क्याफे ठडिनेछ ।

फोन गरेँ, उठाउने स्वर अर्कै आयो ।

'लौ न दाइ,' कोही आत्तिएको थियो- 'उहाँलाई त लिएर गए ।'

'कहाँ ?' म हडबडाएँ ।

'अघि पाँच जना आएका थिए,' दृश्यकी सेक्रेटरी रहिछ, फुलन चौधरी । भनी- 'कुरा बुझ्नु छ भनेर लगे ।'

'हँ ?' मेरो हडबडाहट बढ्यो ।

'सुरक्षाकर्मी भनेर परिचय दिएका थिए तर युनिफर्ममा थिएनन्,' उसले भनी- 'उहाँले मोबाइल पनि लग्न पाउनुभएन ।'

'हो र ?' मेरो कानैछेउबाट स्याँठ चल्यो । उसका 'साथीहरू' ले अपहरण गरे त्यसो भए ।

'हो दाइ,अब के गर्ने होला?' ऊ भन्दै थिई-'जुत्ता पनि दुई थरी उनेर जानुभो।'

यतै तल कता हुनुपर्छ, चोकतिरको हूलमा दृश्यलाई पाँच जनाले घेरेर लगे। कसैले शङ्का गर्न नसक्ने गरी। ऊ अपहरित भयो। पछि थाहा भएअनुसार उसलाई केही पर पुऱ्याएर भ्यानमा हालियो। त्यो भ्यान अघि नै देखि त्यहीँ रोकिएको हुनुपर्छ। त्यो सादा भ्यान थियो। दुई थरी जुत्ता उनेर हिँडेको तन्नेरी, उदाइरहेको एक चित्रकार, त्यो मेरो साथी, जसलाई म पर्खिरहेको छु यहाँ उपन्यास पढ्न, जसको कथा मैले एउटा सिङ्गो क्यानभासमा उतारेको छु, उही अघि भर्खर अपहरित भएको छ।

म यता कफी पिउँदै उसको कफी र कलाको संयोजन-खाका सम्भिmरहेको छु।

एक जना जर्नेललाई फोनमा अनुरोध गरेँ। उनले 'यस्तो बेला' केही सहयोग गर्न नसकिने बताए। सुरक्षा निकायले बिनापुर्जी लिएर जानु सामान्य भइसकेको छ। सम्पर्क-सूत्र फेला पार्न अप्ठ्यारो थियो। प्रधानसेनापतिकहाँ फोन गर्दा बैठकमा व्यस्त भन्ने जवाफ पाएँ। 'प्रवक्तालाई सोध्नुहोस् न,' एक जना मेजरले भने। त्यो वेटर नआइदिए हुन्थ्यो, किचकिच गर्छ। तर मेरो के लाग्छ ? आएर मसँग लिपिक्क टाँसिन खोज्दै भन्यो- 'सरको अर्डर भयो ?'

'कस्तो अर्डर ?' म झर्किएँ।

फोन बज्यो। अर्को जिल्लाका समाचारदाताले गरेका रहेछन्।

'सरी दाइ,' उनले भने- 'एउटा समाचार टिपाउनु थियो। जिल्ला ब्युरोमा फोन उठेन।'

हत्तेरी, कलम झिकेर नेप्किनमा उनको समाचार टिप्न थालेँ। झरझर आइरहेको फोनमा उनी मलाई डिक्टेट गराउँदै गए- 'बिहान गस्तीमा गएको संयुक्त सुरक्षा फौज सदरमुकामदेखि आठ कोसपूर्व एउटा खोल्साको अँध्यारोमा माओवादीले थापेको विद्युतीय धरापमा परी सम्पर्कविहीन हुन पुगेको छ। ...'

यो कुनै नयाँ घटना होइन। हरेक दिन हामी यही छापिरहेका छौँ। त्यही कुरा भोलि पनि छाप्नुपर्नेछ जुन आज बिहानकै पत्रिकामा छ। अर्थात् त्यही। त्यही अर्थात् सुरक्षाकर्मी सम्पर्कविहीन, विद्युतीय धराप, बम विस्फोटन, सुराकीका नाममा सफाया, झाडापखाला, डोकामा स्वास्थ्यकेन्द्रतिर लैजाँदालैजाँदै मृत्यु। के हामी पत्रिकामा दैनिक नयाँ लास गनिरहेका छौँ ?

'भयो ?'

'अर्को समाचार पनि छ दाइ,' उनले भने । मैले अर्को नेप्किन उठाउँदै टिपेँ- 'हालैको अत्यधिक हिमपातपछि बढेको चिसोमा रुघाखोकी फैलिँदा जिल्लाको दक्षिणी भेगमा थप सात बालबालिकाको ज्यान गएको छ ।'

नेप्किन पट्ट्याएर खल्तीमा हाल्नुअघि आफूले लेखेका अक्षर हेरेँ । नीलो मसीवाल मेरो कलमले रातो अक्षर लेखेको छ । रङ्गले आफ्नो भाषा बदलेको छ । कफी चिसो भइसकेको थियो ।

'लोकतन्त्र आउँछ-आउँछ,' तल गल्लीमा रातो झन्डा बोकेर कुद्दै गरेका विद्यार्थीहरूको चर्को स्वर हावामा फैलिरहेको थियो । चोकमा प्रहरीले लाठीचार्ज गर्न थाले पनि आन्दोलनकारी तितरबितर नभएपछि हवाई फायर भएको खबर त्यही वेटरले केहीबेरमा ल्यायो । मैले टमाटर सुप र फ्रेन्च फ्राइज मगाएँ । तल अगाडिको पसलबाट घन्किरहेको तिब्बती धुन केही मलिनो सुनिन थाल्यो । हावा बढ्न थाल्यो । माझसडकमा खरी अक्षरले 'लोकतन्त्र नेपाल जिन्दावाद' लेखिएको विशाल आकृति । विद्यार्थीहरूको 'जनमत सङ्ग्रह' को नतिजा आयो जसमा अधिकांश मत 'लोकतान्त्रिक व्यवस्था' का पक्षमा गएको माइकले घोषणा गरेपछि सेता अक्षरमाथि जुत्ता कुल्चेर प्रहरीहरू क्याम्पस-हाता प्रवेश गरेका थिए । त्यसैको रन्कोमा तल जुलुस गइरहेको थियो ।

गमलाको फूल हल्लेका बेला फेरि दृश्यको सम्झना भयो । कहाँको गोप्य हिरासतमा लुकाइएको होला ? भिडन्तमा पऱ्यो भन्ने खबर आयो भने म आफैँ त्यसको शीर्षक राख्न बाध्य हुनेछु । त्यस्तो समाचार कति कोलममा छाप्नुपर्ला ? के फरक पर्छ जति कोलममा जसरी छापे पनि ? धत् ! तर उसलाई किन समातियो ? के उसको पहाड-यात्राबारे बुझ्नुपऱ्यो ? वा सिद्धार्थसँग सम्बन्धको सुराकी पाइयो ? वा यस्तो बेला उसले रचना गर्न लागेको कफी-पहाडबारे शङ्का लाग्यो ?

केही सुरुप तानेर मन शान्त गर्दा ठमेलको पर्यटकीय चिरबिरमा बिजुली बल्न थालेको थियो । काखबाट फुत्त टेबलमाथि बसेर बिरालो मैले पल्टाइरहेको नोटबुक हेर्न लाग्यो । उसका हरिया आँखाभित्र साथी अपहरित भएको वेदना लुकाएर आफ्नो मस्यौदा उपन्यास पल्टाउन थालेँ । के म देशको संविधान पढिरहेको छु ? अनुच्छेदपिच्छे मौलिक हकका धाराको झलक आउन थाल्यो ।

पालनकर्ताहरू आफैँले यी धारा गायब गरेपछि जगत्को यो खुला पानाबाट मेरो पात्र बेपत्ता हुन सम्भव भएको छ । संविधानका धाराझैँ अपहरित भएको दृश्यको यो खेस्रा कथा मात्र मेरा अघिल्तिर छ । के म आज उसको समाचार लेख्दै छु ? फुलनले सार्वजनिक अपिल जारी गर्न सक्नेछे । डेस्कका सहकर्मीहरूले भन्नेछन्, 'रिहा गर्न माग गरिएका अरू पनि अपिल छन् । सबैलाई जोडेर समाचार बनाइदिनुहोला ।'

अफिस फर्केर मैले आफ्नो प्रमुख पात्रसहितको समाचार कम्पाइल गर्नुपर्नेछ । र मेरो साथी अपहरित र बेपत्ता नामहरूको लामो सूचीमा आबद्ध हुनेछ ।

'दाइ,' फुलनले फेरि फोन गरी- 'तपाईं पनि होस गर्नुहोस् है ।'

'किन ?'

'ती मान्छेहरूले केही कागजपत्र र फोटो लगेका छन् ।'

'अनि ?'

उसले भनी- 'फोटोमा तपाईं पनि हुनुहुन्छ ।'



# १

एकाबिहानै सन्किनुको के अर्थ हुन्छ ?

झ्यालबाहिर एउटा छाया लस्याकलुसुक गरिरहेको छ। के म स्त्री-छाया छुट्ट्याउन सक्दिनँ ? होटल-साहुनीकी छोरी के मलाई जिस्क्याउन हिँडिरहेकी हो ? म आँखा मिच्दै छु, ऊ फर्किन्छे। हतारहतार फेरि उसको छाया बरन्डाको समुद्री मोहडातिर लस्किन्छ। मर्निङ वाक गर्दै हो ? हो भने उसलाई किन यही बरन्डामा मच्चिनुपर्‍यो ?

हातमा भुइँकटहर समातेकी जस्तो छ।

बरन्डामा निस्कन्छु। धत्तेरि ! हत्तपत्त भित्र पस्छु र रुमालले लाज ढाक्दै निस्कन्छु। समुद्री मोहडातर्फ। छालहरू निदाएछन्। रातभरि गर्जेर बिहान सुत्ने कस्तो अजिब परम्परा हो ? खै त त्यो केटी ? ऊ तल अग्लो रूखमा घोचो लगाएर नरिवल झार्न खोज्दै रहिछ। ए मोरी, के चाला हो ? बोलाउन मन लाग्छ- माथि आऊ। सँगै बसेर एउटै पाइपले त्यसको रस चुसौँला। धत्, सुन्ने होइन !

पत्रिका आइपुगेछ। लिएर बाथरुम पस्छु। कार्टुन हेर्दा कमोडमा बस्ने धन्दा छिटो सकिन्छ। कार्टुन भेटिएन या पेट मडार्ने खालको रहेनछ भने कम्प्युटर खोल्नुपर्ने हुन्छ। कसै न कसैले जोक पठाएकै हुन्छ। बानी भइसकेको छ, कमोडमा बस्दा पनि ल्यापटप राख्ने र जोक पढ्दै नित्यकर्म फत्ते गर्ने।

लुगा फेर्छु, पर्दामा त्यही छाया सट्ट सर्केको छ। यसले अति गरी। म ढोका खोल्छु, ऊ अर्को कोठामा पस्छे। ए बुझेँ, पल्लो कोठाको मान्छेले नरिवल अर्डर गरेको होला। तल्लो बरन्डाबाट फेरि सिगारको धूवाँ नाकै ठोस्न आइपुग्यो।

ल है म हिँडेँ भनेर साहुनीलाई भनेँ। उनकी छोरी फेरि रूख चढ्न खोज्दै थिई लामो घोचो लिएर। के म उसको तल गएर उभिऊँ ? भैहाल्यो, उसले पाइन्ट

लगाएकी छ । 'बाई !' रूखबाट नरिवल झरेकै क्षण उसले बोलेको सुन्छु । म चोकनेरि पुगिसकेको छु । त्यस जाबीलाई किन बाई फर्काइरहनुपऱ्यो ? बरन्डाको पश्चिमपट्टि एउटा पर्यटक कागजको चरा बनाएर तल आफ्नी प्रेमिकालाई ठुङ्न उडाइरहेको थियो ।

पुरानो गोआको एउटा ऐतिहासिक चर्च प्रवेश गर्न दर्शक-पङ्क्तिको पुछार बन्दा मैले पल्पसालाई ठिक्क आफ्ना अगाडि उभिएको देखेँ । दुवै हातले पछाडिबाट उसका आँखा छोपिदिएँ ।

'को हो ?' ऊ झस्किई । ऊभन्दा अगाडि उभिएका साथीहरूले मलाई हेरे अनि मुसुमुसु हाँसे ।

उसले दोहोऱ्याई- 'को हो ?'

मैले हात छाडिनँ । उसका कमला परेला मेरा औँलाले बलियो स्पर्श गरे । फूल थिचिरहेजस्तो लाग्यो ।

एउटी साथीले अगाडिबाट भनी- 'आफैँ चिन् ।'

मलाई होस थिएन, कति छिटो बत्तिएर उसका आँखा बन्द गर्न पुगेँ ।

'ए तपाईं पो !' उसले पछाडि फर्केर आँखा ठूला पार्दै भनी । अनि मलाई छातीमा हलुका मुक्का हानी ।

'केरला जानुभएन ?'

'देखिहाल्यौ,' मैले भनेँ ।

'अब नजाने ?'

'सोच्दै छु ।'

'ट्रेन कतिखेर छुट्छ ?'

'छुटिसक्यो ।'

'किन त्यसो गर्नुभा' ?'

'तिमीले गर्दा ।'

'मैले के गरेँ ?'

'केही गरिनौ ।'

'अनि ?'

'त्यही त,' मैले भनेँ- 'ट्रेन छुटिहाल्यो ।'

'त्यस्तो पनि हुन्छ ?'

'हुँदोरहेछ ।'

'कसरी ?'

'राति अबेरसम्म तिम्राबारे सोचिबसेँ,' मैले भनेँ । उसका साथीहरू झन् मुसुमुसु हाँस्दै खासखुस गर्न थाले ।

'बिहान ढिलो उठ्नुभयो ?'

'भर्खर उठेर हिँडेको ।'

'मनमौजी छ, हगि ?'

'मन त मौजी नै हुन्छ ।'

'म पो तपाईंबारे चित्र लेखूँ कि क्या हो ?' उसले भनी र 'बाई द वे' भन्दै आफ्ना साथीहरूको ध्यानाकर्षण गरी । परिचय आदान-प्रदान भयो । सबैसँग हात मिलाएँ । एउटीले भनी- 'यसलाई ठिक्क पार्ने साथी आज देखियो ।'

'कस्तो पार्ने ?' मैले सोधेँ ।

'जगल्ट्याएर ठीक पार्ने,' उसले भनी ।

'तपाईंहरू उसलाई बेठीक पार्दै हुनुहुन्थ्यो ?'

'हामीले कहाँ ?' उसले भनी- 'उसैले हामीलाई ठीक पार्थी ।'

अरूहरू हाँसे अनि उसले पल्पसालाई 'खुच्चिङ !' गरी । उनीहरू मलाई 'बेस्ट अफ लक' भन्दै अगाडि बढे ।

'युऽऽ ...,' पल्पसाले गाली गरी अनि मसँग भनी- 'अब म के गरूँ ?'

'डकुमेन्ट्री फिल्म बनाऊ,' मैले भनेँ ।

'तपाईंबारे ?'

'अनि के त ?' मैले भनेँ- 'म तिम्राबारे चित्र बनाउँछु ।'

'मेरो भाग्य हो ।'

'मेरा लागि त अवसर ।'

'म भाग्यमानी रहिछु ।'

'अनि म के अवसरवादी ?' मैले भनेँ ।

'म पनि भाग्यवादी त होइन,' उसले भनी ।

'हामी कुनै वादमा बाँधिनुपर्दैन,' मैले भनेँ- 'संयोग हो, हाम्रो भेट भयो ।'

'त्यसो भए हामी संयोगवादी !' उसले हाँसो गरी ।

'हाम्रो भेट संयोगान्त बनोस् !'

'किन त्यसो भन्नुभा' ?'

'झन्डै म केरला हिँडेको ।'

'के कहिल्यै हाम्रो भेट हुन्थेन र ?'

'गाऱ्हो थियो ।'

'किन ?'

'मैले हिजो राति तिम्रो टेलिफोन टिपेनछु,' मैले भनेँ ।

'म कस्ती हुस्सू !' उसले भनी- 'सरी है !'

'मैले पनि त मागिनँ नि ।'

'त्यसैले गर्दा ट्रेन छुटाउनुभएको त होइन नि ?'

'एक किसिमले हो ।'

'किन ?'

'राति म तिम्रो होटल खोज्दै धेरैबेर डुलेँ ।'

'मैले हामी बसेको होटल पनि भनिनँ, है !'

'मैले पनि त सोधिनँ ।'

'तपाईं पनि हुस्सू !'

'तिमीलाई भेटेपछि,' मैले भनेँ ।

'भन्नाले ?' लाइन सर्दै उसले सोधी ।

'तिमीलाई भेटेर होस हरायो,' मैले भनेँ ।

'कस्तो निर्मोही !' उसले फेरि लाइन सर्दै भनी ।

'के मैले मोहनी लगाएँ ?'

'छुटाउन खोज्दै हुनुहुन्छ,' उसले भनी ।

हामी चर्च पस्ने पङ्क्तिबाट अघि नै छुट्टिएर प्राङ्गणको एउटा बेन्चछेउ उभिरहेका रहेछौं । उसका साथीहरू भित्रबाट ह्वारह्वारी आए । सत्रौं शताब्दीको भव्य चर्च यथावत् उभिएको थियो, म मात्र चञ्चल भइरहेको थिएँ ।

'हामी काठमाण्डूमा भेटौँ,' उसले भनी ।

'के अब छुट्टिने ?'

'मैले त्यसो भनेँ ?' उसले भनी ।

'सरी है,' उसकी एउटी साथीले हस्तक्षेप गर्दै सोधी- 'तपाईंहरूको कुराकानी सकियो ?'

'भर्खर त सुरु भयो,' मैले भनेँ ।

सबै हाँसे । बेलुका साथीहरू छाडेर ऊ मकहाँ आई । म बिचमा सूर्यास्तका बेला आर्मचेयरमा आनन्दले बसेर वाइन पिइरहेको थिएँ । भेलले मिल्काएका माछा टिप्दै कागहरू उडिरहेका थिए । पानीमा रङ्ग छिटछिटो बदलिरहेको थियो । क्यानभासमा ब्रस दलेझैँ । मैले वाइनको घुट्को बढाएँ । हार्ड ड्रिङ्कतिर बढूँ कि भन्ने लाग्यो । किनभने म आज बढी नै मतमतिनुपर्नेछ ।

सूर्य डुबेपछि रेस्टुरेन्टबाट सङ्गीतको भोलुम चर्को भयो । बब मार्ली घन्कियो । 'गेट अप, स्ट्यान्ड अप, डन्ट गिभ अप द फाइट !' (उठ, उभिऊ र सङ्घर्ष नत्याग ।) अधिकारका लागि लड्न अश्वेतहरूको मनमा आगो झोस्ने बोल र जमैकाली लोकलय भएको गीत । ऊ पनि वाइन पिइरहेकी थिई । तर म किन प्रेममा फसेजस्तो भइरहेछु ? के मैले उसलाई प्रेमको जाल बिछ्याउन जरुरी छ ? म बेवकुफ हुँ ? ऊसँग किन समर्पित हुन खोजिरहेको छु ? धत् लाटा ! मैले आफैँलाई चिमोटेँ र त्यो हात थपक्क तिघ्रामा राखेँ ।

बिहान उठ र उदाइरहेको सूर्यसँग मुस्कुराऊ भन्दै स्वतन्त्र चरा र सङ्गीतको प्रशंसा गर्ने मार्लीको अर्को गीतले श्रोतालाई त्यसरी नै उचाल्दै थियो । इतिहास थाहा छैन भने तिमी कहाँबाट आयौ के पत्तो भन्ने शब्द भएको 'बफलो सोल्जर' बज्न थाल्यो, बाँच्नका लागि जुध्ध भनेर तताउँदै ।

सुरुको गीत दोहोरिएको थियो- उठ, उठ भन्ने । 'जीवन तिम्रो हक हो, हकका लागि गर सङ्घर्ष !'

ऊ नरिवल-रूखको छायामा ओझेल परी । उसको कपालको बास्ना आइरह्यो । म पछुताइरहेँ । म ऊसँग कुनै औपचारिकता पूरा नगरी छुट्टिएको थिएँ । उसले केही भनिन, मैले पनि हेक्कै राखिनँ । कहिलेकाहीँ माहौल र मुड त्यस्तै हुन्छ । ड्रिङ्क लिएको साँझ ठेगानमा हुँदैन । यस्तो ठाउँमा जहाँ आफ्नो परिचय हराएर पर्यटक भइएको हुन्छ । के अब हाम्रो भेट गोआमा हुँदैन ?

होटलको बरन्डामा पूर्व-पश्चिम डुलिरहेँ । तल्लो बरन्डाबाट सिगारको धूवाँ पुतपुत्याउनेलाई गएर झापड हानेँ भने के होला ? खै, त्यो होटल-साहुनीकी छोरी देखिए पनि सन्तोष हुन्थ्यो । रूखतिर हेरेँ । कोही घोचो लिएर नरिवल झारिरहेको छ कि ? के हावा बढ्न थालेको हो ? पातहरू फिरफिर थिए । छालको गति र आवाज बढ्न थालेको थियो । पल्लो चोकछेउबाट चर्को सङ्गीत बज्यो ।

इमेल चेक गर्छु, कसले हो तीनटा पठाउन भ्याइसकेछ । च्याटमा आइज भन्न पनि मन लागेन । ल हेर, अर्को इमेलमा फेरि भद्दा ननभेज जोकहरू डाउनलोड गरेर कुनै पटमूर्खले मतिर ठेलेछ ।



# २

हिजै त हो मैले उसलाई भेटेको ।

सेतो भित्तामा नरिवल-रूखको छाया बसेको थियो । म त्यसमा अडेस लाग्दै बिटल्सका गीत सुनिरहेको थिएँ । केहीबेर ल्यापटपलाई आराम दिएँ । स्थानीय तन्नेरीहरूको साङ्गीतिक मण्डलीले क्रिसमसको पूर्वसन्ध्यामा कोकोनट बार एन्ड पाइनापल रेस्टुरेन्ट गुलजार पारिरहेको थियो ।

पोर्चुगाली वास्तुकलायुक्त रेस्टुरेन्टको पिँढी र बगैंचाभरि कुर्ची कतै खाली थिएन । एउटा टेबल मैले एक्लै ओगटेको थिएँ, एउटा खाली कुर्चीमा मस्तले खुट्टा राख्दै । भर्खर मैले छिरिङलाई इमेल पठाएको थिएँ– म आज कसैलाई पट्टयाउँदै छु भनेर । उसले तत्काल जवाफी प्रश्न दाखिल गरेको थियो- 'त्यो अभागी केटी को हुनेछ ?' उसलाई राति च्याटमा आउन निम्ता दिएँ ।

वाइन ग्लास उठाउँदा मैले आफूतिर कोही लम्किरहेको आभास पाएँ । रूखको छाया जूनले अलक्क कोरेको भित्तामा थप आकार दिँदै ऊ आइरहेकी थिई ।

ओठमुनि रौँ पालेको ठिटौले वेटर फेरि मेरो टेबलछेउबाट हिँड्यो । ऊ घरीघरी मेरो कम्प्युटर हेर्न आइरहन्थ्यो र मुसुक्क हाँस्थ्यो । म वास्ता गर्थिनँ । बेसोमती ! म के जतिखेर पनि नग्न दृश्यहरूको ठेगाना पुगिरहन्थेँ र ?

केटी नजिक आएपछि म झस्किएँ– किन ऊ मेरै टेबलतिर लम्किएकी हो ?

'एक्सक्युज मी,' ऊ हात हल्लाउँदै मसामु उभिई- 'यहाँबाट एउटा कुर्ची लैजान सक्छु ?'

गोआमा त्यो मेरो अन्तिम साँझ थियो ।

नयाँ वर्षका लागि म केरला जाँदै थिएँ । रविशङ्करसँग सितार सिकेर जर्ज ह्यारिसनले 'नर्वेजियन उड्स ...' मा पूर्व र पश्चिमको सुमधुर मिश्रण गर्दै

सङ्गीत दिएको गीत रेस्टुरेन्टको कुनापट्टिबाट गायक मेरो फर्माइसमा गाइरहेको थियो । वेटरले अर्को ग्लास फेनी थपिदियो । समुद्री सूर्यास्त पोतिएको सेतो टी-सर्ट र नीलो जिन्स पाइन्टमा ऊ लामो कपाल फरफराउँदै सानो भेलझैँ आएकी थिई । सुक्खा बालुवामाथि दिनभरि मैले धेरैपटक पैताला भिजाएको थिएँ अन्जुना बिचमा ।

उसको बोली झर्नुअघि कानबाट लतक्क लामा मुन्द्री पहेँलै टल्किए ।

'कुर्ची दिइनँ भने ?' मैले उसको परीक्षा लिन खोजेँ । अनि उसका आँखा नियालेँ । यो केटी ठीक छ । अब यसैलाई पट्टयाउनुपर्छ ।

ऊ अकमक्क परी । ठिङ्ग उभिई । आँखीभौँ उचाली । टम्म मिलेका बाक्ला काला रौँ थिए । आँखा लाम्चा, ठूला र सफा थिए, धेरै सपना देख्नेजस्ता ।

'सरी !' उसले नबुझेको स्वाङ गर्दै आफ्नो अप्ठ्यारो लुकाउन खोजी ।

म के कम ? नसुनेको भान पार्दै काखको कम्प्युटर टेबलको कुनापट्टि थन्क्याएर फेनीको ग्लास तानेँ । माछाको झोल तरकारी र बटुकामा भात आइपुगेको रहेछ । गोर्खालीलाई जहाँ गए पनि भातै चाहिने ! हातैले खाइदिऊँ ? भैहाल्यो । ऊ त्यत्तिकै उभिरहेकी थिई, मेरो जवाफ पर्खेर । औँलाले च्यापिरहेको काँटा बटुकातिर लम्काउन आँटेजस्तो गर्दै मैले भनेँ- 'तिमीलाई भुलाएकामा म क्षमा चाहन्छु ।'

'अब लैजाऊँ ?' निहुरिएर दायाँ हातले कुर्ची समाउन खोज्दै उसले भनी । निहुरिँदा उसको सलक्क परेको शरीरले मलाई विशेष प्रभाव पार्‍यो ।

'तिमी यहीँ बस्न सक्छ्यौ,' मैले भनेँ ।

'सरी,' उसले भनी- 'मैले टेबल सेयर गर्न खोजेकी होइन ।'

उसको स्वर पनि मादक रहेछ । बाक्लो तर मह घोलेझैँ । यस्तो अवसर कुन मूर्खले गुमाउँछ ? मैले फेरि उसका आँखा हेरेँ । गुलियो पसेको भुइँकटहर भर्खर ताछेजस्तो लाग्यो ।

'यहाँबाट त्यो गायकलाई राम्ररी देखिन्छ,' मैले फर्माएँ ।

'उताबाट राम्रो सुनिन्छ,' उसले भनी । टाठी पनि रहिछ, तत्काल छुरीले प्रश्न काट्न सक्ने ।

'के म तिम्रो टेबल ज्वइन गर्न सक्छु ?' मैले सोधेँ ।

'हाम्रो टेबलमा अहिले नै भीड छ,' उसले भनी ।

'म तिमीसँग कुरा गर्न चाहन्छु,' म लत्तो किन छाड्थेँ ?

'म व्यस्त छु,' उसले ठाडै भनी ।

'मसँग कारण छ,' मैले भनेँ ।

'नौलो मान्छेसँग के कारण हुन्छ ?'

'तिमीलाई लाग्छ म नौलो हुँ ?' मैले भनेँ ।

'पहिलोपटक भेट्दै छु,' उसले भनी ।

'तिमीले केही घण्टाअघि मलाई भेटिसकेकी छ्यौ,' मैले फ्याट्ट भनेँ । अनि उसका आँखा हेरेँ । ताछेर प्लेटमा राखिएको भुइँकटहर सम्झिएँ ।

'म त्यति हुस्सू छैन,' उसले भनी ।

'तिमी अन्जुना बिचमा के पढ्दै थियौ ?'

'त्यो त चित्रपुस्तक हो ।'

'त्यही त,' मैले भनेँ- 'म तिमीलाई त्यही सम्झाइरहेको छु ।'

'किन ?'

'म त्यसको लेखक हुँ,' मैले भनेँ ।

'कहीँ नपाएर होस् !'

'विश्वास लाग्दैन ?'

'किताबमा लेखकको फोटो छैन ।'

'नाम त होला,' मैले भनेँ ।

'तर त्यसको लेखक नेपाली हो,' उसले भनी ।

'म विदेशीजस्तो लाग्यो ?' मैले पहिलोपटक नेपाली बोलेँ ।

ऊ झस्किई । मैले उसको शरीरमा परेको झट्का प्रत्यक्ष अनुभव गरेँ । ऊ अलिकति पर सरी । उसका जुत्ता तत्काल स्थिर भए । आँखा उचालेँ ताकि बदलिएको मनस्थितिमा उसका आँखा हेर्न म पाऊँ । भुइँकटहरको रस चुहिएजस्तो भयो । रस चुस्न मौरी भुनभुनाएजस्तो भइरहेका थिए मेरा आँखा ।

'बाफरे !' ऊ छक्क परेको अनुहारमा मलाई गहिरिएर हेर्न थाली । उसले मेरा आँखा, आँखीभौँ र चिउँडोतिर बढी ध्यान दिई । सके आँखीभौँ र चिउँडोमा व्यक्तिको आकृति ठम्याउन सजिलो हुन्छ ।

'अब त बस्छ्यौ कि प्लिज ?' मैले भनेँ- 'म त्यो किताबबारे तिम्रो प्रतिक्रिया चाहन्छु ।'

लैजान खोजेको कुर्चीमै ऊ आज्ञाकारी विद्यार्थीझैँ अलक्क बसी । अनि दुई हात जोरेर 'नमस्कार' गरी । मैले हात लम्काएर ह्यान्डसेक गरेँ । उसको हात नरम तर नसा नर्भस थिए । सुन्तला-ओठका केस्रा सर्किए । उसको छाया सेतो भित्तामा देखियो । त्यो छाया कामुक लाग्यो । कालो छाया लरक्क परेर समुद्री छालझैँ गितारको ध्वनिसँगै सलबलाइरहेको थियो । पेन्सिलले कागजमा कोरेजस्तो चित्र बनेको थियो त्यहाँ । म त्यो हेरिरहेँ । त्यो उत्तेजक छाया हावाको सर्कोझैँ अलिअलि चल्थ्यो । मैले ठानेँ– यतिखेर केटी मलाई गहिरिएर हेर्न पाइरहेकी छ । के म ह्यान्डसम छैन ?

'मेरो नाम पल्पसा,' उसले भनी । अनि आफूलाई रोकी ।

'हाई,' मैले भनेँ अनि ऊतिर हात बढाएँ फेरि ।

'म स्टेट्समा ग्र्याजुएसन गरेर फर्केकी,' उसले भनी- 'डकुमेन्ट्री फिल्ममेकर बन्न चाहन्छु ।'

'भेटेर खुसी लाग्यो,' मैले भनेँ- 'हाम्रो क्षेत्र लगभग एउटै हो । चित्र बनाउने र खिच्ने दुवै कला हो । अभिव्यक्त गर्ने माध्यम मात्र बेग्लै ।'

'म तपाईंलाई मेरा साथीहरूसँग परिचय गराउँछु,' ऊ उभिन आँटी ।

'कृपया, म यहाँ अरूसँग परिचित हुन चाहन्नँ ।'

'मलाई त आफैँ चिनाउनुभयो नि ?' उसले फेरि टुसुक्क बस्दै भनी ।

'तिमी फरक लाग्यौ,' मैले भनेँ ।

'तपाईंका चित्र सरल छन् र शैली मीठो छ,' उसले भनी ।

'म तिमीबाट प्रभावित भएँ,' मैले भनेँ- 'अमेरिकाबाट फर्केकी केटी बिचमा स्विमसुट पहिरेर नेपाली चित्रकलाको मनोरञ्जन लिइरहेको भेट्दा लेखकलाई कस्तो होला !'

'कस्तो भयो तपाईंलाई ?'

'व्यक्त गर्न सकिरहेको छैन,' मैले भनेँ । मनमा लागेको गोप्य भावना म किन उसलाई प्रकट गरिरहने ?

'यो मेरो पहिलो अनुभव हो,' उसले भनी ।

'कस्तो अनुभव ?'

'मैले यसअघि आफूले पढेको लेखक भेटेकी थिइनँ,' उसले भनी। कसरी भेट्थी त जब म नै पहिलोपटक उसलाई दर्शनभेट दिइरहेको छु भने ?

'किताब पढ्दा लेखक कस्तो होला भन्ने कल्पना हुन्छ ?' मैले सोधेँ।

'चित्रपिच्छे विवरण र व्याख्यासँगै चित्रकारबारे कौतूहल बढ्दै जान्छ,' उसले भनी।

'यो चित्रकार कस्तो होला भन्ने सोचेकी थियौ ?' मैले फेरि सोधेँ।

'अधबैंसे, टोप लगाउने, पाइप तान्ने, गितार लिएर हिँड्ने, हावासँगै गुनगुनाइरहने ... !'

'रोमान्टिक ?'

'भेट्दा पनि त्यस्तै लाग्यो,' उसले भनी- 'तर तपाईं युवक देखिनुहुन्छ।'

'खासचाहिँ बूढो ?' मैले फेरि गफ तन्काएँ। त्यो मोरो वेटर कस्तो झिजो लगाउँदोरहेछ, पटक-पटक आइरहेछ ! उसको ओठमुनिको रौं उखेलिदिऊँ ?

'मैले त्यसो भनेँ ?' ऊ हाँसिई- 'तपाईं तन्नेरी हुनुहुन्छ तर पेन्टिङ परिपक्व छ।'

'धन्यवाद,' मैले भनेँ- 'यो म पहिलोपटक सुन्दै छु।'

'मलाई फुर्क्याउनुभएको ?'

'बरु तिमीले मलाई फुर्क्यायौ,' मैले भनेँ।

'तपाईं फुर्किनेजस्तो त लागेन।'

'चित्रकार-लेखकहरू फुर्के हुन्छन्,' मैले भनेँ- 'कम्तीमा तिमीजस्ता पाठक भेटेपछि !'

'म एक साधारण पाठक हुँ, साथीहरू भन्छन् एकोहोरी,' उसले भनी- 'सामान्य रुचि र सरल जीवनमा रमाउने।'

'म पहिलोपटक कसैलाई कोट्ट्याएर आफ्नो परिचय दिँदै छु,' मैले भनेँ। आफू विशिष्ट देखिनुपरेन ? म आफ्नो समय स्याउझैँ काटेर टक्र्याइरहेछु।

'कहिलेकाहीँ सोच्छु म किन भिक्षुणी बनिनँ ?' उसले भनी- 'कुनै दिन म गुम्बामा पस्न सक्छु।'

'तिमीले सक्रिय जीवन रोजेकै बेस,' मैले भनेँ। उसलाई तातो लगाउनु थियो। उसको तृष्णा जगाउन मैले आगो झोस्नैपर्थ्यो।

'म ज्ञान चाहन्छु,' उसले भनी- 'आफूलाई परीक्षण गर्ने रहर छ। डकुमेन्ट्री फिल्मले सन्तोष दिएन भने म आनी बनेर आफूलाई बुझ्न प्रयत्न गर्नेछु। कुनै विषयको खोजी नै सक्रिय जीवन होइन र ?'

'यस्तो पहिलो व्यक्ति भेट्दै छु जो भिक्षुणी बन्ने सपना पालिरहेछ,' मैले भनेँ ताकि ऊ यस्तो फाल्तु कुरा गर्न बन्द गरोस् ।

'तपाईंका पेन्टिङबाट म प्रभावित छु ।'

'मेरा पेन्टिङमा त्यस्तो के छ र ?' मैले फेरि सोधिटोपलेँ ।

'त्यसमा धेरै कुरा छ, विषयवस्तु, पृष्ठभूमि र पात्रका आकाङ्क्षालाई अभिव्यक्त गर्ने रेखा र रङ्गमा मीठो ध्वनि छ,' उसले भनी- 'पात्रहरू कसरी सोच्नुहुन्छ वा खोज्नुहुन्छ ?'

'ई अहिले तिमीलाई भेटेँ नि !'

'नाइँ बा,' उसले जिब्रो टोक्न खोजी- 'म त पेन्टिङको पात्र नबन्ने !'

'कसले भन्यो तिमीलाई पात्र बनाउँछ भनेर ?' मैले भनेँ ।

'त्यस्सै सोचेको !'

'छोटो भेटमै तिमीले जुन प्रभाव पारेकी छयौ, त्यसले एउटा पात्र रचना गर्न मदत गर्छ,' मैले भनेँ ।

'नसकिने रहेछ ।'

'के ?'

'चित्रकारहरूसँग बोलेर ।'

'खै कति जना चित्रकार छन् यहाँ ?'

'मैले भन्न खोजेको चित्रकार,' ऊ तन्किई र जीउ खुकुलो पारी । बल्ल उसले विश्राम लिएजस्तो लाग्यो । उसका औँला चुलबुल छन्, पाखुरा कमला छन् र पिँडौला गिलो माटोझैँ चलाइरहन मन लाग्ने ।

रेस्टुरेन्टको कुनाबाट गायकले बिटल्सका थुप्रै गीत गाइसकेको थियो । मैले एकै चोटि दुइटा गीत नेप्किनमा लेखेर पठाएको थिएँ । 'स्ट्रबेरी फिल्ड्स फरेभर ...' आउन बाँकी थियो । रात घर्किरहेको थियो, नजिकको समुद्रको छिनछिनको छालको आवाजमा । मध्यरातसम्म त टुङ्गिएला । भोलि मध्याह्नतिर रेलवे स्टेसन पुगे भैहाल्थ्यो । गितारको लय मेरो रोजाइको शीर्षक झल्काउने खालले सुनियो । त्यसबीच मैले खाना सकेँ ।

'तिमीलाई ढिलो त भएन ?' मैले सोधेँ ।

'साथीहरू आँखा ठूला पार्दै छन्,' उसले टाढाको टेबल हेर्दै भनी ।

'कति दिन बस्छ्यौ गोआ ?'

'अब केही दिन,' उसले भनी- 'तपाईं नि ?'

'म त भोलि जाँदै छु,' मैले भनें- 'केरलातिर ।'

'ओह,' उसले आँखा सर्काई- 'चित्रकार-लेखकहरूलाई यही स्वतन्त्रता छ, हगि ?'

'आफू स्वतन्त्र नहुनेले के स्वतन्त्रताको अभिव्यक्ति दिने नि !'

'अर्को किताबको तयारी गर्दै हुनुहुन्छ ? वा कुनै पेन्टिङ शृङ्खला ?'

'तयारी गर्दिनँ,' मैले भनें- 'घुम्छु, डुल्छु, पढ्छु, मान्छे भेट्छु । ऊर्जा दिने प्रेरणा भेटेँ भने कूची चलाउन थाल्छु ।'

'त्यही भएर तपाईंका चित्रमा स्वच्छन्दता छ ।'

'कति पेज पढ्यौ ?'

'कतिपल्ट दोहोर्‍याएँ सम्झना छैन ।'

'दोहोर्‍याएँ !' मैले छक्क पर्दै सोधेँ ।

'किनभने यो किताबको धीत मर्दैन,' उसले भनी- 'म आठ-दशवटा किताब बोकेर हिँडेकी मान्छे, नयाँ थाल्नुअघि यही पल्टाउन मन लाग्छ ।'

'म फेन्ट हुन बेर छैन,' मैले भनें ।

'अर्को किताब पनि यस्तै लेख्नुहोस्, है ?'

'यस्तो भन्नाले ?'

'यो किताबका चित्रहरू पाठकसँग सोझै सम्बन्ध राख्छन्,' उसले भनी- 'त्यो झरी शीर्षकको चित्रको केटी-आकार मजस्तै लाग्छ, जति हेर्दै गयो, आफैँलाई बुझ्दै गएजस्तो, मेरो भावना र आकाङ्क्षाको प्रतिनिधित्व गरेको छ त्यसले ।'

मैले थप जिज्ञासु अनुहार बनाएँ ।

'सबै पाठकलाई त्यस्तो लाग्ला तर मलाई बढी नै प्रभाव परेको छ त्यसको,' उसले भनी ।

'ए !'

'फोटोग्राफीका प्राविधिक सीमा हुन्छन्, पेन्टिङ आफैँ सम्पूर्णतः रचना हुन्छ,' उसले भनी- 'पेन्टिङ हेर्दा दर्शकले कल्पना गर्दै आनन्दको अनुभूति पाउन सक्छ, फोटोमा भन्दा बढी र त्यसको गहिराइ दर्शकका आँखामा भर पर्छ ।'

'हो,' मैले भनें- 'तिमीजस्ता पाठक भेट्दा झन्झन् उत्साहित हुन्छु म ।'

'तपाईंलाई भेटेर मलाई पनि प्रेरणा मिलेको छ,' उसले भनी ।

'तिमी राम्रो फिल्ममेकर हुन सक्छ्यौ,' मैले भनें- 'तिमीलाई कलामा रस रहेछ ।'

'मलाई ढाडस दिने मान्छे भेटेँ आज,' उसले भनी- 'परिवार र साथीहरू त मलाई बुझ्दैनन् । उनीहरू म बिहे गरेर अमेरिकामै काम गरूँ भन्ने चाहन्छन् ।'

'यस्तो निर्णय तिमी आफैँले लिनुपर्छ ।'

'सोच्दै छु ।'

'सिर्जनात्मक काम गर्छ्यौ भने पूर्वमै बस,' मैले भनें- 'पश्चिममा त कथाको खडेरी छ । प्राविधिक समुन्नति छ उता, यता धेरै मानवीय, सामाजिक, सांस्कृतिक, प्राकृतिक सङ्कट र समाधानको सम्भावनाबीच दूरी छ ।'

'त्यसमै कथाहरू छन् भन्न खोज्नुभएको ?'

'हो ।'

'तपाईंसँग मेरो धारणा मिल्छ,' उसले भनी- 'के हामी काठमाण्डूमा भेट्न सक्छौँ ?'

'मलाई थाहा छैन म कहिले नेपाल फर्किन्छु,' मैले भनें ।

'तपाईंको सम्पर्क ?'

'डुलिहिँड्ने मान्छे,' मैले छल गरेँ- 'कतै पनि स्थायी रूपले बस्दिनँ ।'

'पाठकहरूको हृदयमा मात्र ?' उसले हाँसो गरी ।

त्यही बेला पल्पसासँग सीधा ठोक्किने गरी एउटा केटो आइपुग्यो, नेपाली नै रहेछ । ऊ केही रिसाएको अभिनय गर्दै थियो वा उसको त्यस्तै अनुहार हो, मैले खुट्ट्याइनँ । आउनासाथ पल्पसाको हात समातेर उठायो र आफ्नो टेबलतिर लग्न खोज्यो । उसले मसँग परिचय गराउन खोजी तर म एक्कासि रन्थनिनुपरेकाले त्यसबीच के भयो सम्झिन सक्दिनँ । ऊ हिँडी । म किन दोब्रिने ? अहिल्यै छिनोफानो गर्छु भनेर उनीहरूको टेबलतिर गएँ तर रेस्टुरेन्टबाट एकै चोटि निस्कन खोजेजस्तो भएछ । 'स्ट्रबेरी फिल्ड्स ...' आइरहेका बेला म उनीहरूको पछिपछि लागेँ ।

हामी हिँड्दा मध्यरात टरिसकेको थियो । बत्ती झुन्डिएको नरिवलको अग्लो रूखको चोक पुगेर छुट्टिनुपर्‍यो । उसले अन्त्यमा मलाई 'केरलाको शुभयात्रा' भनी । मैले ऊसँग हात मिलाउँदै भनें- 'तिमीलाई भेटेर म आज चित्रकार हुनुको गर्व गरिरहेछु ।'

उसका साथीहरू अलि पर थिए । तिनलाई मैले वास्ता गरिनँ, विशेष गरी त्यस केटालाई जसले मेरो कल्पना भङ्ग गरेको थियो ।

बाटाभरि मैले उसको कपालको बास्ना पाइरहें । फुर्रफुर उड्ने कपाल, प्रभाव पारिहाल्ने आँखा, सुलुत्त बगेजस्तो शरीर र चित्त चोर्ने बोली उसका विशेषता लागे । होटल पुग्दासम्म मैले केही देखिनँ । ऊसँग छुट्टिएको थिएँ तर किन छुट्टिएँ भनेर आफैँलाई सराप्न मन लाग्यो । हात मिलाएपछि उसले मात्र चाल पाउने गरी मैले उसलाई छोएको थिएँ । कम्प्युटर खोल्न मन लागेन किनभने छिरिङले च्याटमा सोध्न सक्नेछ 'कसलाई फसाइस् ?' भनेर ।

झ्यालबाट समुद्र हेरेँ । तल्लो बरन्डामा एक जोडी पर्यटकको आकार गुजुल्टिएको थियो, समुद्र हेर्दै । टाढा हेरिरहेँ, छालको आवाज बढिरहेको थियो । तल्लो बरन्डामा कुनै पर्यटकले सिगार तानेको बाक्लो गन्ध आयो । समुद्रभरि जहाजहरूको प्रकाश आकाशका ताराझैँ टल्किएको थियो । आफैँलाई सम्झाएर कोठाको ढोका खोलेँ– भोलि संसार बिउँझँदा मेरो आजको असफलता मेटियोस् ।



# ३

प्रिय लेखक

सुमधुर सम्झना ।

'लेखक' भनेँ किनभने म यही जान्दछु । 'चित्रकार' पनि भन्न सक्छु त्यति बेला जब म तपाईंको ग्यालरी भ्रमण गर्नेछु । चित्रकारको ग्यालरी त पक्कै होला । किताबमा कतै सानो अक्षरमा त्यसको ठेगाना हुनुपर्छ तर त्यस ग्यालरीलाई म काल्पनिक बनाउन चाहन्छु । त्यसको आनन्द बढी हुन्छ । तपाईं कल्पनाको लोकबाट आएको व्यक्ति हो भन्ने सोच्नु मेरा लागि आनन्ददायी छ । बादलपारिको कुनै पहाडमा त छैन तपाईंको ग्यालरी ? यी चित्रले त्यस्तै सङ्केत गर्छन् । काठमाण्डूको कोलाहलमा यति शान्त र सुन्दर रचनाको सिलसिला कसरी सम्भव होला ? म जान्न उत्सुक छु । हो भने तपाईं पक्का रचनाकार हो जो काठमाण्डू खाल्डोमा बसेर रमणीय पहाडको ठाँट ल्याउन सक्छ । तपाईंका चित्रको विशेषता पहाड हो । भलै चित्रमा पहाडहरू देखिँदैनन् । पहाडको छनक र छाँट मात्र आउँछ। रङ्गले पहाडी रेखालाई लुकाउँछ तर हाम्रा आँखा रङ्गको तुवाँलोभित्रका आकृति ठम्याउन हतार गर्छन् । ती आकृतिमा दैव बास गरेजस्तो लाग्छ । पहाड तपाईंका चित्रको स्थायी निवास हो, त्यसैले तपाईंका चित्रहरू दैवी हातले बुनेजस्तो म अनुभव गर्छु । दैव छैन तर रचनाकारहरू मलाई दैव लाग्छन् । दैव आफैँ रचनाकारको वेश र भाषामा यता पृथ्वीमा ओर्लिने त गर्दैन ?

सबैभन्दा पहिला म तपाईंसँग क्षमा माग्छु । तपाईंले भेट्ने भनेको ठाउँमा म यो चिठी छाडेर जाँदै छु । तपाईंले भेट्ने कबोल गराएको टेबलमा मेरो साटो यो चिठी पाउँदा तपाईंमा के गुज्रेला, म त्यो कल्पना गर्न सक्छु । तपाईंले मलाई रङ्गहरू दिनुभएको छ । म अनेक भावनामा रङमडिएकी छु । तपाईंको आकृति

ठम्याउन सकिरहेकी छैन । म विवश छु । म तपाईंलाई भेट्न किन असमर्थ भएँ भन्ने कारण छ र कारण छैन पनि ।

म तपाईंकी प्रशंसक हुँ र रहनेछु, सके आवश्यकताभन्दा बढी नै । तपाईंको किताब यति बेला मेरो होटल रुमको सिरानीमा छ । कुनै किताबले ममा गहिरो प्रभाव पारेको छ भने यसैले छ । साथीहरू यस किताबप्रति मेरो आसक्ति देखेर आजित छन् । म जतिखेर पनि यसैको कुरा गरिरहेकी हुन्छु र उनीहरू मलाई उडाउँछन् । उनीहरू बुझ्दैनन् यस्तो भावना । उनीहरू ठान्छन् म किताबकी कीरो हुँ । तर यस्तो किताबका लागि म जे पनि बन्न तयार छु ।

म एउटी साधारण केटी हुँ । तपाईं भन्नुहुन्छ, तपाईंका लागि म ऐना हुँ । त्यस्तै लाग्छ, म निर्जीव हुँ । तपाईंको शब्द र त्यसको अर्थको मर्यादा मलाई थाहा छ, त्यसमा असहमति जनाएकी होइन । मेरो तात्पर्य के भने म आफ्ना लागि केही पनि होइन । के नठान्नुहोला भने म अरूका लागि हुँ । म त्यो पनि होइन । जो आफ्नै लागि हुन सक्दैन, अरूका लागि के हुन सक्ला ? यो भनेर म निराश देखिन सक्छु । तर म आशावादी हुँ । हामीले रमाइलो गर्‍यौं संयोगवादी भनेर । म कहिल्यै केहीप्रति निराश छैन र हुन पनि चाहन्नँ ।

तपाईंलाई भेटेँ, जिन्दगीकै मेरो अविस्मरणीय घटना भएको छ । जसको किताब पढिरहेकी छु, उहीसँग भेट भएको छ । तपाईंले नभनेको भए मलाई थाहा हुने थिएन । म काठको कुर्ची माग्न गएँ, तपाईं रङ्ग चोबल्ने कूची लिएर बसिरहनुभएको रहेछ, मलाई पोतिदिनुभयो । म त्यसरी कुर्ची माग्न नगएकी भए हाम्रो भेट पनि हुने थिएन । भेट भए पनि चिनजान हुने थिएन । चिनजान भए पनि तपाईंले आफू चित्रकार भन्ने अवगत नगराउन सक्नुहुन्थ्यो । जसरी तपाईंले भन्नुभयो, म यहाँ अरूसँग परिचित हुन चाहन्नँ भनेर, मसँग पनि त्यसै गर्न सक्नुहुन्थ्यो ।

तपाईंलाई नभेट्ने निर्णय मैले किन गरेँ ? म फेरि सोच्छु– किन गरेँ ? तपाईंलाई भेट्दा मैले पनि त्यस्तै अनुभव गरेँ जुन तपाईंले भन्नुभयो परावर्तनको कुरा । कस्तो मिहिन र अर्थपूर्ण छ यो । मैले शब्दमा व्यक्त गर्न सकेकी थिइनँ जुन तपाईंले सजिलै गर्नुभयो । त्यही त भिन्नता छ चित्रकार र दर्शकमा, लेखक र पाठकमा । लेखकहरू पाठकको मन छुन्छन् र मनोविनोदपूर्ण तरिकाले यस्तो चित्रण गर्छन् जसले चेतनाको दायरा विस्तार गर्छ । म अहिले यी अक्षरमा आफ्नो

व्यक्तित्वको झझल्को पाइरहेकी छु । शब्दहरू आफ्नो छवि हुँदारहेछन्, ऐना हुँदारहेछन् । यी अक्षरमा तपाईं मलाई देख्न सक्नुहुन्छ । यो पत्र तपाईंसामु मेरो ऐना भइरहेको छ । तपाईं आफूलाई देख्नुहुन्न, मलाई देखिरहनुभएको छ । त्यसैले यो मेरो फोटो हो भन्नु अझ सही होला । तर तपाईं मलाई पेन्टिङमा बुझिरहनुभएको हुन सक्छ । त्यसैको डर छ मलाई । म जे छु त्यो देखिएकी छैन र एउटा व्यक्तिभन्दा आकृतिका रूपमा तपाईंले मलाई लिइरहनुभएको हुन सक्छ । वा एउटा पात्रका रूपमा मलाई आफ्नो चिन्तनको क्यानभासमा उभ्याइरहनुभएको हुन सक्छ ।

लेखकको जीवनमा धेरै पत्र आउँछन्, त्यसरी नै पाठकहरू र तिनका पत्रहरू । तर पाठकको जीवनमा दुर्लभले लेखक आउँछन् । तपाईं भिन्न हुनुहुन्छ । मलाई लाग्दैन, म यसरी अरू लेखकसँग भेट्न सकुँला । र भेटे पनि अन्तरङ्ग हुन सकुँला । तपाईंको विशेषता– जस्तो लेख्नुहुन्छ प्रत्यक्षतः आफू पनि त्यस्तै हुनुहुन्छ । जस्तो लेख्नुहुन्छ त्यस्तै बोल्नुहुन्छ । जस्तो बोल्नुहुन्छ त्यस्तै व्यवहार गर्नुहुन्छ । र आफू जस्तो व्यवहार गर्नुहुन्छ अरूबाट पनि त्यस्तै व्यवहारको अपेक्षा गर्नुहुन्छ । सके म यहींनेरि चिप्लिएँ हुँला । म तपाईंजस्तै व्यवहार गर्न चुकेँ हुँला । मेरो कमजोरी, मैले एउटी पाठकभन्दा बढी भूमिका खोज्न थालेँ हुँला । मैले पाठकभन्दा बढी साथीजस्तो व्यवहार गर्न खोजेँ । र हुन सक्छ, त्यसैले मलाई तपाईंसँग भेट गर्न वञ्चित गऱ्यो ।

जम्माजम्मी दुई दिन भेट भयो तपाईंसँग । लाग्दै छ, यो धेरै पुरानो परिचय हो । यो पुस्तक मैले पढ्न थालेकै धेरै भयो । यो किताब कुनै समयको छैन, तै समसामयिक लाग्छ । यसमा घटनाहरू छैनन्, तै घटनापूर्ण लाग्छ । यसमा कहिले, किन, को, कसरी भन्ने प्रश्न उठ्दैन । पाठक आफैँ बग्दै जान्छ, पानीमा पातमाथि कीरा बगेझैँ । म ठान्छु जुन चित्र कोरिएको छ र त्यसलाई जुन शब्द लेखिएको छ त्यो तपाईंको व्यक्तित्व हो । त्यसैले मैले कहाँ, कसरी, कहिले, किन भेटेँ भन्ने प्रश्न हराएर तपाईंसँगको घनिष्ठता मात्र अनुभूत भइरहेको छ । र म अचम्भित छु, तपाईंको जुन व्यक्तित्व मैले कल्पना गरेकी थिएँ, शारीरिक रूपमा म प्रस्ट थिइनँ तर बौद्धिक रूपमा समान पाएँ । कल्पनाको व्यक्तित्व र यथार्थको व्यक्तिबीच यतिसारो सामीप्य तपाईंको आकर्षक पक्ष हो भन्ने मैले ठम्याएकी छु । म पाठक नभएर तपाईंसँग व्यक्तिगत परिचित मात्र भए पनि यत्तिकै प्रभावित हुन

सक्थेँ । किनभने तपाईंको चित्र हेर्नु, शब्द पढ्नु र भेटेर तपाईंलाई सुन्नु लगभग समान अनुभव हुने रहेछ ।

किनकिन त्यो 'झरी' शीर्षकको चित्रकी केटी मै हुँ भन्ने लागिरहेछ । म यस्तो ठानिरहेकी छु, किन ? अनुभूति छ तर अभिव्यक्त गर्न सकिरहेकी छैन । मलाई त्यही भान परिरहेछ । यसको स्रोत पनि तपाईं आफैं हो । मप्रति तपाईंका शब्दहरू हुन् । ती शब्द अझै मेरा कानमा गुन्जिरहेका छन् । मैले गर्दा तपाईं हुस्सू बन्नुभयो, मैले गर्दा तपाईंको केरला जाने रेल छुट्यो, मैले गर्दा तपाईंले आफूलाई आविष्कार गर्न थाल्नुभयो, मैले गर्दा तपाईंले आफूलाई नौलो पाउनुभयो आदि-आदि । यी शब्द तपाईंको हृदयबाट उम्रिएका हुन्, जसमा म रत्ती शङ्का गर्दिनँ, भने म कसरी अप्रभावित रहन सक्छु ? र म ठान्दिनँ पनि, तपाईं मलाई प्रभावित गर्न त्यसो भनिरहनुभएको थियो ।

म क्रिसमसका लागि गोआ आउनु, अन्जुना बिचमा मैले पढिरहेको तपाईंले देख्नु, भरे एउटै रेस्टुरेन्टमा पुग्नु, हाम्रो टेबलमा कुर्ची नपुग्नु र म नै तपाईंको टेबलमा कुर्चीको आग्रह गर्दै पुग्नु, सबै संयोग भइरहेका छन् । म गोआ नआउन पनि सक्थेँ वा तपाईं पनि क्रिसमसमा केरला र नयाँ वर्षमा गोआ आउन सक्नुहुन्थ्यो । बिचमा म किताब नपढ्न सक्थेँ र पढे पनि अर्कै किताब पल्टाउन सक्थेँ । तपाईं त्यही बाटो नहिँड्न सक्नुहुन्थ्यो र हिँडे पनि मलाई वा किताबको आवरण नदेख्न सक्नुहुन्थ्यो । यसो सोच्छु– तपाईंले आफ्नो किताब देखेपछि मलाई त्यहीँ किन सम्झाउनुभएन ? बेलुका त्यही रेस्टुरेन्ट नगएको भए वा टेबलमा कुर्ची कम नभएको भए हामीबीच परिचय नै नहुने रहेछ । आखिर किन ? हाम्रो भेटका लागि भावीले डोऱ्याएको म भन्दिनँ किनभने त्यो भन्नु भ्रमभन्दा केही हो भन्ने म मान्दिनँ । यो सब म किन खोतलिरहेकी छु भने तपाईंसँगको भेटबाट म साँच्चै बदलिएकी छु ।

मलाई आफूप्रति विश्वास बढेको छ। आत्मबल थपिएको छ। ऊर्जा पाइरहेकी छु मैले। रचनाशील काम गरूँ भन्ने उत्साह दोब्बर भएको छ। आफूले सोचेको काम नै रोज्न मलाई प्रेरणा मिलेको छ । म त्यही गर्न चाहन्छु पहिला जे सोचेकी थिएँ । यसरी हेर्दा, तपाईंले मलाई बदल्नुभएको होइन, बल दिनुभएको हो । त्यो बल मसँग थियो-थिएन, म निश्चिन्त थिइनँ । तर अहिले लाग्छ, त्यो मैसँग रहेछ । मैले नदेखेकी हुँ, आफैँसँग रहेछ त्यो । म केही अन्योलमै

थिएँ हुँला, अहिले कुइरो फाटेको छ । छर्लङ्ग भएको छ अहिले । आफ्ना लागि आफैं ऐना भइरहेकी छु । आफैंले आफ्नो अन्तर्मन देख्न सकेकी छु । र यसको सम्पूर्णतः जस जान्छ तपाईंलाई ।

तर पनि म तपाईंलाई धोका दिइरहेकी छु । एकातिर जस दिइरहेकी छु र अर्कातिर धोका पनि । ममा अन्तरविरोध देखिरहनुभएको छ तपाईं । तपाईंले मलाई बल दिनुभयो तर सँगसँगै म अन्तरविरोधको सिकार भइरहेकी छु । तपाईंको बलको परिणाम मेरो अन्तर्द्वन्द्व भएको छ । एकातिर कुइरो फाट्यो भन्छु, अर्कातिर आफैं कुइरोले छोपिएकी देखिन्छु । म अन्योलमा छु र यो अन्योल अरू कोहीबाट होइन, तपाईंबाट पाइरहेकी छु । त्यसैले तपाईंलाई म यहाँनेरि दोष पनि दिन खोजिरहेकी छु । के म असल पाठक हुँ ? यहाँनेरि म कतै चुकिरहेकी छु जस्तो लाग्दै छ । जस र अपजस दुवै दिन खोजेर मैले आफ्नो प्रिय लेखकलाई सङ्कटमा पार्न खोजिरहेकी छु । मेरो विरोधाभास तपाईं बुझ्न सक्नुहुन्छ । र मलाई लाग्छ, यस्तो साधारण पाठकको विरोधाभासी प्रतिक्रिया तपाईंका निम्ति नौलो होइन ।

तपाईंलाई भेटेर फर्केपछि राति धेरैबेरसम्म सोचिरहें– कतै म तपाईंसँग बढी नै नजिक त भइरहेकी छैन ? यति छिटो म तपाईंसँग अस्वाभाविक रूपमा नजिकिएकी त छैन ? यसले एउटी पाठक र लेखकबीचको सम्बन्धमा त खलल पार्नेछैन ? म तपाईंलाई मन पराउँछु तर त्यो प्रियताको कसी कतै कमजोर त हुँदै छैन ? तपाईंको किताबप्रतिको मेरो आकर्षणको स्तरमा कतै आघात त पर्नेछैन ? अपरिचित पाठकका आँखा र आत्माले छामेको किताब कतै मेरो व्यक्तिगत समर्पणले खलबलिने त छैन ? यस्ता प्रश्नहरू मौरी बनेर मेरो सानो र तपाईंका लागि 'सुन्दर' मस्तिष्कमा भुनभुनाउन थालेपछि मैले सकससाथ निधो गरें– म तपाईंलाई अब भेट्दिनँ । कम्तीमा तत्कालका लागि । सके पाठक र लेखकबीचको सीमा कोर्न चाहें मैले । तपाईंकी प्रिय पाठक र दर्शकका रूपमा सर्वथा रहिरहने निचोड गरें । के मैले उचित निर्णय गरें ? म भन्न सक्दिनँ । यो निकै कष्टकर र अप्रिय निर्णय गरें मैले । र यस्तो परीक्षा जीवनमा म पहिलोपल्ट दिइरहेकी छु ।

मैले चिनेभरिमा सबैभन्दा फरक तपाईं हुनुहुन्छ । त्यही भएर यति खुलस्त तपाईंसँग भइरहेकी छु । सके यसरी खुला हुने चेष्टा गर्दा नै मैले तपाईंलाई कष्ट पनि दिन खोजिरहेकी छु ।

तपाईंको एउटा चित्रमा एउटा लामो पहेँलो पात खसिरहेको छ। त्यो आफ्नो वेगमा खस्दै छ तर चित्र हेरिरहँदा कहिल्यै त्यो खसिसक्दैन। खसिरहेको मात्र छ। मैले अघि भर्खर पनि त्यही पाना पल्टाएँ जहाँ त्यो पात खसिरहेको छ। म त्यस्तै भएकी छु। तपाईंसामु परेर म खसिरहेकी छु तर टेक्ने जमिन भेट्न सकिरहेकी छैन। तपाईंले मलाई आफ्नो रचनाको त्यही पहेँलो पात बनाइदिनुभएको छ जो हरक्षण खसिरहन्छ। पातको वेगझैँ म पलापला आफूलाई छाम्न विवश भइरहेकी छु। म आफ्नै बुतामा उभिन चाहन्छु। सङ्घर्षका लागि आफ्नो भूमि आफैँ रचना गर्न चाहन्छु। म कतै अडिन चाहन्छु, बस !

तपाईंकी,

प्रिय पाठक।



# ४

बरन्डाबाट बिचतिर जाँदै गरेको पर्यटक हेरिरहेका बेला मैले तल नरिवलको रूखमुन्तिर पल्पसा उभिरहेकी देखें। रिसेप्सनबाट निस्कने बाटाको मुखमै ऊ थिई, हातले एउटा किताब च्याप्दै। उसका आँखा होटलबाट कोही निस्केला र झ्याप्प कुखुराझैँ छोपुँला भन्ने ताकमा थिए। ऊ गम्भीर देखिन्थी र टोलाइरहेकी थिई। मैले त्यहाँ कुनै निर्जीव उभिरहेको पाएँ, निरीह भएर।

सरासर तल ओर्लें। ऊ टस न मस त्यही विन्दुमा लिङ्गझैँ गाडिएकी थिई। कलेजी कलरको कमिज पाइन्टभित्र घुसारेर ऊ निर्धक्क त्यहाँ ठडिएकी थिई। लाग्थ्यो– ऊ धेरैबेरदेखि त्यही अवस्थामा अडिरहेकी छ। कहाँ खसिरहेकी छ त खै ? रातो लामो पातझैँ देखिएकी छ। ऊ अडिरहेकी छ मेरो होटलको भुइँमा। मलाई देख्नासाथ उसका आँखा सर्किए र ओठ काँपे।

'मलाई माफ गर्नुहोला,' उसले नम्रतापूर्वक भनी।

'बरु गल्ती मेरो भयो,' मैले भनें।

'किन ?' उसले एकटक मलाई हेर्दै सोधी।

'मैले तिमीलाई भ्रम दिएँ।'

'के तपाईंले बोलेका कुरा खेलाँची हुन् ?'

'तर त्यसले सङ्केत अर्कै गर्‍यो कि भन्ने पछुतोमा छु।'

'कस्तो सङ्केत ?'

'यही कि तिमीले मलाई चिठी लेख्नुपर्‍यो।'

'त्यो मेरो कमजोरी हो।'

'मैले यति मीठो र लामो पत्र कहिल्यै पाएको थिइनँ,' मैले भनें- 'दोहोर्‍याई-तेहर्‍याई पढें रातभरि।'

'मैले तपाईंको किताब दोहोऱ्याएझैँ त होइन नि ?' उसले अनुहारमा अलिकति उज्यालो पोत्दै भनी ।

'तिम्रो लेखाइ कुनै लेखकभन्दा कम छैन ।'

'मलाई दुःख छ,' उसले भनी- 'तपाईंलाई भेट्न आउन सकिनँ ।'

'कम्तीमा तिमीले आफ्नाबारेमा प्रस्ट गऱ्यौ ।'

'के म चिठीमा प्रस्ट छु ?'

'तिम्रो अन्योल वा अन्तर्द्वन्द्व वा विरोधाभास नै तिम्रो स्पष्टता हो ।'

'त्यसो भए म आफ्नो अस्पष्टतामा स्पष्ट छु ?'

'त्यसको ऊर्जा हुन्छ,' मैले भनेँ- 'स्पष्टताको खोजी गर्दै मान्छे उद्देश्यमूलक जीवन बाँच्न सक्छ ।'

'तपाईंलाई चोट त पुगेन ?'

'पुगेन,' मैले भनेँ- 'अलि बेसी दिए हुन्थ्यो !'

'मैले भन्न खोजेकी– कतै तपाईंलाई मैले चोट पुऱ्याएँ कि ?'

'होइन,' मैले भनेँ- 'मलम लगायौ ।'

'कसरी ?'

'तिम्रो चिठीका शब्दहरूले ।'

'मैले बुझिनँ ।'

'तिम्रा शब्दहरू कुतकुती लगाउने तर शीतल छन् ।'

'मैले अझै बुझिनँ ।'

'तिमीले मेरो मन छामेकी छ्यौ,' मैले भनेँ- 'तिमीले मेरो हृदयमा थाती रहेका पुराना पाप्राहरू निकालेर ताजा स्पन्दन गऱ्यौ ।'

'सके म यस्तो गहिराइ बुझ्न सक्षम छैन ।'

'भमरालाई भ्रम हुन सक्छ रस चुस्दा फूललाई कतै चोट पुग्यो कि ?'

'जाबो भमरासँग त्यत्रो चेतना नै होला र ?'

हामी हाँस्यौँ । उसले सुरुमा हाँसो नियन्त्रण गर्न खोजेकी थिई, सकिन । नरिवलको रूखलाई साक्षी राखेर घाम सरिरहेको थियो । होटल-परिसरमा पर्यटक आउने-जाने क्रम जारी थियो । ऊ उभिएकी थिई र तनाव मत्थर भएको उसको

अनुहारको प्रकाशले म पग्लिरहेको थिएँ । बिहानी घामका रेखाले हिमालमा बाफ उडाएजस्तो म पनि सफा हुँदै थिएँ ।

'यसपालिको गोआ जिन्दगीकै उपलब्धि भयो,' मैले भनेँ ।

'किन ?'

'मैले आजसम्मको सबैभन्दा मीठो चिठी पाएँ ।'

'हरेक विषयलाई सुन्दरताको कोणबाट हेर्ने सीप त तपाईंको पो रहेछ !'

'तिमीबाटै सिकेको हुँ ।'

'जे पायो त्यही !' उसले ठस्सा पारी ।

'तिमीलाई नभेटेको भए अपूरो हुने रहेछ,' मैले भनेँ ।

'गोआ-यात्रा ?'

'होइन,' मैले भनेँ- 'जिन्दगी नै ।'

'फेरि जे पायो त्यही !' उसका ओठले लाजको सर्को तानेझैँ गरे- 'मलाई कति मस्का लगाउनुहुन्छ ?'

'म एउटा अन्योलमा छु ।'

'के ?'

'तिमी राम्री कि तिम्रो चिठी ?'

'मेरो चिठी त्यति राम्रो छ र ?'

'हुन त हरेकलाई आफ्नो सौन्दर्यप्रति गर्व हुन्छ ।'

'मैले त्यसो भनेँ ?'

'भनिनौ ।'

'अनि ?'

'तिमीलाई पढ्नु र तिमीलाई भेट्नु, दुवैमा मैले समान आनन्द पाएँ ।'

'म भ्रम दिन खप्पिस रहिछु ।'

'तर म यति बेला भ्रममा छैन ।'

'कहिले हुनुहुन्थ्यो ?'

'तिमीलाई भेट्नुअघि,' मैले भनेँ ।

'कस्तो भ्रम ?'

'के म यति राम्री केटीसँग कुरा गर्न सकुँला भन्ने ।'

'जे पायो त्यही !'

'आखिर कुरा गरेरै छाडेँ ।'

'कुरा गर्नुभएन,' उसले भनी- 'चोर्नुभयो ।'

'के चोरेँ ?'

'मेरो मन ।'

'के म चोर भएँ ?'

'मनचोर !'

'मन मात्र ?' मैले भनेँ- 'म त तिमीलाई नै चोर्न चाहन्थेँ ।'

'चोर्दै हुनुहुन्छ ।'

'कसैको सुरक्षाबाट ?'

'म आफ्नो सुरक्षा आफैँ गर्न समर्थ छु ।'

'मबाट असुरक्षित अनुभव गरेकी छ्यौ ?'

'सक्नुहुन्छ ?'

'के गर्न ?'

'मलाई आफ्ना आकाङ्क्षाहरूबाट जोगाउन ।'

'किन ?'

'तिनीहरूबाट म असुरक्षित छु ।'

'कस्तो आकाङ्क्षा ?'

'जस्तो तपाईंलाई भेट्ने ।'

'मलाई भेट्नु हुँदैन ?'

'चिठी पढिहाल्नुभयो ।'

'किन आयौ त ?'

'आउनु हुन्थेन ?'

'मैले त्यसो भनेँ ?' मैले भनेँ- 'तर किन आफूलाई रोक्न सकिनौ ?'

'सक्ने भए म आउँथेँ ?' उसले भनी ।

फेरि हामी दुवै हाँस्यौँ । मैले उसलाई बाहिर एउटा रेस्टुरेन्ट लगेँ । हूलमूल बढेको थियो । घाम पारिलो थियो । तर बिचमा न हिउँद न वर्षा । लगभग एउटै

तापक्रम वर्षभरि । दृश्य लगभग उही, पात्रहरू मात्र फरक । र यतिखेर त धेरै पर्यटक । हूलमा मेरी पाठक पनि जसको संसर्गले मलाई विशिष्ट बनाइरहेछ ।

मैले सुटुक्क उसलाई हेरेँ– ऊ मेरो सम्मुख ओइलाइरहेकी थिई । पहिला जागेकी थिई, मैले के फर्माएँ कुन्नि, ढक्क फुलेकी थिई । तर यसो मन छाम्यो, ओइलाइहाली । बेर छैन, फेरि ढक्क फुल्न । लौ, त्यसरी नै गजक्क परेकी छ ! कुन सुर चढ्ला अनि तरङ्गिएर फेरि टाढा हुन के आइतबार ? तर आज आइतबार नै हो क्यार ! खैर, बार इज नो बार ! उसले सुन्तलाको रस फर्मान गरी ।

‘मैले ठानेको थिएँ,’ मैले भनेँ- ‘अब हाम्रो भेट हुँदैन ।’

‘पृथ्वी सानो छ ।’

‘गोलो छ,’ मैले भनेँ- ‘बरु बाटामा कुनै दिन भेट हुन सक्छ ।’

‘बाटामा किन ?’ उसले भनी- ‘म त तपाईंको होटलै आएँ नि ।’

‘बाटो बिरेर ?’

‘खोज्दै,’ उसले भनी ।

‘म छक्क छु ।’

‘किन ?’

‘तिमीलाई केले डोऱ्यायो ?’

‘पुस्तकको साइनोले ।’

‘भन्नाले ?’

‘अब भेट होला-नहोला,’ उसले भनी- ‘यो पुस्तकमा तपाईंको सिग्नेचर चाहन्छु ।’

उसले त्यो किताब टेबलमा तेर्स्याई ।

‘त्यसो भए मेरो हस्ताक्षर लिन आएकी ?’

‘कस्तो लाग्यो ?’

‘अघि नै भनेको भए हुन्थ्यो नि ।’

‘अघि र अहिलेमा तपाईंको अक्षर फरक पर्छ ?’

‘तिमीलाई हतार होला,’ मैले भनेँ ।

‘हतार त तपाईंलाई होलाजस्तो छ ।’

‘तिमीलाई भेटेको साँझदेखि म समयको नियन्त्रणमा छैन ।’

'मलाई पनि त्यस्तै लाग्दै छ,' उसले भनी- 'समय तपाईंको नियन्त्रणमा छ ।'

'त्यसो भए त केरला जाने रेल छुट्ने थिएन ।'

'अब काठमाण्डू जाने रेल नछुटाउनुहोला ।'

'बाई द वे,' मैले भनेँ- 'रेल काठमाण्डू जाँदैन ।'

'जहाँसम्म जाला ।'

'मैले सोचेको थिएँ,' मैले भनेँ- 'गन्तव्यसम्मै पुग्छु भनेर ।'

'मैले पनि त्यस्तै सोचेकी थिएँ,' उसले भनी- 'तर ट्र्याक रहेनछ ।'

'ट्र्याक अरू कसैले रिजर्भ गरिसकेको हो कि ?'

'होइन,' उसले भनी- 'बरु ट्र्याक बन्नुअघि रेल कुद्न खोजेको हो कि ?'

त्यसो भनेर ऊ उठी । अनि मतिर किताब तेर्स्याई । मैले हस्ताक्षर गर्दै लेखेँ- 'मेरी प्रिय पाठकलाई' । खास ती शब्द सही थिएनन् किनभने मैले किताब उसलाई उपहार दिएको होइन । 'भुलिगए पाप लाग्ला है ...' गाउँदै बसेँ म । ऊ हिँडेको बाटो तातो राप आएजस्तो भयो । हिँड्दाहिँड्दै उसले अङ्ग्रेजीमा फटाफट भनी- 'मेरो हृदयमा तपाईं रहनुहुनेछ । तपाईंलाई शुभकामना र जहाँ जानुहोस् शुभयात्रा !'

मेरा कानमा जोडले गुन्जिरह्यो- 'अनि एउटा कुरा, रेल कहीँ पनि नछुटाउनुहोला !'

'एउटा रेल त छुटिहाल्यो,' मैले ऊ हिँडेको हेरिरहेँ । पात फेरि खस्न थाल्यो । ऊ कतै अडिन चाहन्छे । भेट्नो चुँडिएर ऊ कता जाली ?



# ५

शिरीषका फूल मस्त लागेको वैशाखी धूपमा थियो काठमाण्डू । फरर्र फूल खस्दा पार्क गरिराखेको भक्सवागेन बिटल हावाको एकै झोक्काले रुझ्यो । नीलो रङ्गको गाडीमा नीलै फूलहरूको वर्षा भइरहँदा म बाहिर दुइटा रूखहरूमुन्तिर खेलिरहेका तिब्बती शरणार्थी बच्चा हेर्दै थिएँ । ढुङ्गाले पिटेर धोएको भान पार्ने ठ्याक्क तिघ्रामा खुइलिएको जिन्स लगाएर हिँडेकी एउटी किशोरीले फूल झरिरहेको गाडी हेरी । उसलाई सके पत्तो थिएन, हावासरि गतिमा फूलले ऊ आफैँ रुझिरहेको ।

एक बगल रूखहरू पार गर्दा ऊ फूलको स्पर्शले कुतकुतिन सक्थी ।

ती बच्चाहरू झरेको फूल टिप्दै, ओठको हावाले फुरुरु पार्दै, अर्काको गन्जीभित्र हिउँझैँ कौतूहलवश हालिदिँदै रमाउँदै थिए । किशोरीले टेकेको सडककिनार एउटा एल्मिनेटर मोटरसाइकल रोकियो । केटी झरी र झरी परिरहेका शिरीषका फूलमा प्याजी सल झिकेर लामो कालो कपाल फरफर पार्न खोजी । मङ्सिरताका माथि यारीतिर भन्ज्याङको उकालामा भेडागोठालाहरू ताजा हिउँमा रुझिरहेजस्तो ।

अर्को रूखको फेदमा उभिएर मैले छिरिङलाई फोन गरेँ । ऊ उपत्यकाको कुनै पूर्वी नेटोमा फोटो खिच्दै थियो । 'शिरीष र प्रेम' शीर्षकमा फोटो फिचर गर्ने तयारीमा थियो ऊ । आउन नभ्याउने भयो । दिउँसोको ट्राफिक कम थियो र सडकमा धूलो घटेको थियो । अर्को एक जोडी कारमा आएर फूलको न्यौछावरमै रङमङिन थाल्यो । त्यस जोडीकी केटीले पनि खुइलिएको जिन्स लगाएकी थिई । उसको त पाइन्ट टिमिक्क छालामै गडेको थियो । मैले आँखा हटाउन सकिनँ ।

म किन त्यता फर्किएँ, एकै छिनमा उनीहरूको अवस्था देखेर अप्ठ्यारो लाग्यो । त्यो जोडी रूखले छेलिएको फाइदा लिन थाल्यो । उतापट्टि फेयर एन्ड

लभ्ली विज्ञापन पोतिएको ध्वाँसे भित्तो मात्र थियो जुन एकान्तको अवसर लिँदै युवकले प्रेमिकाको ओठमा सुरुमा फिक्का रङ्ग पोत्न थाल्यो– हातमा झरेको फूल सुस्तरी चलाउन थाल्यो, गालातिर पनि । उसका ओठहरू बलियो ब्रसमा बदलिन थाले छिटछिटो र क्यानभाससरि प्रेमिका रङ्गमा परिणत हुन थाली । ब्रससरि ओठको तीव्र घातले केटी भुतुक्क हुँदै गई । उसको खुट्टादेखि नै हलचल हुँदै थियो । फूलको झोक्काले कुनै कमलो बिरुवा हल्लिएझैँ । फूल खसिरहेको बेला रूखले छेलिएर त्यो मदमत्त जोडी मेरा आँखाको घेराभित्र तीव्र ब्रस-घर्षणमा झन्झन् रङ्ग बदल्दै अनुमान गर्न नसकिने चित्र बनाउँदै थियो ।

त्यस्तो बेला मेरो मोबाइल नबजेको भए हुन्थ्यो । फूल, आँखा र ओठबाहेक त्यहाँ अरू गतिविधि वर्जित भएको भए हुन्थ्यो । त्यहाँ कुनै पनि बाह्य हस्तक्षेपमा रोक लगाउनुपर्ने थियो । म आफैँ रूखको आडमा रूखकै लहराझैँ अविचल वर्षौंदेखि बेरिएर अभिन्न अङ्ग बन्न खोज्दै थिएँ र आफ्नो पहिरन पनि जङ्गलमा युद्धरत सिपाहीझैँ क्यामोफ्लाज भए हुन्थ्यो भन्ने सोच्दै थिएँ । फोन उठाएको भए आफ्ना अगाडि गुँड थापेर बसेको त्यो जोर गोलसिमल भुर्र उड्ने थियो । कसैको मनमा अनुहार कोरिएको स्थायी तस्बिर बन्ने थिएँ म । तिनीहरूले यस्तो मौका कहिल्यै पाउन सक्ने थिएनन्, ट्राफिक कम भएको मध्याह्नको बेला शिरीष फुल्ने याम एक वर्षपछि मात्र आउने थियो । र अर्को वर्षसम्म थाहा छैन, उनीहरूको सम्बन्ध कुन चरणमा प्रवेश गर्ने थियो । यस्तो अस्थिर र चञ्चल सम्बन्धहरू हाबी भएको समय अर्को यामसम्म उनीहरू आफूबीच विकसित हुने कुनै पनि रसायनले निर्देशित हुने थिए । सहरमा कुनै पनि बेला बम पड्किन सक्थ्यो र के थाहा, तिनीहरूमध्ये एकलाई नै छर्रा लागोस् ! थाहा छैन– त्यो केटो आफैँ सहरबाहिर कतै पनि डुल्दा हतियारहरूको घानमा पर्न सक्थ्यो वा कतै एकान्तमा विद्युतीय तार तानिएको नदेखिने धरापमा फस्न सक्थ्यो ।

युवतीका आँखा बन्द भए । उसको कपालमा युवकले हात चलाउँदा जति फूल झरे पनि उत्तिकै रूखबाट खसिरहेकाले ऊ आफैँ शिरीषको सानो वृक्षझैँ उभिएकी थिई । र युवक ऋतु बनेर युवती-रूखलाई वसन्तवयमा मत्त पार्दै थियो । बच्चाहरूले त्यहीँनेर पुगेर वाल्ल नहेर्नुपर्ने ! उनीहरूको खस्याकखुसुकले युवती झस्किई र लाजवन्ती झारझैँ तत्काल खर्ल्यामखुर्लुम भई । म अर्को रूखको अडेस लाग्न छड्किएँ ताकि मैले अघि नै देखि चियो गरिरहेको उनीहरूले ख्याल नगरून् । गलैँचा टेकेजस्तो भएको थियो भुइँ जहाँ माटो र झारको कोलाजमाथि

थप नीला र फिक्का भुइँकुइरोझैँ अस्थायी बुट्टा भर्दै हावाको सर्काले फूल बिछ्याइरहेको थियो ।

'मलाई लाग्छ यो नै अन्तिम दिन हो यहाँ शिरीष सिजनको,' मैले फेरि छिरिङलाई ऊ तत्काल आउन सक्ला भनेर फोन गरेँ ।

'सरी दृश्य, म यहाँ घाम कतिखेर छड्के पर्ला भनेर मिनेट-मिनेट कुरिरहेको छु,' उसले भन्यो- 'लाइट मिल्नेबित्तिकै आफ्टरनुन कलर म छोप्न सक्नेछु । मलाई डिस्टर्ब नगर ।'

उसले कस्तो प्रभाव पार्न खोज्यो भने मानौँ माउ उड्नेछ र आँखा खुल्न लागेका बच्चा ऊ रूखको टोड्काबाट छोप्न आँट्दै छ । 'ट्राभल म्यागेजिनका लागि योभन्दा राम्रो सट के हुन्छ यार– काठमाण्डूमा बच्चा हुर्काइरहेको आप्रवासी चरा !' उसले भन्यो- 'म रौँ पनि नउम्रिएका बच्चाका निर्मल आँखा देखेर लगभग पागल भइरहेको छु ।'

फूल निखेका शिरीषका रूख छलेर बाहिर निस्कैँ म । मनोहरा खोला वाग्मतीमा मिसिएझैँ त्यस सडकलाई राजमार्गमा टुङ्ग्याउन । हरियो राजमार्गलाई आकार दिन गति बढाइरहेको भक्सवागेन बिटलले आखिरी फेरो मार्दा उपत्यकाको सिमानामा एउटा ट्रक रोकिएको थियो । कुखुरैकुखुरा भरिभराउ ट्रकको खुला छतमुनि हाच्छिउँ-हाच्छिउँ गर्दै यात्रा गरिरहेका एक हूल स्कुले किशोरहरूले पेस्तोलधारी प्रहरीलाई बिटको आडमा उभिएको देखे ।

'ऊ काठमाण्डू !' एउटा किशोरले झाङमा लुकेको काँक्रातिर झटारो हान्न लागेझैँ हातले राजधानी देखायो । 'ए होत्त नि !' अर्काले सही थाप्दै फेरि हाच्छिउँ गऱ्यो । ऊसँगैको जुल्फीवाल भाले बुद्रुक्क उफ्रियो र फेरि चोयाको कोक्राको सानो घेराभित्र प्वाँख झार्दै थच्चियो । मलिनो हुँदै गएको अपराह्न-घाममा काठमाण्डूलाई उपत्यका बनाइरहेका डाँडाहरू वरिपरि उघ्रिएका थिए । कतैकतै बादल लम्किँदै थियो, उत्तरमा लाङटाङ हिमशृङ्खलातिर । घामले पाकिरहेका नागार्जुन र चन्द्रागिरि पहाडको घेराभित्र देशका बाँकी भाग जोड्ने एउटै मुख्य स्थलमार्गको प्रस्थान र प्रवेशविन्दुमा सदाझैँ सवारी व्यस्त थियो ।

'ऊ, भ्यागुतो-भ्यागुतो !' अर्को एउटा किशोरले मतिर आफ्नो चोरऔँलो चोरकै नाक ताकेझैँ गरेपछि म झस्किएँ । प्रहरी उभिएभन्दा विपरीत दिशातिर म रोकिएकाले उनीहरू नडराई-नडराई ट्रकको डन्डी समातेर मलाई हेर्न थाले ।

गाडीबाट निस्केपछि बल्ल थाहा पाएँ– उनीहरू भक्सवागेनको आकार देखेर जिल्ल परेका रहेछन् । भ्यागुतोजस्तो गाडीलाई खिसी गरिरहेको छेउको एउटा किशोरलाई मैले सोध्न खोज्दा फेरि कुखुराहरू उफ्रिन थालेका थिए ।

उसलाई सोधेँ- 'कहाँबाट आएका हौ ?' पहिला त एउटाले भन्यो- 'स्कुलबाट ।' अर्को अलि बुज्रुककीले भन्यो- 'गामबाट ।'

'कुन गाउँ हो ?' मैले फेरि सोधेँ ।

एउटाले भन्यो- 'धानचुली हिमालमुनि ।'

म अक्क परेँ । मैले भनिनँ– म पनि त्यहीँबाट आएको हुँ पन्ध्र वर्षअघि ।

उनीहरूलाई देख्दा आँखा रसाए । पहिलोपटक 'नेपाल' छिर्दा म पनि लगभग यस्तै निरीह थिएँ । गाडीहरूको त्यतिविधि लर्को मैले कहिल्यै देखेको थिइनँ । सार्क शिखर सम्मेलनका कारण सुरक्षाजाँच पट्यारलाग्दो थियो । म चढेको ट्रकले चामलका बोरा बोकेको थियो । धन्य म ड्राइभरसँग थिएँ ! दिनभरि ट्राफिक जाम भयो । साँझ अबेर सहर पुगे पनि ट्याक्सी नभेटेर राति मात्र स्कुल पुग्न सकेको र भर्ना नभएकाले होस्टलमा बस्न नपाएको त्यो दिन म बिर्सन सक्दिनँ । काठमाण्डूको पहिलो रात पालेघरमा सुतेको सम्झेर आफ्नै गाउँतिरबाट आएका किशोरहरू देखी टीठ लाग्यो ।

एउटा किशोर केही भन्न खोज्दै थियो, ट्रक हुइँकियो । उसले ठूलो स्वरमा हाच्छिउँ गऱ्यो र कुखुरा फेरि उडायो । म रन्थनिएँ । अर्थात् तिनीहरू मेरै गाउँतिरबाट ? मैले उनीहरूलाई ट्वाल्ल परेर हेरिरहेँ । एउटाले मलाई हात हल्लायो जसलाई अरूले पनि पछ्याए ।

त्यति बेला गाउँ छाड्दा पहेँलो खेतखेतै धानका गेडा झार्दै म दौडिएको थिएँ । गाईहरू लेकबाट धपाइएका थिए । एउटा बाछ्राले मलाई लघारेको थियो र म पछारिएको थिएँ बयरको काँडाघारीमा । चौताराछेउको चियापसलबाट देख्नेहरूले 'ऊ, सरको छोरो बोर्डिङ पढ्न गयो' भन्ने सुनेको आजैजस्तो लाग्छ । तल्लोडिहीमा मीत उभिरहेको थियो मलाई लालुपाते फूल दिएर बिदाइ गर्न ।

'हामीलाई बिर्सेलाऊ काठमाण्डू पुगेपछि,' उसले भनेको थियो । फूल दिएर हल्लिरहेका उसका हातले म नेटो काट्न थाल्दा आँसु पुछ्न थालेका थिए । झोलुङ्गे पुलसम्म पुऱ्याउन आएको थियो ऊ । आमाले दिएको मालुवा केराको

काइँयोबाट दुइटा कोसा उसलाई दिँदै मैले भनेको थिएँ- 'दसैँमा म आउँछु, पिङ खेलौँला । अर्को वर्ष त आठपिर्के पिङ हाल्न लाउनुपर्छ ।'

'दसैँमा आउँदा हाम्लाई अङ्ग्रेजी सिकाइदेउला है !' रेसमले भनेको थियो ।

कुखुरा र किशोरहरू बोकेर त्यो ट्रक कति नम्बरको प्लेट टाँसेर बत्तिएको थियो, हेक्का भएन । अघिअघिका सवारीमध्ये आफूले खोजेको वाहन ठम्याउन सुद्धी पुगेन । नम्बर-प्लेटनेरि एउटा सायरी थियो । बाटामा केहीबेर एउटा कारले मलाई नरोकिदिएको भए हुन्थ्यो । एउटा बच्चाले गाडीबाट फुत्केको पाङ्ग्रा छोप्न सडक नकाटिदिएको भए हुन्थ्यो । ट्रकबाट उत्रेर कहाँ गइसके होलान् तिनीहरू ?

राति अबेर घर फर्किएँ । पाउरोटी तताएँ । अन्डाको पोच पारेँ । चिज काटेँ, ससेज तताएँ । गोलभैँडा थिचेर अचार बनाएँ । खाँदै कम्प्युटर खोलेँ ।

च्याटमा एउटी सोऱ्ह वर्षीया केटी टुप्लुकिई ।

'स्विट सिक्स्टिन,' टिप्पणी गर्दै टाइप गरेँ- 'आई एम डबल ह्वाट यु आर !'

'नो प्रब्लम,' त्यस केटीले फुर्माई उताबाट- 'आई लाइक मेचोर्ड मेन !'

भन्न त उसले आफ्नो नाम लारा भनेकी थिई तर कुनै नेपाली केटी नै त होइन ? जे होस्, चलाख लागिरहेकी छ । उसलाई म खिपेरै छाड्छु । यो अर्को पहेँलो पात हुन सक्छे, पलापला खसिरहन विवश ! के थाहा, यस केटीले पनि म कतै अडिन चाहन्छु भनेर भाषण पो ठोक्ने हो कि ? चाहन्छे भने अडिनलाई मेरो बलियो काख छँदै छ । कसो छिरिङ ? ऊ बज्जिया अहिले फ्वाँफ्वाँती सुतिरहेको होला । के सुत्थ्यो, घुरिरहेको होला । उसकी श्रीमती कैलाश-मानसरोवर गएकी छ क्यार । एक्लै मस्ती छ ।

'म शेर्पा हुँ भर्खर एभरेस्टबाट ओर्लेको,' मैले सुरुमा यसरी गफ दिँदा त्यस किशोरीले सोधी- 'बाटामा यती त भेटेनौ ?'

'भेटेको थिएँ तर मलाई देखेर टाप कस्यो,' मैले भनेँ ।

'किन ?'

'म याक चढेर गएको थिएँ,' मैले भनेँ ।

'त्यसो भए तिमीले एभरेस्ट होइन याक चढेका हौ ?' उसले सोधी ।

'दुवै,' मैले भनेँ- 'याक चढेर एभरेस्टको टुप्पामा पुगेको ।'

'एभरेस्ट तिमीले होइन याकले पो चढेको रहेछ,' उसले भनी- 'तिमी त अक्सिजन बोतलजस्तै माथि पुगेछौ ।'

मोबाइल किरिरी बज्यो । छिरिङले मेसेज पठाएछ । सुतेको रहेनछ । म के गर्दै छु भन्ने उसलाई कुतकुती लाग्यो होला नि ! डिलिट गर्नुअघि जवाफ पठाएँ 'च्याटमा व्यस्त छु' भनेर । त्यस उल्लूले यति बेला काम सक्यो भनेर म उसकहाँ खान जान्छु ? मरिगए जान्नँ । फेरि मेसेज पठायो 'कोसँग च्याट ?' भनेर । मैले जवाफ दिएँ- 'एउटी टिनएजर लाइनमा छे ।'

'बधाई छ,' उसले फेरि पठायो- 'तिम्रो जोबन फर्केछ क्यार ।'

मैले त्यसको जवाफ पठाइनँ । यता किशोरीसँग व्यस्त छु, ऊ किन छुच्चो बनिरहने ? सक्छ भने अनलाइन आए भइहाल्यो । फेस गर्न सक्छ ? दिनभरि फोटो खिचेर हैरान होला । भैहाल्यो, उसलाई किन जिस्क्याउने ? कम्प्युटरमै मग्न भएँ ।

'तिमीले कहिल्यै पढेकी छ्यौ एभरेस्टमा याक चढेको र याकमाथि मान्छे चढेर शिखर पुगेको ?' मैले केटीतिर प्रश्न फालेँ ।

'आजै सुन्दै छु,' उसले भनी- 'गिनिज बुकमा रेकर्ड त गर्दैनौ ?'

'सोच्दै छु ।'

'अनि तिमीले संसारको टुप्पाबाट के देख्यौ नि ?'

'मैले होचा टाकुराहरू देखिनँ, तिब्बती पठार देखिनँ, काठमाण्डूदेखि ल्हासा उडेको विमानलाई आफूभन्दा मुनि बादल छिचोल्दै उडिरहेको पनि देखिनँ,' मैले भनेँ- 'जताततै सुन्दरीहरू मात्र देखेँ । चारैतिर मुस्कानसहित हात हल्लाइरहेका र त्यहाँ मैले लारा नाम गरेकी एउटी केटी पनि देखेँ !'

'रोमान्टिक रहेछौ,' उसले भनी- 'मसँग डेट गर्न चाहन्छौ ?'

'स्योर, स्योर ।'

'कहिले भेटौँ ?'

'जहिले तिमी चाहन्छ्यौ ।'

'म त अहिल्यै तयार छु,' उसले भनी । नखरा पारेकी त होइन ?

'राति भइसक्यो ।'

'तिमी दिउँसो मात्र डेट गर्छौ ?'

'त्यस्तो नियम त छैन ।'

'त्यसो भए अहिले के अप्ठ्यारो ?'

'त्यस्तो केही छैन,' मैले भनें- 'एउटा प्रश्न गरूँ ?'

'के ?'

'आर यु भर्जिन ?' मैले फ्याट्ट सोधेँ ।

'के फरक पर्छ ?' उसले ठाडै सोधी ।

'केही पर्दैन,' मैले भनें- 'त्यही पनि ।'

'धत् उल्लू,' उताबाट अङ्ग्रेजी अक्षरमा नेपाली लेखिएर आयो- 'हाऽहाऽहाऽ ... ।'

म झसङ्ग भएँ । मलाई चिन्ने कोही मसँग अर्काको नाममा हटमेल एकाउन्ट खोलेर जिस्किरहेको शङ्का चसक्क गड्यो ।

'को हौ तिमी ?' मैले सोधेँ- 'हिम्मत छ भने खुलेर आऊ ।'

धत्तेरी, त्यही छिरिङ पो रहेछ ! खपिनसक्नु भएर उसले आफ्नो पोल खोल्यो । बेस्मारी आफैँ खिपिएँ । थक्कथक्क भयो । हत्तपत्त एमएसएन बन्द गरेँ । कम्प्युटर पनि अफ गरेँ । किन अफ गरिहालेको ? फेरि अन गरेँ अनि सुटुक्क एउटा सीडी घुसारेँ । अब सङ्गीत सुनेर निद्रा डाक्नुपर्छ । धत्, यो गीत ठीक छैन ! यसले त आउने निद्रा पनि भगाउँछ । कुन हालूँ ? च्याक हेरेँ, ओल्टाइपल्टाइ गरेँ । नारायणगोपाल घुसारेँ– 'भोलि उठी कहाँ जाने केही थाहा छैन ...' ।

'ड्रिङ्क गर्ने ?' भनेर छिरिङले फोन गर्‍यो । मैले जानेसम्मका शब्द फलाकेर गाली गरेँ । सुत्नुअघि उसलाई मनमनै फेरि सरापेँ । शेर्पाकै छोरालाई सगरमाथा चढेर फर्केको गफ दिएँ अनि केटी हो भनेर 'आर यु भर्जिन' भनी सोधेँ । ऊ पनि हाँसिरहेको होला । नभन्दै सोधिहाल्यो- 'कस्तो भयो त च्याट ?'

'राम्रो भयो,' मैले भनेँ ।

'मैले आज एउटा गजब काम गरेँ ।'

'के ?'

उसले फोन राख्नुअघि भन्यो- 'आकाशमा उडिरहेको एउटा बेलुनमा प्वाल पारिदिएँ ।'

'अरू के जानेका छौ त तिमीले ?' मैले फोन राख्दै भनेँ ।



# ६

मुस्किलले एउटा किताब सकेँ । नेपाली उपन्यास । भर्खर बजारमा आएको । नयाँपन छैन, न विषय न कथ्य । बरु फिल्म हेर्न गएको भए हुने । वा रेस्टुरेन्टतिर जत्ति पनि मन भुलाउन सकिन्थ्यो । ग्यालरी हरेक दिन को गइरहन्छ ? नगरकोट वा ककनी जता पुगे पनि म सजिलै बत्तिन सक्छु । ककनी अझ सुन्दर लाग्छ किनभने हिमालनजिकै उभिएको भान पर्छ । र बतास धेरै चल्छ । बतासको वेगमा कल्पना उडाउन सकिन्छ । चराझैँ बतासको वेग काट्दै घरी माथि त घरी तल साना नदी उपत्यकाहरू हुँदै । पहाडमा उभिँदा म अग्लो अनुभव गर्न सक्छु । त्यहाँ उभिएर हेर्दा काठमाण्डू खाल्डोको एकरसको दैनिकीप्रति पछुतो लाग्छ ।

मन बिथोल्ने उपन्यासबाट सन्चो हुन रातभरि रङ्गसँग खेलिरहेँ । किन किनेछु त्यो किताब मैले ! आज दिउँसो उठ्नासाथ सबैभन्दा पहिला त्यसलाई पुराना पत्रपत्रिकाको थुप्रोमा मिल्काएँ । बल्ल बिसेक भयो । अब दुई-चार महिना म एउटै नेपाली किताब पढ्दिनँ ।

बेस्सरी पानी पिएँ । सुन्तलाको जुस बनाएँ, सिनित्त पारेँ । कफीका लागि पानी उमालेँ । ब्रेड तताएँ । स्ट्रबेरीको जाम कता परेछ ? आलु ताछेँ र फ्राई गरेँ, जीरा हालेर । डेरीको दूध फाटेको रहेनछ । सलामी तयार गरेँ । डाइनिङ टेबल सफा गरेँ । डाइनिङ रुमको पेन्टिङ चित्त बुझेको छैन । त्यसमा रङ्ग गर्दा मेरो मनोदशा ठीक थिएन । त्यही भएर त्यसलाई शीर्षक दिन पनि सकेको छैन ।

आजका पत्रिकाहरू फेरि साइकल-ब्वाईले गेटनेरिको रूखको कापमा अड्काइदिएको रहेछ । प्रमुख समाचार नै दिक्क लाग्यो । काखीमुनि च्यापेर बाथरुम पसेँ । कार्टुन भने कुतकुत्याउने नै रहेछ । सावर लिएर रुमालले ढाडको

पानी पुछ्दा बाहिर फोन बज्यो । निस्कँदा-ननिस्कँदै घण्टी रोकियो । ठीकै छ, कसैलाई हतार छ भने मोबाइलमा गर्ला । लागेन भने इमेल गर्ला । कसैलाई के पो नै बित्नेछ र ? देशको समय दरबारअगाडिको घण्टाघरमा रोकिएको कसलाई थाहा छैन ?

फुलनले फोनमा सम्झाई– एक जना फ्रेन्च कूटनीतिज्ञले मेरा चित्र हेर्न खोजेका रहेछन् । ग्यालरीमा कुनै पनि बेला आए हुन्छ भनेर उसले खबर दिइछ । भरसक चित्रकार भएका बेला आउन खोजेका रहेछन् । उनको सुविधाको समय बुझ्नू भनेर मैले फोन राखेँ । ब्रेडमा जाम दलेँ । ब्राउन ब्रेडका लागि बेकरी जानुपर्ने भइसकेको छ । दिउँसो निस्कन मन छैन । बेलुका टहल्न भने जानुपर्ला । सानेपादेखि थापाथली हुँदै दरबारमार्ग निस्केर ठमेल पुग्नु यो यामको आकर्षण हो । शिरीषका फूल सडकभरि होलान् ।

साँझपख शीतल हावाको झोँकमा मन्द थप्पडले झर्ने फूलले सडक नीलै पारेका होलान् । शिरीष-शृङ्खला गर्ने मेरो योजना बीचैमा रोकिएको छ । शिरीषको वर्षामा रुझ्दै क्याम्पस गइरहेकी केटीबारे मैले गरिरहेको चित्रमा उसको आकृति चित्त बुझेको छैन । त्यसमा रङ्ग थप्न ऊर्जा आएको छैन । म फेरि त्यो सडक नियाल्न चाहन्छु । साँझ पर्नुअघिको समय र सडकलाई मैले सही प्रकाश दिन सकेको छैन । मलाई प्रायः चित्रमा प्रकाश चयन गर्न अझै सकस हुन्छ । कहिले रेखाहरू बोल्न मान्दैनन्, कहिले तानिएका रेखाले मैले रोजेको प्रकाश अस्वीकार गर्छन् । वाटर कलर सजिलो हुन्छ तर क्यानभासमा तेल माध्यम मलाई प्रिय लाग्छ । धेरै सङ्घर्ष र तनाव हुन्छ । त्यसले मेरो धैर्य र रचनाशक्तिको जाँच लिन्छ । यस माध्यममा बृहत् विषयलाई गहिराइसम्म चित्रण गर्न सक्छु । तेल-माध्यम सर्वव्यापी छ तर मेरा क्यानभास स्थानीय जीवन र शैलीका छन् । तिनमा आफ्नै भूदृश्य र समय प्रकट होऊन् भन्नेमा म सधैँ सतर्क हुन्छु ।

राम्रो आर्ट कलेज फेरि पढ्ने धोको बसेको छ । पेरिस त्यसैले मेरो सपना हो । दुई-चार शृङ्खला गर्न र मूल्य पाउन सकियो भने एकाध वर्षमै म कुनै कलेज भर्ना हुनेछु । कलेज-फीभन्दा अपार्टमेन्ट महँगो हुन्छ । मुम्बईको जेजे आर्ट वा पश्चिम बङ्गालको शान्ति निकेतन पनि विकल्प हुन सक्छन् तर म खास गरी आधुनिक युरोपेली पाठशाला अनुसरण गर्न चाहन्छु । त्यहाँ कक्षाकोठाबाहिरका ग्यालरीहरू नै खुला विश्वविद्यालयसरह छन् । कलाका ती ठूला पाठशाला हुन् ।

ग्यालरी र म्युजियम चहार्दा सजिलै महिनौँ बिताउन सकिन्छ। रचनाका लागि तन्मय हुन सक्नुपर्छ। तनावलाई कसरी निकास दिने, आफैँमा भर पर्छ। तर म सुक्खा महसुस गरिरहेको छु, लामो समयदेखि।

काठमाण्डूमा कलाकारहरूसँग मेरो खास सङ्गत छैन। कलाका लागि सङ्गत गीतका लागि सङ्गीतजस्तै हो। आफ्ना समकालीनहरूले गरिरहेको कामबाट पनि म कुनै प्रेरणा पाउन सक्दिनँ। प्रदर्शनी आक्कलझुक्कल भइरहेका छन् तर कहिले त जानै मन लाग्दैन। त्यस्ता अवसरमा कलाबारे खासै चर्चा हुँदैन। प्रदर्शनी उद्घाटन गर्न ठूला मान्छे बोलाउने चलनै मलाई मन परेको छैन। तिनीहरू किन त्यसो गर्छन् ? सञ्चारमाध्यममा आउन वा कला किन्ने तिनै ठूलाबडा हुन् भनेर ? रिबन काट्नेमध्ये कतिले पो किन्ने गरेका होलान् !

बरु पल्पसाजस्ता नयाँ पुस्तालाई आकर्षित गर्न सक्नुपर्छ। तिनलाई आज कलाप्रति जागरूक गर्न सकियो भने भोलिको बजार यही पुस्ता बन्न सक्छ। तिनीहरू आलोचनात्मक दृष्टिले कला हेर्न सक्छन् र कलाकारलाई रचनात्मक तवरले कुतकुत्याउँछन्।

एउटी डच केटी थिई, केही महिनाअघि मेरो ग्यालरीमा एक दिन पूरै बिताएर निस्कन लाग्दा मलाई गाली गरी।

'तिमी यति राम्रा चित्र बनाउँछौ तर यी चित्रहरू चिसा छन्। दे आर कोल्ड, यु सी !' उसले भनेकी थिई- 'प्रायजसोमा चरित्र र रङ्गबीच सङ्घर्ष छैन।'

म चुप लागेँ। ऊ हाँसी। म बोल्न सकिनँ, उभिरहेँ। मलाई त्यसरी कसैले पहिलोपल्ट ठाडै झापड हानेको थियो। तिम्रो चित्र बुझ्न सकिनँ भन्ने दर्शकहरू त अज्ञानी वा चित्र-असाक्षर मात्र हुन्, तिनको आलोचनाको अर्थ हुँदैन। तर बुझ्नेहरूको टिप्पणी ग्रहण गर्न सक्नुपर्छ। तिनका आलोचनामा आग्रह हुन्छ, सन्देश हुन्छ। ऊ जान ठिक्क पर्दा पनि मैले ओठ खोल्न सकिनँ। ऊ ढोकामा पुगी। म पिल्सिन थालेँ। भऱ्याङमा पुग्दा मैले 'एक्सक्युज मी' भनेर उसलाई रोकेँ।

'किन होला मेरा चित्रहरू चिसा ?'

उसले अनुहार थप उज्यालो पार्दै भऱ्याङको मधुरो प्रकाशमा भनी- 'तिमी आफैँले खोजी गर्नुपर्छ।'

'किन ?'

'किनभने कलाकार तिमी हो ।'

'बाई' भनेर ऊ भऱ्याङको फेदबाट ओझेल परेपछि झन् म अक्क न बक्क भएर उभिरहेँ, ढोकामै ।

फर्केर धेरैबेर भित्तातिर हेर्दै टोलाउन थालेँ । फुलन फोनमा झुन्डिरहेकी थिई ।

त्यस डच केटीले मेरो ग्यालरीमा बजिरहेको सङ्गीत बन्द गरेर गएजस्तो भयो । तर मलाई कसैले घचघच्याएको थियो आफ्नै कामको पुनरावलोकन गर्न । कसैले मलाई बेस्मारी चुनौती दिएको थियो । म रातिसम्म घोत्लिरहेँ । वाइन पिउँदै एक्लै ग्यालरीमा अबेरसम्म बसिरहेँ । घोत्लिएँ, घोत्लिरहेँ । अहँ, कुनै मेसो पाउन सकिनँ । वाइनले मात्तिँदै गएँ र उसको टिप्पणी सम्झीसम्झी आत्तिन थालेँ । मात्तिनु र आत्तिनुको दोसाँधमा म थिएँ । एउटा पर्यटकले धेरैअघि उपहार दिएको क्युबाली सिगारको प्याकेट पहिलोपल्ट मैले खोलेँ । धूपीको कडा बास्ना फैलिएजस्तो भयो ।

फुलनले भनेअनुसार त्यो केटी भोलिपल्ट पनि आएकी थिई । करिब तीन घण्टा बसी । भित्ता हेरिरही । कुनैकुनै चित्र फर्कीफर्की समय दिएर हेर्थी भनेर फुलनले सुनाउँदा म छक्क परेँ । त्यसको भोलिपल्ट पनि आएकी रहिछ, अपराह्नतिर म भर्खर निस्केको थिएँ । ऊ नहिँडेकीले ढोका लगाउन दुई घण्टा कुर्नुपऱ्यो भनेर फुलनले भनी । उसले थप सोधपुछ, टीकाटिप्पणी केही गरिन । गौर गरेर चित्रहरू हेरिरही । फगत हेरिरही । 'थ्याङ्क यु' भनेर निस्की ।

'म भोलि नेपाल छाड्दै छु' भनेर निस्केकी त्यस कलापारखीले ग्यालरीबाट मेरो भिजिटिङ कार्ड मागेर लगी भन्ने सुन्दा नजाने कुन खाले आनन्द लाग्यो । उसले केही चित्र डिजिटल क्यामराले खिची रे ।

एउटै प्रदर्शनी गर्न नसकेर म रन्थनिरहेको थिएँ । चित्रकारका लागि प्रदर्शनी लेखकका लागि पुस्तक प्रकाशनजस्तै हो । गायकका लागि स्टेज परफर्मेन्सजस्तै हो । पत्रकारका लागि बाइलाइन स्टोरीजस्तै हो । म कुनै दिन काठमाण्डू मात्र किन, नयाँ दिल्ली त के, पेरिसमै प्रदर्शनी गर्न चाहन्छु । लन्डनको ट्रफलगल स्क्वायरस्थित नेसनल ग्यालरी अफ आर्ट पुग्न चाहन्छु, न्युयोर्कको मेट्रोपोलिटन म्युजियम अफ आर्टमा सजिन चाहन्छु । लुभ्र म्युजियममा आफ्नो कला झुन्ड्याउनु

भनेको एउटा खेलाडी ओलम्पिक रङ्गशाला पुगेजस्तो हो । तर मेरा चित्रहरू 'चिसा' छन् । म कुनै अन्तर्राष्ट्रिय कलासमीक्षकका आँखामा पर्न सक्नेछैन । मैले आफ्नो कलाको आफैँ परख गर्न बाँकी छ । त्यो डच पारखी मलाई सबैभन्दा कठिन होमवर्क दिएर गएकी छ ।

दिनहरू चन्द्रागिरिको पश्चिम भित्तामा सुन्तला रङ्ग कोरल्दै ढल्दै जान्थे । म क्रमशः रन्थनिँदै जान्थेँ । हुँदाहुँदा निरुपाय म खस्केको आत्मबलले खिन्न, उदास हुन थालेँ । घरबाट निस्कने आँट पनि मर्दै गयो । कूची चलाउन असमर्थ हुँदै घरभित्रै कुँजिँदै जान थालेँ । साँझपख तल गेटछेउको बकैनाको रूखमा आउने चराहरूलाई कुनै दिन चील देख्न थालेँ, कुनै दिन गिद्ध देख्न थालेँ । फुलन आत्तिएर फोन गर्थी र म चिसो जवाफ दिएर पन्छिन थालेको थिएँ ।

त्यसबीच ग्यालरीमा आएका आठ-दशवटा निमन्त्रणा-पत्रलाई फुलनले 'आरएसभीपी' गरिदिई । ती प्रायः प्रदर्शनीहरूका बोलावट थिए । पत्रपत्रिकाहरूमा म समाचार पढ्थेँ तर कुनै उत्साह थिएन ग्यालरीहरू भ्रमण गर्ने । पत्रिकाका कला-समाचारमा समीक्षा हुन्थेन । समाचारमा नसा त हुन्थे तर रक्तसञ्चार हुन्थेन । म आफ्ना सीमित साथीहरूबाट पनि टाढिँदै गएको थिएँ । समझदार साथीहरू मेरो चित्र-व्यस्तताको अनुमान गर्थे र कहिल्यै झिजो लाउँथेनन् । इमेल गर्न छाडिरहेको थिएँ । छिरिङ पनि सके फोटो-पुस्तक तयार गर्न व्यस्त थियो । किचन गन्हाउन थाल्यो । क्रेटका अन्डाहरू कुहिएछन् । घर सिनित्त सफा गरेको दिन मन अलि चङ्गा भयो । टेलिफोनमा फुलनको आवाज फुर्तिलो सुनेँ ।

'हल्यान्डबाट एउटा व्यक्तिगत चिठी आएको छ, सर ।'

'मलाई सर नभन भनेको बिर्स्यौ ?' मैले हप्काएँ ।

'सरी सर,' उसले भनी- 'सरी सर भनेँ फेरि ! सरी दाइ !'

'के सरी-सरी ?'

'पर्सनल लेटर भनेकाले खोलेकी छैन ।'

'राखिदेऊ ।'

'तपाईं नआउने ?' उसले कर गर्दै भनी- 'थुप्रै ग्राहक भइसकेका छन् सरलाई भेट्न एप्वाइन्टमेन्ट माग्ने पनि ।'

म बोलिनँ ।

'सरी सर भनेछु फेरि ।'

धेरै दिन भएकाले ऊ केही हडबडाएकी होली । मेरो मनोदशाले पनि ऊ आत्तिएकी हुनुपर्छ । हो त, यतिका महिना भयो मैले उसलाई तलब पनि दिएको छैन । बिहानी क्याम्पस जान त छाडेकी छैन ? म खङ्ग्रङ्ग भएँ । दाङबाट मैले उसका बाआमालाई सम्झाई-बुझाई पढाइदिन्छु भनेर ल्याएको हुँ । अङ्ग्रेजी स्कुलबाट फस्ट डिभिजन ल्याएपछि ऊ क्याम्पसमा पनि खुबै रत्तेर पढ्दै छे । उसको आत्मविश्वास बढेको देखेर थारू समुदायले गर्व गर्ने दिन आओस् भन्ने म चाहन्छु । छात्रावासमा बस्छे र दिउँसो मेरो ग्यालरी हेरिदिन्छे, बस । तर के ठान्दै होली, मेरो यो बेहोसी ताल !

उसले आफैँ थपी- 'यो चिठी त्यस डच केटीको हो कि जस्तो लाग्छ ।'

'कसरी ?'

'मलाई त्यस्तै लागेको छ,' उसले भनी ।

शान्त काठमाण्डू-सडकमा कारभन्दा म आफैँ अशान्त मनले गुडिरहेको थिएँ । जापानले हालिदिएको ट्राफिक लाइटले सजिलो पारिदिएको छ तर लाइटको नियम पालना हुन सकेको छैन । कुन नेताले हो नेपाललाई जापान बनाउँछु भनेको ? जापान बनेपछि यी लाइटले काम गर्लान् ! सिंहदरबार चोककै लाइट बिग्रेको रहेछ । हर्न बजाएर पछाडिको जिप हुइँकियो । मैले त्यसलाई पछ्याएँ । फुलन ढोकामा उभिएर मलाई कुरिरहेकी थिई ।

'तपाईं त स्वाट्टै दुब्लाउनुभएछ,' उसले आँखा गाडेर भनी ।

'खोइ चिठी ?'

हातमा समातिरहेकी रहिछ, मलाई दिन कत्रो हतार !

'प्रिय नेपाली चित्रकार,' त्यही डच केटी रहिछ ।

भनेकी रहिछ, 'म आम्स्टर्डम फर्केदेखि निकै दिन रनभुल्लमा परेँ । निकै सोचेँ, घोत्लिएँ ।

'यहाँ पनि ग्यालरीहरू गएँ । यसबीच थुप्रै पेन्टिङ नियालेँ । तिम्रा क्यानभासमा प्रयुक्त माध्यम, ब्रस, रङ्ग र रेखाकृति उत्कृष्ट छन् । तिनको संयोजन गतिशील छ र सुमधुर पनि । तैपनि चित्र चिसा छन् भनेर मैले औँल्याएकी थिएँ । तिमीले सोधेका पनि थियौ । तर वास्तवमा समस्या चित्रमा होइन रहेछ । समस्या रहेछ

भित्तामा । ती भित्ताको हरियो रङ्गसँग तिम्रा क्यानभासहरूको लय मिलेको रहेनछ । त्यही समस्या रहेछ । ती भित्ताले तिम्रा सुन्दर चित्रलाई पूर्ण रूपमा प्रकट हुन नदिएर अन्याय गरेका रहेछन् । क्षमा गर्नेछौ मलाई । कृपया, आफ्नो ग्यालरीका भित्तामा अर्कै रङ्ग पोत्नेछौ भन्ने म आशा गर्छु ।'

'धन्यवाद' भनेर टुङ्ग्याउनुअघि उसले आखिरी हरफ लेखेकी रहिछ- 'म अर्कोपटक नेपाल आउँदा तिम्रो ग्यालरी भ्रमण गर्न छाड्नेछैन ।'

पुछारमा 'क्रिस्टिना' भनेर उसले यसो ढल्काएर हस्ताक्षर गरेकी थिई । साथमा एउटा तस्बिर पनि रहेछ आम्स्टर्डमको कुनै एउटा ग्यालरीको । चित्रकलासम्बन्धी एउटा सानो पुस्तक पनि चिठीसँगै पठाएकी रहिछ । धन्यवाद भनेँ मनमनै ।



# ७

मल्लकालको झल्को दिने घरमा पसेको थिएँ । सानो बगैँचा रहेछ । पूर्णतया शान्ति । बगैँचाको कुनामा बुद्धको मूर्ति । ओम् मणि पद्मे ... जप्न मन लाग्यो । साउती गर्ने आँखा । बुद्धका आँखा दोहोऱ्याएर हेरेँ । वास्तविक बुद्ध कस्ता थिए थाहा छैन, तर यस मूर्तिका आँखा सम्मोहनकारी छन् । कलाकारसँग सकिँदैन । उनीहरू अर्को संसार रचना गर्छन् । अर्कै भूगोल निर्माण गर्छन् । र आफूले चाहेअनुसारका पात्र बनाउँछन् । यी बुद्ध कस्तरी हेर्दै छन्, हेर्नेका आँखैमा बस्ने गरी ! मैले मूर्ति बनाएँ भने बुद्धका आँखा अर्कै बनाउन सक्छु । मेरो मूर्तिमार्फत बुद्धले यस्तरी नहेर्न सक्छन् । ती बुद्धका आँखामा भ्रान्ति हुन सक्छ । म बुद्ध रचना गर्न सक्षम छैन । मैले बनाएँ भने बुद्ध आवारा बन्न सक्छन् । भो, बनाउन्नँ । बुद्धलाई बोधिसत्त्वप्राप्त शान्तिका आँखामै रहन दिनुपर्छ ।

फेरि ती अविचल आँखा हेर्दै बच्चाबच्ची, कुकुर केही चहलपहल नभएको घरको ढोकातिर सुइँकिएँ । बिरालोझैँ लुसुक्क पसेँ पुरानो काठको ढोकाबाट । होचो दलिन हुँदै अँध्यारो भऱ्याङ उक्लेपछि पहिलो तलामा साङ्ग्रिला देखेँ । किताबैकिताब राखिएको फराकिलो बैठककोठा । किताब पत्ता लगाउन लामो सूची चाहिने । कोठाको कुनामा एउटी वृद्धा पावरवाला चस्मा लगाएर बसिरहेकी ।

'हजुरआमा, नमस्ते,' मैले हात जोरेँ । उनले फर्काइन् र मुसुक्क हाँसिन् । सेतै फुलेका कपाल, चाउरी परेका गाला, देख्दैमा आदरभाव जाग्ने ।

'यहाँ पुराना किताब पाइन्छन् भन्ने सुनेर आएको,' मैले भनेँ ।

'म जान्दिनँ,' उनले भनिन्- 'तिमी आफैँ खोज ।'

बत्ती कातिरहेकी वृद्धा आफ्नै हातमा व्यस्त भइन् । छेउको सानो अग्लो टेबलमा पुरानो रेडियो रहेछ । पुरातात्त्विक किसिमको । विश्वयुद्धताका यस्तै केही

रेडियो काठमाण्डू ल्याइएका थिए । बल्ब सिस्टमको रेडियो, बिजुलीको स्विच अन गरेको एक छिनपछि बल्ल आवाज आउने । साथमा उत्तिकै पुरानो लाग्ने टेलिफोन सेट । कुनै सङ्ग्रहालय पुगेजस्तो भान पर्ने । छेउमा लामो वंशावली झुन्ड्याइएको । किताबको खुबै स्याहार पुऱ्याइएको । इतिहास, भूगोल, संस्कृति, दर्शन, राजनीति र साहित्यको वर्गीकरण गरिएको । वृद्धा लट्ठीको सहारामा म उभिएतिर आइन् र भित्ताको एउटा स्विच अन गरिन् । एउटा बल्ब बल्यो थप प्रकाश दिन ।

'म चित्रकार हुँ, हजुरआमा,' मैले भनें- 'पुरानो बेलाको समाजबारे कुनै किताब छ कि, पढ्न चाहेको ।'

म चित्रकलासम्बन्धी त्यस्तो किताबको खोजीमा थिएँ जसमा रङ्ग र प्रकाश मिलाउने परम्परागत नेपाली शैलीबारे लेखिएको होस् । भित्ता र चित्रको सम्बन्ध होस् वा एउटै चित्रलाई पनि प्रकाशका माध्यमले कति किसिमले व्याख्या गर्न सकिन्छ भन्ने उत्सुकताले म लपेटिएको थिएँ । पुराना कलाकारले नेपाली मौलिकतामा प्रकाशसम्बन्धी विवेचना गरेका छन् कि, खोज्दै म हिँडेको थिएँ । र एक जना सज्जनले दिएको ठेगाना पक्रिँदै म त्यो घर प्रवेश गरेको थिएँ ।

'किताब त पुरानै छन्,' उनले भनिन् ।

'लाइब्रेरीतिर पनि आफूले खोजेको किताब भेटिँदैन ।'

'मान्छेहरू याँ' आइर'न्छन्,' उनले भनिन् ।

'राम्रो सङ्कलन रहेछ ।'

'खै बा, सबै त्यसै भन्छन् ।'

म गाता नभएको एउटा किताब लिएर पढ्न थालें । वृद्धाले अर्को कुनामा गएर अर्को रेडियो थिचिन् । क्यासेट रहेछ । घन्किन थाल्यो–

*झमझम पानी पऱ्यो आषाढको रात*

*पारिबाट बज्न थाले मकैका पात ...*

डायरी रहेछ त्यो एक जना अङ्ग्रेजको । सन् १९५७ जुलाई १७ को पाना हेरें । 'पटनाबाट डकोटा जहाज चढेर काठमाण्डू उपत्यका प्रवेश गर्दा मैले एउटा हिमाली चुचुरो देखें । दिन सफा थियो र आफूले हेर्न चाहेको सबै देखिन्थ्यो । म पहिलोपल्ट आएकाले हरेक दृश्य नयाँ लाग्यो । जता हेऱ्यो उतै सुन्दर । चारैतिर डाँडाहरूले घेरिएको हरियो उपत्यका । बीचमा झुम्म बस्ती । त्यसबाहेक खेतैखेत, आँखै हरियो हुने । सपनाको शान्ति लाग्यो ।

'रोयल होटलमा बसेपछि मैले थाहा पाएँ– यहाँ अर्को होटलै छैन । रेस्टुरेन्ट पनि एउटै । यती बारमा मैले होटलमालिक रुसी नागरिक बोरिस लिसानेभिचसँग धेरैबेर कुरा गरेँ । उसले यहाँको रहनसहन, रीतिरिवाज, चालचलन सबै बताइदियो । धनीमानी नेपालीहरू कहिलेकाहीँ यो होटलमा खान आउँदारहेछन् । पुगीसरी आएका काठमाण्डूवासी त बोरिसले औँला पड्काउँदै गन्न सक्छ भन्दा म चकित परेँ । किन नहोस् त, टेलिफोन जोडिएका घर नै फररर नाम काढेर बोलाउन सकिन्छ अरे !

'बारमा बोरिसले केही शेर्पाहरूसँग परिचय गरायो । मैले जहाजबाट देखेको चुचुराका बारेमा सोधखोज गरेँ । उनीहरूले चिन्न सकेनन् वा मैले राम्ररी बताउन सकिनँ । पाँच-सात वर्ष भएछ विदेशीहरू आउन थालेको । त्यसैले सबै चुलीहरूका नाम, उचाइ कण्ठस्थ भएको छैन । उनीहरू भन्दै थिए– अर्को वर्ष तयारी गरेर आउनू, हामी तिमीलाई सोध्दै-खोज्दै बुईमा राखेर चढाइदिन्छौँ ।

'सडकभन्दा अगाडि विमानस्थल बनेको र मोटरभन्दा अगाडि जहाज चढ्ने नेपालीहरू बसेको यो राजधानी । घरभन्दा बढी मन्दिर र मन्दिरभन्दा बढी देवता भन्ने सुनेको सही हो भन्ने मलाई परिरहेछ । राति झ्यालमा टाढा कतै बहालबाट आइरहेको मधुर भजन एकोहोरो सुनिन्छ । कुनै गतिविधि छैन । सहरको कुनै आवाज छैन । रातभरि भजन भइरहेको र तेलको दियो बलिरहेको शान्त मन्दिर आएर बसेजस्तै भइरहेछ । देउताका रूपमा मैले त्यही हिमाली चुचुरो देखेको छु। माथि हिमाल छ र तल तेलको दियोको प्रकाशमा मन्दिरवरपर भजन गाइरहेका मान्छेहरू छन् ।'

वृद्धाले एक कप चिया ल्याइदिइन् ।

'किन दुःख गर्नुभएको ?'

'काम गर्नुलाई पनि दुःख भन्छन् लाटा !'

'घरमा अरू कोही छैन ?'

'कामकाजमा सघाउने एउटी केटी छ,' उनले भनिन्- 'नातिनी बाहिर डुल्न निस्केकी छ ।'

'नातिनी ?'

'घरमा बसी भने पढ्यापढ्यै गर्छे,' उनले भनिन्- 'घुम्न गई भने घुम्याघुम्यै गर्छे ।'

'छोरा-बुहारी ?'

'सबै अम्रिकामा छन् ।'

'तपाईं जानुभएन ?'

'म्लेच्छको देश को जाओस् !'

'यहाँ एक्लै हुनुभयो नि त,' मैले भनेँ- 'होइन ?'

'द्यौताहरू यैँ' छन्, मन्दिरहरू यैँ' छन् ।'

'नियास्रो लाग्दैन ?'

'तिमीजस्तै मान्छे पढ्न आउँछन्,' उनले भनिन्- 'कति छोराजस्ता लाग्छन्, कति नातिजस्ता लाग्छन् ।'

'त्यो त हो ।'

'आफ्नो सम्झे सबै आफ्नो,' उनले भनिन्- 'पराई सम्झे सबै पराई, होइन ?'

'हो ।'

'चिया कस्तो रै'छ ?'

'मीठो छ ।'

'मनको सन्तोष हो सबै ।'

'तर चिया निकै मीठो छ ।'

'गुलियो धेरै भएर होला ।'

'ठिक्क छ ।'

'तिम्रा बालबच्चा कति छन् नि ?'

'बिहै गरेको छैन ।'

'ए !'

'तपाईंका नि ?'

'एउटा छोरा, एउटी बुहारी, एउटी नातिनी ।'

'कस्तो छिमलेको !' मैले भनेँ ।

'मिलेर के गर्नू ?' उनले भनिन्- 'याँ' बस्ने होइनन् ।'

'त्यही त ।'

'तिम्रो त अम्रिका जाने सुर छैन ?'

'हजुरआमाले मन्दिर यहीँ छन्, देउता यहीँ छन् भन्नुभएको होइन ?'

'ए, तिमी पनि मन्दिर जान्छौ ? द्यौता मान्छौ ?'

'म चित्रकार हुँ हजुरआमा,' मैले भनें- 'चित्रकारका लागि विषयवस्तु यहीँ छन्, रङ्ग यहीँ छन् ।'

'नातिनी पनि त्यसै भन्छे ।'

'ए !' मैले सोधेँ- 'उनी पनि चित्रकार ?'

'खै, क्यामरा बोकेर हिँड्छे ।'

'ए !'

'एकपल्ट मैले यसरी बत्ती कातेको खिचेर टेलिभिजनमा देखा'की थी ।'

'ए, तपाईंलाई टेलिभिजनमा पनि देखायो ?'

'होइन, त्यो के जाती भन्छ नि, आफैँ खिचेर त्यैँ' घुसारेर हेर्ने क्या !'

'मैले बुझेँ ।'

'पढपढ,' उनले भनिन्- 'बूढीमान्छे, गन्थन मात्र आउँछ ।'

'तपाईं राम्रो कुरा गर्नुहुन्छ हजुरआमा, झिजो लाग्दैन ।'

'भन्दियौ नि !'

'मैले साँचो भनेको ।'

'ल बा,' उनले भनिन्- 'दुई शब्दले पनि सन्चो भो ।'

'तपाईं राम्री पनि हुनुहुन्छ,' मैले भनें- 'जवानीमा त कस्ती हुनुहुन्थ्यो होला !'

'के राम्रो हुनु ?' उनले भनिन्- 'भए पनि फोटोसोटो खिच्ने जमाना थेन ।'

'त्यो त हो ।'

'मेरी नातिनी देख्या' छौ ?'

'छैन,' मैले सोधेँ- 'किन र ?'

'म उमेरमा ऊजस्तै थेँ' कि जस्तो लाग्छ ।'

'रगत परेपछि ।'

'बानीबेहोरा पनि त्यस्तै लाग्छ ।'

'ए,' मैले भनें- 'तपाईंलाई सान्त्वना भयो ।'

'हो नि,' उनले भनिन्- 'बाउआमाचाहिँ अम्रिका फर्की कि फर्की भन्छन्, ऊ यैँ' बस्छु भनेर अड्डी कसेकी छ ।'

'यस्ती मायालु हजुरआमालाई कसरी छाडेर जाने नि ?'

'मेरो नाताले के हुन्थ्यो ?' उनले भनिन्- 'ऊ देश यैँ' छ, मान्छे यैँ' छन्, यतै काम गर्छु भन्छे ।'

केहीबेर घर डुलेँ । काठैकाठ छापिएको । इँटा पनि पुरानो गम्भीर रङ्गको । म्युजियम घुमेजस्तो लाग्यो । खोपाहरूमा देवीदेवताका ससाना मूर्ति लहरै राखिएका । तस्बिर र चित्रहरू पनि मिलाएर भित्तामा टाँसिएका । मनै खलबलिने शान्ति । ढोकाहरू खुलै । दुई-तीनटा बेडरुम पनि देखेँ । सफा, सिनित्त, सेता रुमालहरू राखिएका । स्विच अन गरेपछि टेबल उज्यालो हुने । पारखी अङ्ग्रेजहरू बितेको समयको स्पर्श गर्न बसेजस्तो । सरसुविधा भने सबै नयाँ । चित्त हर्ने परिवेश । एकै ठाउँ घण्टौँ रमाइरहन सकिने । अनेकानेक कल्पना आउन सक्ने । झ्यालढोकाका खापा कलात्मक । बुट्टाहरू कुँदिएका । इतिहासको कुनै चरणमा प्रवेश गरेजस्तो । पुरानो घर तर समयले खिइएका चीजबीज सङ्ग्रह गर्दै नयाँपन दिएर एउटा सुन्दर निवास बनाइएको । झ्यालबाट हेर्छु, सिमेन्टैसिमेन्टले पुरिएका भद्दा घरहरूको गन्जागोल देखिन्छ काठमाण्डू, अश्लील !

बैठककोठामा झर्छु, बूढीमाउ त क्यासेट रिवाइन्ड गरिरहेकी छन् ! ठ्याक्क थिच्छिन्, त्यही गीत आउँछ–

*झमझम पानी पर्‍यो ...*

'तपाईंलाई निकै मन पर्छ जस्तो छ ।'

'पुराना दिन सम्झिन ।'

'यो गीत सुनेर ?'

'हामी सानामा रस लिएर नाच्थ्यौँ ।'

'कसरी ?'

'बूढी भइसकेँ अब त ।'

'त्यही पनि एकफेर हेरूँ न ।'

'हा !' उनले भनिन्- 'सुहाउँदैन अब त ।'

'कसले भन्यो ? शास्त्रमा लेखेको छ ?'

'खोपाका द्यौता पनि हाँस्लान् ।'

'मलाई देउता हाँसेको हेर्न मन छ ।'

'साँच्चीकै द्यौता काँ' हाँस्छन् र ?' उनले भनिन्- 'मलाई खिसी गर्लान् भनेको पो !'

'तपाईं आफैँ देवीजस्तै हुनुहुन्छ,' मैले भनेँ- 'किन डर मान्नुहुन्छ ?'

'तिम्लाई था' छ ?' उनले भनिन्- 'मेरो नाम देवी हो नि !'

'भगवान्ले जुराएकै रहेछन् ।'

'पण्डितजीले राखिदे'का ।'

'ज्ञानी पण्डित परेछन्,' मैले भनेँ- 'त्यही भएर आज देवीको घरमा आइएजस्तो भएको छ ।'

'असली देवीको घर कैले जान पाइने हो ?'

'मलाई त तपाईं नै लाग्छ असली देवी,' मैले भनेँ- 'बरु म पो पहिला पुगेछु ।'

'बाठो रै'छौ ।'

'घमन्डी पनि छु,' मैले भनेँ- 'तपाईंको नाच नहेरी जान्नँ ।'

'मेरी नातिनीजस्तै ढिपी गर्दारै'छौ ।'

'नातिनीसँग तपाईंको बानीबेहोरा मिल्छ भन्नुभा' होइन ?'

बूढीमाउ त जुरुक्क उठिन् र क्यासेट फेरि रिवाइन्ड गरिन्। त्यही गीत आयो। लट्ठी फालेर सर्लक्क मेहरो मार्दै उनी सिमलको फूलझैँ हलुङ्गो भइन्, हात हल्लाएर नाच्न थालिन् । हावाले पात हल्लाएजस्तो भयो । मेरा हात पनि तानिन्। म उनीसँगै नाच्न खोज्दा झमझम पानीमा रुझेको मकैको बोटझैँ लुत्रुक्क परेछु । पानीले पात बजाएझैँ मलाई सुस्तरी थप्पड हान्दै उनले आफूसँगै फनफन घुमाइन् । नाच्न नजानेकामा मैले थैया मानेँ । ग्लानि भयो ।

एक फन्को घुमेजस्तो गरेर उनलाई हेरेँ, बत्तीमा पुतली झुम्मिएजस्तो उनी त बाजाको ताल पक्रिरहेकी छन् । हाऽहाऽहाऽहाऽहाको हाँसोले म झस्किएँ । ढोकामा उभिएर दङदास परिरहेको अरू कोही नभएर पल्पसा रहिछ । छक्कै परिहोली, म उसको घरमा आइपुगेको देखेर । म झन् अचम्भित भएँ, त्यतिका महिनापछि उसको घर त्यसरी पुगेको रहेछु । बूढीमाउकी नातिनीका रूपमा मैले उसलाई भेटेको त्यो क्षण कहिल्यै बिर्सन सक्दिनँ । नातिनीलाई देखेर त बूढीमाउ सात वर्षीया बालिकाजस्तै लाजले भुतुक्क भइन् । उनले यसरी आँखा छोपिन् मानौँ कुनै बालिकाले आफ्नो च्यात्तिएको फ्रक कसैले चियाइरहेको एक्कासि देखेकी छ ।



# ८

'द ब्लुज ब्रदर्स' ले सिगरेट सल्काइरहेको ब्ल्याक एन्ड ह्वाइट तस्बिरमुन्तिर टेबलमा बसेको थिएँ। ब्लुज सङ्गीत मधुरो बजिरहेको थियो बारबाट। देशको नकारात्मक प्रचारले सुकिरहेको ठमेलमा त्यो रेस्टुरेन्ट भने लगभग भरिएको थियो पर्यटकहरूले। मकैका सुकेका घोगा र रातो खुर्सानी तुन्द्रुङ्ग झुन्डिएका थिए, साँझको शुष्क हावामा सुस्तरी हल्लिँदै। पल्पसा आइपुग्दा म चिकन सिज्लरको हरहरी बाफ उडाइरहेको थिएँ।

'हजुरआमा नाचेको मैले पहिलोपल्ट देखेँ,' उसले भनी।

'तिमीलाई नचाउन सकिनँ,' मैले भनेँ।

'उहाँ तपाईंलाई सम्झिरहनुभएको छ।'

'खोजेको मान्छेले भने सम्झिन्न।'

'कसरी आइपुगेँ त यहाँ ?'

पल्लो टेबलमा पर्यटकहरू मन खोलेर हाँसे। पदयात्रा सकेर फर्केका रहेछन्। अन्नपूर्णा परिक्रमाको अल्बम पल्टाइरहेका थिए, थोराङ पासको चिसो हावा हामीतिर चलेजस्तो भयो। एउटा फोटामा पुगेर तिनीहरू अडिएका थिए। मैले चियाएँ, खुट्याउन सकिनँ। लाग्छ, कोही हिउँमा चिप्लेका बेला खिचिएको थियो त्यो। केके भन्दै मरीमरी हाँसिरहे तिनीहरू।

पल्पसा भने उभिरहेकी रहिछ।

'यहाँ पनि कुर्ची माग्न आएको ?'

'गोआदेखि मैले त्यो बानी छाडेँ,' भन्दै ऊ बसी।

'पश्चात्ताप भयो ?'

'एउटै कुर्चीले काण्ड पुग्यो,' उसले भनी।

मैले चिकन काटेर अर्को प्लेटमा राखिदिएँ । आलु र नुडल्स पनि भाग लगाएँ । वाइन अर्को ग्लास पनि मागेँ । ऊतिर हेरिनँ, ठुस्किएको देखाउन । ऊ पनि मतिर नहेरी एकोहोरिएकी थिई । गलेजस्तै । उसको अनुहार एकपल्ट सुटुक्क चोरेँ । झन् राम्री भइछ । आफ्नै मान्छेजस्तो लाग्यो । हराएकी प्रेमिका लामो समयपछि फेला परेजस्तो । धेरै कुरा गर्न बाँकी तर पहिला बोक्रा छोडाउनुपर्ने फलजस्तो ।

'हजुरआमा तपाईंको फ्यान हुनुभएछ,' उसले भनी ।

'मेरो चित्र देख्नुभयो र ?'

'नचाइदिनुभयो नि त ।'

'उहाँ आफैँ नाच्नुभएको हो ।'

'आफैँ नाच्ने भए मैले यसअघि देख्थिनथेँ ?'

'तिमीले हेर्न नचाहेर होला ।'

'तपाईंले कर गर्नुभयो रे ।'

'मैले भनेको बूढाबूढी मात्र मान्छन् ।'

'केटाकेटीले भनेको चैँ तपाईं मान्नुहुन्छ ?'

'मेरो समस्या तरुना-तन्नेरीहरूसँग मात्र छ,' मैले भनेँ ।

म फटाफट खाइरहेको थिएँ, ऊ भने प्लेटतिर वास्तै नगरी धुमधुमती मलाई हेरिरहेकी रहिछ । उसका आँखा कोमल देखिए, माया गर्ने रसले भरिएका । रस मस्त भरिएको पुक्लुक्क सुन्तलाजस्तो । केस्राकेस्रा छोडाएर ओठमा खेलाइदिऊँ ?

'आज व्रत हो ?'

'कसरी खाने हो भनेर तपाईंलाई हेरिरहेकी ।'

'चिसो भयो नि त ।'

'तपाईंले चिस्याउनुभयो ।'

'बाफ अझै उड्दै छ ।'

'मेरो मन चिसियो ।'

'के मैले आइस राखिदिएँ ?'

'आइसझैँ छुट्टयाउनुभयो ।'

'झन् माया गरेर प्लेटमा हालिदिएको ।'

'मलाई त हेला गरेजस्तो लाग्यो ।'

'तिमी मेरै प्लेटबाट खान्थ्यौ ?'

'आफ्नै काँटाले खुवाउन सक्नुहुन्थेन तपाईं ?'

'त्यसो गर्दा मैले हतार गरेको हुन्थ्यो ।'

'केको हतार नि ?'

त्यही मेसोमा मैले उसको प्लेट आफ्नामा खन्याएँ । अनि फटाफट खान थालेँ । उसलाई हेरेँ, ऊ अक्क न बक्क परी । उसको अनुहारमा रिसको रातो बढ्न थाल्यो । तात्तिएझैँ भई । उसका ओठ आइरन गरिरहेको कपडाजस्तो भएर टिमिक्क तन्किए । मुजा कतै बाँकी रहेन । आँखाको रस सुन्तलाको रङ्गजस्तै हुन थाल्यो । केही पनि नबोली उसलाई उल्याउँदै मैले एक छिमलमै प्लेट सफा पारेँ ।

'म अब जाऊँ ?' उसले भनी ।

'मैले त्यसो भनेँ ?'

'मेरो भाग रहेन ।'

'अर्डर गर्न सक्छ्यौ ।'

'म कसैको भाग खान आएकी पनि होइन,' उसले भनी र वेटरलाई बोलाउन हात उठाई ।

'मलाई पनि त्यस्तै लाग्यो,' मैले भनेँ र वाइन सुनुत्त पारेँ ।

हाम्रो टेबलपछाडि एउटा नेपाली समूह बसेको रहेछ । चर्कोचर्को बोल्न थाले । एउटी केटी केही कुरामा नासनुस गरिरहेकी थिई । उसलाई फकाउन एउटा केटो भगीरथ प्रयत्न गरिरहेको थियो । मेरो ढाडपछाडिका ती आवाजका स्रोतहरू पल्पसा मात्र देख्न सक्थी । मैले फर्केर हेरिनँ । त्यहाँ अरू आवाज पनि थिए, दुवैलाई हस्तक्षेप गरिरहेका । आवाजसँगै मनमा आकृति पनि आउँछ । ठिटौले होलान् भन्ठान्दै थिएँ, केटाको आवाज आयो- 'डु यु लभ मी ?'

'आई हेट यु,' केटीले भनेको सुनेँ ।

'त्यसो भए म ढुक्क भएँ ।'

'किन ?'

'बेवास्ता गर्नेसँग मात्र मलाई डर लाग्छ,' केटाले भन्यो- 'लभ र हेट त एउटै सिक्काका दुई पाटा हुन् ।'

मैले पल्पसालाई हेरेँ । ऊ टेबलमा आइपुगेको म:म:सँग व्यस्त हुन थालिछ । पक्कापक खाइरहेकी थिई, मलाई लोभ्याउँदै । ऊ मलाई देखाउन चाहिरहेकी थिई, उसले मगाएको आइटम मेरोभन्दा मीठो छ भनेर ।

'मलाई मःमः मन पर्छ,' मैले भनें ।

'मलाई त मन पर्दैन,' उसले भनी र 'आहा !' भन्दै अर्को गाँस हुरुक्क हुँदै खाएको अभिनय गरी ।

'एउटा डल्लो खान पाए हुन्थ्यो,' मैले भनें ।

'वेटरलाई अर्डर गर्न सक्नुहुन्छ ।'

'काँटा ?'

'सिङ्गै प्लेट ।'

'के तिमी पनि प्लेटमा मलाई भाग लगाइदिने ?'

'मैले भनेको ...,'

'मैले बुझें,' उसलाई रोकेर मैले वेटरसँग एउटा अतिरिक्त प्लेट मागें । उसले ल्याइदिएपछि मैले उसको मःमः प्लेटछेउ आफ्नो खाली प्लेट भिडाएँ । अनि उसलाई हेरें । ऊ वास्तै नगरी मःमः प्वाकपुक पारिरहेकी थिई ।

'ल आइपुग्यो,' मैले भनें ।

'के ?' उसले नबुझेको स्वाङ पार्दै मतिर नहेरी सोधी ।

'ऊ,' मैले आँखाले ताक्दै भनें- 'प्लेट !'

'मैले मगाएकी छैन ।'

'मैले मगाएको ।'

'मलाई के काम ?' उसले भनी र अर्को गाँस हाली ।

'मान्छेहरू स्वार्थी हुँदारहेछन् ।'

'ए हो ?' उसले जिस्क्याई, मःमःको डल्लो भरिएको मुखले ।

'मलाई माया गर्ने मान्छे पनि यो संसारमा छन् भन्ने सोचेको थिएँ ।'

'ए हो ?' उसले भनी- 'किन सोच्नुभा' त्यस्तो ?'

'खान दिन्छन् भनेर होइन ।'

'किन त ?'

'खुवाइदिन्छन् भनेर ।'

'ए ।'

'आज देखियो,' मैले भनें ।

'के ?'

'अरूले खाएको ।'

'कहिल्यै देख्या थेन ?'

'खाएको त देख्या थैँ ।'

'अनि के त ?'

'यस्तरी खाएको चैँ देख्या थिनँ,' मैले भनेँ ।

'यस्तरी भन्नाले ?'

'अर्काले खोस्ला कि भन्ने डरले सप्पासप खाएको ।'

'ए, तपाईं खान चाहनुहुन्थ्यो ?' उसले सोधेजस्तो गरी । किनभने उसको प्लेट रित्तिसकेको थियो । अनि भनी- 'सरी है, सोच्दासोच्दै मैले मःमः सकिछु ।'

'के सोच्दासोच्दै ?'

'यही कि तपाईंलाई दिऊँ कि भनेर ।'

'म यहाँ अरूको खान आएको पनि होइन ।'

'मलाई पनि त्यस्तै लाग्यो ।'

'म अब जाऊँ ?' मैले भनेँ ।

'मैले त्यसो भनेँ ?'

'भन्यौ कि जस्तो लाग्यो ।'

'भ्रममा बस्नु पनि रमाइलो हुन्छ ।'

'मलाई त हुँदैन,' मैले भनेँ ।

अगाडिको टेबलमा ती विदेशी फेरि गलल्ल हाँसे । त्यही अल्बम पल्टाइरहेका रहेछन् । लाकटहरू ! आफैँले खिचेको आफ्नै फोटो हेरेर हाँसिरहेका छन् । कति हाँस्न सकेका ! यस्तो लाग्छ, उनीहरूसँग हाँस्ने मौका मिल्दैन, विषय पनि हुँदैन । एउटै कुरामा धेरैबेर हाँसिरहनुले के सङ्केत गर्छ ? सके तिनीहरू मुक्तिनाथको ओरालामा फेरि कोही चिप्लिएको फोटो हेर्दै होलान् । ए होइन रहेछ, मैले बलजफ्ती चियाएँ, अर्को चिप्लिएको खिच्न लागेको फोटोग्राफर आफैँ चिप्लेको र उसको फोटो अर्कैले खिचिदिएको रहेछ । हाऽहाऽहाऽ ।

'हजुरआमा भन्दै हुनुहुन्थ्यो,' उसले भनी- 'तपाईंलाई ल्याउनू भनेर ।'

'फेरि नाच्नुहुन्छ रे ?'

'तपाईंलाई खाना खुवाउन ।'

'कसले पकाउने ?'

'आफ्नै हातले बनाएर खुवाउँछु भन्नुहुन्थ्यो ।'

'तिमीले मेरो भाग खाइदिने होला फेरि ।'

'म धेरै खन्चुवा छैन ।'

'देखियो आज ।'

'मैले तपाईंको भाग खाएँ ?'

'होइन ।'

'अनि ?'

'मैले तिम्रो भाग खाएँ,' मैले भनें- 'त्यसको बदला लिन्छ्यौ कि भनेर ।'

'हजुरआमा भन्दै हुनुहुन्थ्यो,' उसले भनी- 'तपाईं बोल्न छुरा हुनुहुन्छ रे ।'

'उहाँकी नातिनीभन्दा कम ।'

'उहाँले मलाई बढी चिन्नुभएको छ ।'

'नातिनी मैजस्ती छ भन्दै हुनुहुन्थ्यो ।'

'उस्तै सोझी छ ।'

'बाङ्गिएको पनि देखियो ।'

'के बाङ्गिएको ?'

'हजुरआमा नाच्दा बाङ्गिएको ।'

'तपाईं त नाच्दा लट्ठीझैँ सोझो हल्लिरहनुभयो रे ।'

'म सोझो भएर ...,'

'देखियो ।'

'के ?'

'सोझो मान्छे बाङ्गिएको ।'

'हजुरआमा भन्दै हुनुहुन्थ्यो,' मैले भनें- 'मेरी नातिनी असाध्यै राम्रो नाच्छे ।'

'कहीँ नपाएर होस् !'

'उहाँले भन्नुभएको ।'

'जे पायो त्यही,' उसले भनी ।

'भन्दै हुनुहुन्थ्यो,' मैले भनें- 'ऊ नाचेपछि टीभी बन्द गरे हुन्छ ।'

'फेरि जे पायो त्यही !'

'कतिसम्म भन्नुहुन्थ्यो भने,' मैले भनेँ- 'ऊ नाच्दा देउता नाचेजस्तो हुन्छ रे ।'

'कस्तो जे पायो त्यही !' उसले नाक खुम्च्याई ।

'उहाँ भन्दै हुनुहुन्थ्यो,' मैले भनेँ- 'मेरी नातिनीलाई एउटा राम्रो केटा खोजिदिन पाए हुन्थ्यो ।'

'फेरि जे पायो त्यही !'

'तिमीजस्तै लक्का जवान भए हुन्थ्यो भन्दै हुनुहुन्थ्यो,' मैले भनेँ ।

'कति मस्का लगाउन सक्नुहुन्छ ?'

'उहाँ भन्दै हुनुहुन्थ्यो ...,' म जोडजाड पार्दै थिएँ, उसले रोकी ।

'पुग्यो-पुग्यो,' उसले भनी- 'उहाँको इच्छा पूरा गर्न यहाँको सवारी कहिले हुने त ?'

'नातिनी नाच्ने दिन ।'

'त्यसो भए असम्भव ।'

'के म तिम्रो घर आउन ?'

'म नाच्न ।'

'त्यसो भए मेरो पनि असम्भव ।'

'हाम्रो घर आउन ?'

'होइन, म नाच्न ।'

'कसले नाच्नु भनेको छ र ?'

'तिमीसँग नाच्न भनेर ।'

'हजुरआमासँगै नाच्नुहोला ।'

'म आइनँ भने ?'

'मलाई नाच्नुपर्दैन,' उसले भनी ।



# १

भित्ताको रोगन पूरै फेरिएको दिन मैले ग्यालरीमा जमघट आयोजन गरेको थिएँ । रेसमी कुर्ता र हलुका खैरो जिन्स पाइन्टमा मस्त खुल्दै पल्पसा सबैभन्दा अगाडि आइपुगी । 'हाई !' उसले ढोकामा पसेदेखि यताउता हेर्दैमा आफूलाई अलमल्याउन थाल्दै भनी- 'ओउ, ग्रेट !'

ऊ मेरो ग्यालरी आएको यो पहिलो दिन हो । उसले किताबमा देखेका केही चित्र झुन्डिइरहेकै छन् । ऊ चुपचाप मैनझैँ पग्लिन थालेजस्तो लाग्यो । उसले फ्रेन्च वाइनको बोतल मलाई दिँदै भनी- 'कस्तो अहोभाग्य, म पहिलो पाहुना हुन पुगेछु !'

'म ठान्दै थिएँ,' मैले भनेँ- 'तिमी पनि यहाँ होस्ट नै हौ ।'

उसले मेरो नीलो जिन्स कमिजमा 'न्यु पिन्च' दिएजस्तो गरी । अलि बढी चिमोटे पनि हुन्थ्यो । फुलनले ग्यालरीको पश्चिम कुनामा बार बनाएकी थिई, त्यहीँ लगेर पल्पसाले ल्याएको वाइन राखी । स्न्याक्स आउनै लागेको थियो ।

'हजुरलाई के टक्र्याऊँ ?' फुलनले पल्पसालाई सोधी ।

'झरी' शीर्षकको चित्रबाट ध्यान नखिची उसले जिस्क्याएर जवाफ दिई- 'हजुरलाई के मन लाग्छ, त्यही देऊ ।'

हजुरसजुर लाउनुपर्दैन भनेर मैले सातो टिप्दा पनि उसको बानी किन जान्थ्यो ? पल्पसाको फेला परी, ठीकै भयो । कलेजका साथीहरूको सिको गरेपछि मेरो के लाग्छ ? कुन दिन 'बक्स्योस्' लाउन थाल्ली ! 'स्योस् हउर' भन्न थाली भने म सोझै कलेज गएर उसका साथीहरूलाई झम्टिनेछु ।

पल्पसा चित्रहरूमै व्यस्त भई । ऊ घरी मोबाइल फोनमा मेसेज चेक गर्थी र घरी चित्र हेर्थी । भित्तानेरि उभिँदा एकपटक उसले एसएमएस गरेको देखेँ, सके

कसैलाई जोक पठाएकी हुँदो हो। पात खस्ने क्यानभासतिर सोफिई। छिरिङ आइपुग्यो। ऊ चुपचाप भित्तामा मग्न भयो। कार पार्क गर्ने ठाउँको गुनासो त ऊ सधैँ गरिहाल्छ।

'तिम्रो फ्लाइट कहिले हो ?'

'खै, जाऊँ कि नजाऊँ।'

'किन ?'

'फोटो एक्जिबिसनमा जाँदा पनि आफैँले भाडा हाल्ने ?'

'तिम्रो नेपाली ताल !' मैले भनेँ- 'एक्जिबिसन भनेको बिजनेस डिल गर्ने अवसर पनि हो। आफ्ना फोटा बिकाउन सक्छौ, अन्तर्राष्ट्रियस्तरका थुप्रै ग्यालरी र एजेन्टहरूसँग सम्पर्क हुन्छ।'

'जरुरी छैन,' उसले भन्यो- 'पैसाकै मुख हेऱ्या भए ट्रेकिङ एजेन्सी बन्द गरेर क्यामरा भिर्थें ?'

फुत्त गायक किशोर पनि आइपुग्यो।

हरेक दिन गितार लिएर निस्कने किशोरले अस्ति भर्खर भनेको थियो- 'मेरो अल्बम रिलिज हुँदै छ, तपाईं आउनुपर्छ है !'

अर्को दिन भनेको थियो- 'म्युजिक भिडियो बनाउँछु, तपाईंको ग्यालरीमा सुटिङ गरूँ ?'

'पेन्टिङबारे गीत हो र ?' मैले सोधेको थिएँ।

'गीत पनि कहीँ पेन्टिङसेन्टिङबारे हुन्छ !' उसले मलाई सम्झाएको थियो- 'लभबारे हो।'

'लभ ?'

'अँ,' उसले भनेको थियो- 'मेरो अल्बमको टाइटलै लभ हो– 'द फस्ट लभ बिफोर द सेकेन्ड'।'

म हाँसेको उसले चाल पाएन। उसले कहिल्यै यहाँ आएर चित्रहरू हेरेको मलाई सम्झना छैन। तर उसलाई यो ग्यालरी मन पर्छ। भन्थ्यो- 'यहाँ खिच्यो भने सिङ्गरको घर बुलन्द रहेछ भन्ने इम्प्रेसन पर्छ।'

झन् अर्को दिन आएर उसले फेरि मलाई बिथोलेको थियो- 'ए दाइ ?'

'हजुर,' मैले कूची उचाल्दै पछाडि फर्केर उसलाई सोधेको थिएँ- 'के भयो ?'

'भिडियोमा तपाईं पनि खेल्नुपर्छ है !'

'हा, कहाँ म म्युजिक भिडियोमा खेल्ने !'

'एउटा क्याराक्टर आर्टिस्ट चाहिया छ ।'

'मैले गाउनु पनि पर्छ ?'

'ओठ चलाए हुन्छ,' उसले भन्यो ।

म हाँसैं । 'अनि तिम्री प्रेमिका कहाँ बसेर गाउँछे त ?'

'ऊ स्क्रिनमा आउँदिन, उसको फोटो मात्र आउँछ । यो डुयट सङ होइन नि त !' उसले भन्यो- 'सोलो हो ।'

उसले पनि वाइनको बोतल ल्याएको रहेछ । बाठो गायक ! फुलनले फेरि कुनातिर लगी । मैले पल्पसालाई चिनाइदिएँ- 'ऊ मेरो साथी, गायक हो ।'

'हो दिदी, मैले फस्ट अल्बम रिलिज गर्न लागेको छु,' उसले भन्यो- 'द फस्ट लभ बिफोर द सेकेन्ड !'

पल्पसा पनि हाँसी । उसको मोबाइल बजेको थियो– *तिरिरी मुरली बज्यो वनैमा* ... भाका भरेकी रहिछ आफ्नो सेटमा । हरियो बटन थिचेर 'हेलो...' गरी ।

'किन हाँस्नुभएको ?' किशोरले सोध्यो ।

'टाइटल सुनेर,' मोबाइल अफ गरेर उसले भनी ।

'यो सिरियस सङ हो, टाइटल सङ, ट्राजेडी हुन्छ क्या,' उसले भन्यो- 'तपाईं पनि आउनुपर्छ है मेरो प्रोग्राममा ।'

त्यति बेला ढोकामा दुई जना पाहुना आइपुगेकाले म त्यता लम्किएँ । मगमग बास्ना आइरहेको ताजा बुके लिएर आएका रहेछन् । टेबलमा राखे, यता ल्यापटप भएतिर ।

'मिट माई फ्रेन्ड्स,' म परस्पर चिनाजानी गराउनैमा व्यस्त भएँ किनभने त्यसको दुई मिनेटमै बाँकी चार जना साथी पनि आइपुगे । सबैभन्दा उमेर छिप्पिएका साथी रूपक हुन् । मभन्दा दश वर्ष जेठा भए पनि म उनलाई 'तिमी' नै भन्छु । उनले भित्ताको रोगनको गन्ध र रङ्ग चाल पाइहाले ।

'ब्युटिफुल !' उनले ग्यालरी देख्नासाथ फुर्क्याउँदै भने- 'कतै म अर्को ग्यालरी त आइपुगिनँ ?'

पल्पसा छक्क परी । आज उसलाई खुब फोन आइरहेको छ । 'हेलो ...' गरी ।

'पर्फेक्ट !' उनले भने- 'भित्ताको यो रङ्गले तिम्रा चित्रलाई खुलस्त पारेको छ । बल्ल खुल्यो, पर्फेक्ट !'

'एउटी डच केटीलाई जस जान्छ यसको,' मैले भनेँ । पल्पसाले फोन अफ गरेकी रहिछ, वाल्ल परेर मलाई हेरी ।

'तिमीले आजको गेट टुगेदर यही उपलक्ष्यमा गरेको हो ?' अर्को साथीले सोध्यो ।

'कस्तो लाग्यो त ?'

'पर्फेक्ट,' उनले दोहोऱ्याए । अरूहरू रोगन ठम्याउन थाले । मधुरो भोलुममा कुनाबाट नुसरत फत्तेह अली खान सुनिन थालेको थियो ।

फुलनले स्न्याक्स मिलाउन लागेकी थिई, उसलाई सघाउन म गएँ । 'पर्दैन, पर्दैन,' उसले नखरा पारी- 'म आफैँ सर्भ गरिहाल्छु नि !'

'तिमी सेक्रेटरी पो हौ,' मैले भनेँ ।

'आज पार्टी सेक्रेटरी,' ऊ आफैँ जिस्किई ।

'तपाईं पुरानो जेनरेसन,' किशोर मछेउ आएर भन्न थाल्यो- 'तपाईं कुन जेनरेसनको हो भन्ने कुरा तपाईं कस्तो सङ्गीत सुन्नुहुन्छ भन्नेबाटै थाहा पाइन्छ ।'

सबै जना हाँसे । पल्पसा मात्र अर्को कुनातिर पुगेकी थिई । त्यहाँ ऊ त्यही पात खसिरहेको चित्रमा दत्तचित्त हुन थाली ।

'तिमीले आफ्नो गीत ल्याएनौ क्यारे,' मैले भनेँ- 'नत्र हामी आज न्यु जेनरेसन हुन पाइन्थ्यो !'

'तिमी गाउँछौ ?' रूपकले सोधे ।

'हो अङ्कल,' ऊ फरासियो- 'फस्ट अल्बम निकाल्न लाग्या छु । रिलिज फङ्सनमा तपाईं पनि आउनुपर्छ, है !'

'हामीलाई नबोलाउने ?' कपिलकी श्रीमतीले सोधिन्- 'पपसङको अल्बम हो ?'

'टाइटलबाटै थाहा हुन्छ नि,' मैले भनेँ ।

'के ?'

'द फस्ट लभ बिफोर द सेकेन्ड,' उसले भन्यो- 'यसमा पप पनि छ, र्‍याप पनि छ, रेग्गे पनि छ, ब्लुज पनि मिसा' छु, स्लो सङ एउटा छ अलि सिरियस टाइपको । लास्टमा इन्स्ट्रुमेन्टल पनि राख्या छु ।'

'बाब्बा !' रूपकले जिस्क्याए- 'क्लासिकल हाल्न मात्र बाँकी रहेछ त्यसो भए !'

'को सुन्छ अचेल राग भैरवी ?' उसले भन्यो- 'घाँटी सफा गर्न मात्र कहिलेकाहीँ भजन गाउँछु ।'

'श्रीमन् नारायण ... नारायण ... नारायण !' कपिलकी श्रीमतीले जिस्क्याइन् ।

'यो त फास्ट भजन हो,' उसले भन्यो- 'स्लो क्लासिकलहरू सुन्नुभा' छैन ?'

ग्यालरी हाँसोमय भइरहेका बेला मैले वाइन थपेँ ।

'क्यान आई हेल्प यु ?' मैले पल्पसाछेउ पुगेर वाइनको बोतल ढल्के पारेँ । उसले आँखा भित्तामा टाँसिरही, त्यहाँ 'लाङटाङ इन १९९५' शीर्षकको चित्र झुन्डिएको थियो । मेरो हातको बोतल थप ढल्काएर आफैँ वाइन थपी । त्यसो गर्दा हाम्रा औँलाले स्पर्श गर्न पाए । मेरो दायाँ हातका दुइटा औँलालाई उसका तीनटा औँलाले छोएका थिए । यस्तो लाग्यो, त्यो ग्लास कहिल्यै नभरियोस् । ऊ पनि त्यही कल्पनामा हुनुपर्छ, ग्लास भरिएर जुत्तामा तरर्र हुन थालेपछि मात्र चाल पाई । हामीले हेराहेर गर्‍यौँ । वाइनभन्दा उसको गाला रातो भएको मैले अनुभव गरेँ । उसले मलाई पो जिस्क्याई- 'तपाईंको गाला चुहिएलाजस्तो भयो ।'

'ग्लास थाप न त,' मैले जिस्क्याएँ ।

'म जुसमा विश्वास गर्दिनँ,' ऊ के कम ? भनिहाली- 'ताजा फल कोपर्न मन लाग्छ । जस्तो स्याउ । म दिनको एउटा स्याउ लिन्छु ।'

'मैले ठानेको थिएँ,' मैले भनेँ- 'दिनको चार-पाँचपल्ट कोपरिनुपर्ला ।'

'एउटा कुरा भन त दृश्य,' मछेउ आइपुगेको कपिलले हामीलाई हस्तक्षेप गर्दै भन्यो- 'तिम्रो यो पेन्टिङ 'लाङटाङ इन १९९५' छ नि, के अर्थ छ यसको ?'

'भन्नाले ?'

'लाङटाङ त सधैँ उस्तै देखिन्छ नि १९९५ होस् कि १९८५ वा १९७५,' उसले भन्यो ।

पल्पसाले मलाई हेरी । मैले भनेँ- 'पेन्टिङ बुझ्न तिमीले अलिकता रेखासँगै झुम्मिने रङ्गको भावना बुझ्ने प्रयत्न गर्नुपर्छ । तिमी मेरो लाङटाङ सिरिजमा धेरै लाङटाङ देख्दैनौ तर एउटै लाङटाङलाई भिन्न भावनामा बुझ्न सक्छौ । त्यसमा समय प्रतिबिम्बित छ कि छैन म भन्न सक्दिनँ, तर मुडचाहिँ छ ।'

चित्रकलाको वास्ता नभएकी उसकी श्रीमती पनि हामीछेउ आइन् । रूपक भने यसबीच मैले बनाएको नयाँ पेन्टिङ स्वाद लिईलिई हेर्दै थिए । कपिलकी श्रीमतीले भनिन्- 'म पनि बुझ्न सक्दिनँ ।'

'बुझ्नलाई केही गर्नुपर्दैन,' मैले भनेँ- 'आँखासँगै मनको ढकनी थोरै खोले पुग्छ ।'

'मेरो गीत पनि बुझ्दिनँ भन्ने कति छन् कति !' किशोर हामीछेउ आइपुगेको रहेछ, भन्यो- 'मेरो घरमै बुझ्दैनन् भने अरूलाई के दोष दिऊँ ?'

'तिम्रो गीतमा मिस्कट भाषा हुने भएकाले होला,' छिरिङले भन्यो ।

'एउटा कुरा भनूँ दाइ ? माइन नगर्नुहोला,' उसले भन्यो- 'तपाईं बोलीचालीमा के शुद्ध नेपाली मात्र प्रयोग गर्नुहुन्छ ?'

'सायद गर्दिनँ,' उसले भन्यो- 'म त शेर्पा भाषा पनि मिसाउँछु ।'

'म पनि आफ्नो गीतमा किन अङ्ग्रेजी मिक्स नगर्ने ?' उसले भन्यो- 'रियालिटी भन्या त्यही होइन ? जस्तो तपाईं बोल्नुहुन्छ ... ।'

'हाम्रो आजकालको गीतमा त्यही एउटा समस्या छ,' अलि टाढाबाट रूपकले भने- 'गीत गाएको हो कि बोलेको हो, थाहा हुँदैन ।'

'आजकाल गायकहरू गाउँदैनन्, बोल्छन्,' छिरिङले थप्यो- 'बोल्दाखेरि कहिले चिच्च्याउँछन्, कहिले खोक्छन्, कहिले रुन्छन् ... ।'

हाऽहाऽहाले ग्यालरीमा सानोतिनो कम्पनै गयो । किशोर रातो भयो बिचरा । मैले उसलाई ढाडमा थपथपाउँदै भनेँ- 'तर यो मेरो साथी राम्रो गाउँछ ।'

'सुनेका छौ ?' कृपाले सोधी । ऊ आफ्नो श्रीमान् छिरिङसँग लपक्कै टाँसिएकी थिई ।

'रियाज गरेको सुनेको छु,' मैले भनेँ ।

'कहाँ दाइ ?' किशोरले मतिर हेर्दै सोध्यो ।

'भऱ्याङमा जब तिमी गितार भिरेर हतार-हतार हिँड्दा पनि गुनगुनाइरहेका हुन्छौ ।'

'घाँटी सफा गरेको बेला सुन्या होला,' छिरिङले भन्यो ।

फुलनको हातबाट स्न्याक्स खोसेर आफैँ घुमाउन थालेँ । पल्लोपट्टिको मुढोमा बस्नुअघि मैले दुईपल्ट घुमाएँ । थकित भएजस्तो लाग्यो । अरू पनि बस्न थाले । रूपक र पल्पसालाई अर्को कुनामा गफ गरिरहेको देखेँ । 'चियर्स ...' गरेँ । ग्लास ठोक्न किशोरले खुट्टा उचाल्यो । ऊ फुलनलाई माया गर्छ भन्ने मलाई पहिल्यै थाहा थियो । फुलनले विश्वविद्यालयको पढाइ सकेर मात्र कसैलाई प्रेमसेम गर्छु भनेर अड्डी कसेको पनि मलाई थाहा छ । त्यसैले किशोर आजकाल जिस्क्याउँदैन ।

'एउटी डच केटीले एक दिन यहाँ ग्यालरीमा मलाई परिवर्तन गरिदिई,' मैले भनेँ- 'उसले भनेको पहिला त मैले बुझिनँ । तर पछि थाहा भयो, भित्ताको रङ्गले यी क्यानभासहरूलाई डिष्टर्ब गरेको रहेछ ।'

'उसलाई बोलाएनौ त आज ?' रूपकले भने ।

'यहाँ भए पो,' मैले भनेँ ।

'कुरा त्यसो पो !' कपिलले मलाई जिस्क्यायो- 'मेरो साथी बेलाबेला टोलाउने गरेको कारण बुझियो ।'

'के ?'

'हाम्रो साथीको ध्यान अलि टाढा, खासमा धेरै टाढा हल्यान्डतिर पुग्दोरहेछ र पो !' उसले भन्यो ।

अरूहरू हाँसे, पल्पसा हाँस्न नसकेको मैले ठम्याइहालेँ । मोरो कपिल, बित्थामा सङ्कट निम्त्याइरहन्छ ।

'लिसन,' मैले सबैको हाँसो रोक्ने चेष्टा गर्दै भनेँ- 'ऊ कलाप्रशंसक हो र उसले दिएको सुझाव ठीकै लाग्यो । त्यत्ति हो । नथिङ मोर देन द्याट ।'

'त्यस केटीले तिमीलाई प्रभावित गरेर ठीकै त गरी,' रूपक जान्ने टोपलिए- 'ग्यालरी आज अर्कै भएको छ । मलाई पनि लाग्छ, यी पेन्टिङले न्याय पाएका छन् ।'

'पेन्टिङलाई भित्ताले पनि न्याय दिन्छ ?' किशोरले बुज्रुक प्रश्न गर्‍यो ।

'दिँदोरहेछ, बुझियो नि होइन ?' छिरिङ बाङ्गियो ।

ऊ त फोटोग्राफर हो नि, भित्ता र क्यानभासको मर्म ऊजति अरूले अँठ्याउन सक्दैनन् । तैपनि आफैँ जङ्गिरहेको छ । किन त्यसरी बटारिनुपर्ने ? पल्पसा त्यो पातझैँ खसेर हामीतिर कतै अड्न खोजिरहेकी थिई ।

'दाइलाई त्यो डच केटीले नै उद्धार गरेकी हो,' फुलन जान्ने भई फेरि प्वाक्क बोलेर- 'उसले पहिला कमेन्ट गरेपछि उहाँ महिनौँसम्म ग्यालरी आउन छाडेर ... ।'

मैले उसलाई हेरेँ । ऊ थप्दै थिई- 'पछि भित्ताको रोगन फेर भनेर चिठी के पठाएकी थिई, त्यसपछि उहाँ कति ह्याप्पी हुनुहुन्छ, साँधी छैन ।'

'भित्ता र चित्रबीचको सम्बन्ध पश्चिमाहरू बढी खुट्ट्याउन सक्छन्,' मैले भनेँ- 'जस्तो यी भित्तालाई नीलो पोत्ने हो भने यी पेन्टिङको आकाश मारिन्छ । त्यो खुल्न सक्दैन, होइन ? जस्तो अघि कपिलले देखाएको लाङटाङ शृङ्खला छ नि, ती सबैमा आकाश प्रखर रूपले प्रकट भएको छ । त्यसलाई मैले मानिसको कल्पनासँग उडाएको छु । त्यसको त्यो भ्याल्यु त्यतिखेर रहँदैन जब म यी भित्तालाई पूरै नीलो पार्छु ।'

'ल चियर्स,' रूपकले फेरि ग्लास ठोके ।

ग्लास तानेर उनले भने- 'तिमीलाई म लास्ट दश-एघार वर्षदेखि चिन्दै आएको छु, तिमी यसरी कसैको सुझावबाट सजिलै प्रभावित भएको देखेको थिइनँ । तर राम्रो गरेछौ ।'

'पक्कै पनि त्यो सुझावदाता हिस्सी परेकी, लामो कपाल फरफराउँदै हिँड्ने, इन्टेलिजेन्ट, प्यासिएनेट, चार्मिङ हुनुपर्छ,' उनले यसो पनि भनेर मेरो खिसी गरे ।

'ए दृश्य !' छिरिङ जान्ने भयो फेरि- 'तिमीले च्याटमा फेला पारेकी केटी त होइन नि हइ ?'

पल्पसा कतिखेर ग्यालरीबाट निस्किसकिछ मैले सुइँको पनि पाइनँ । त्यो थाहा पाएर मेरो अनुहार निन्याउरो भएको छिरिङले मात्र अनुमान गर्न सकेको थियो । किशोर गुनगुनाउन थालेपछि बल्ल पार्टी जम्न लाग्यो । पल्पसा केही पनि नभनी निस्केकीले म भेट्नो चुँडिएजस्तो भएँ । किशोरले आफ्नो 'टाइटल सङ' बाटै गाउन थाल्यो । गितार थिएन । के भो त ? औँला छँदै छन् भनेझैँ उसले आफूलाई पूरै खोल्न थालेको थियो । तीन ग्लास मात्रै पिए पनि उसका औँलाले मेरो हृदयका तार चलाइरहे ।



# १०

पखेटा भाँचिएर उड्न नसकेको चराको भ्याटभ्याट सुनिन थालेको थियो। चकमन्न रातमा घरीघरी आइरहेको त्यस्तो आवाजले सपना पनि टुक्राटुक्रा देखिएजस्तो भयो। अरू आवाज थिएन। बिउँझेर पर्दा खोलेँ– बाहिर रारुन्ने थियो। सङ्केत राम्रो थिएन। टेलिफोन बज्यो। कोही आत्तिएको थियो, तारको अर्को छेउमा।

'थाहा पायौ हइ ?' को बोलेको हो, बुझिएन। म झन् आत्तिएँ।

'ए मूर्ख, तिमीलाई थाहा छैन ?' मैले ठम्याउन नसकेको आवाजले मलाई गाली गर्‍यो।

'राष्ट्र अन्धकारमय भइसक्यो, सबै खत्तम भइसक्यो, तिमी के सुतिरा'को ?' त्यस आवाजले मेरो बाँकी निद्रा पनि पूर्ण भङ्ग गर्‍यो। जीउभरि बरफ राखेजस्तो भयो। फोन राख्दा त्यस सुनसानमा एउटा हेलिकप्टरले फुत्त भुइँ छाडेको सुनेँ। त्यसअघि काठमाण्डूको अन्धकारमा हेलिकप्टरको आवाज मैले सुनेको थिइनँ। निदाउन नसकी टेलिभिजन खोलेँ।

अर्को फोन आयो- 'लौ चौपट भयो !'

'के हो, के भा'को हो, मलाई त केही क्लिएर भएन यार !' मैले भनेँ।

'बीबीसी चेक गर,' बल्लबल्ल सम्पर्कमा आएको छिरिङले भन्यो।

बीबीसी र सीएनएनले काठमाण्डूका काठमाण्डू फलाक्न थालेछन्। भारतीय च्यानलहरू पनि मिसिए। फुङ्ग धूलो उडेजस्तो भयो आँखाअगाडि। केही पनि देखिएन केहीबेर। एक्कासि केही विस्फोट भएझैँ टोलवासीको खैलाबैला सुनेर म बाहिर चोकमा निस्किएँ। राजारानी सबैको हत्या भइसकेको रहेछ। र अधिराजकुमारलाई लिन हेलिकप्टर त्यसरी भगीरथ प्रयत्न गर्दै उडेको रहेछ।

हत्या कहिले, किन, कसरी, कहाँ कसले गरेछ भन्ने एकपछि अर्को खुलदुली र सन्त्रासको चर्को माहौल छाडेर म लुसुक्क भित्र आएँ । संसारकै शीर्ष समाचार भइरहेको थियो नेपाल । टेलिफोन यति बज्न थाल्यो, उठाएर साध्यै भएन । सके नेपाल दूर सञ्चार संस्थानको इतिहासकै कीर्तिमान कायम भइरहेको थियो ।

राजधानीका चोक-गल्ली कतै पाइला राख्ने ठाउँ थिएन । घरघरबाट मान्छे निस्केका थिए । अत्यास र अन्योलको कुइरोले उपत्यकालाई सखारैदेखि डम्म ढाकेको थियो । रेडियो र टेलिभिजनका राष्ट्रिय प्रसारणले अविरल शोकधुन प्रसार गरिरहेका थिए । आधिकारिक सूचनाको अभावमा नागरिक अनुहारहरू आकुलव्याकुल थिए । पत्रिकाका भ्यागुते अक्षर फोटोकपी बनेर हारालुछ भइरहेका थिए । सडक केहीबेरपछि कफ्र्यु लागेजस्तै हुँदै थियो । आँखाआँखामा आपत्तिको रन्को थियो । अनियन्त्रित भीड जताततै हुर्किरहेको थियो । झुन्डझुन्डमा उभिएका तन्नेरीहरू नाराबाजी गर्ने तयारीमा थिए । भीडमा थुप्रैको अनुहार कोपरौँलाझैँ राँकिएको थियो । अगाडि एउटा मारुती भ्यान बत्तिँदै थियो, भीडबाट कसैले 'ठोक्, ठोक्' भनेको सुनियो । मान्छेहरू उचालिएको सङ्केत पाएर त्यो यसरी मोडियो, धन्नै दुई-चार जना किचिएनन् । जाँतोझैँ फननै घुमेर तत्काल त्यो अलप भयो । प्रहरी कताकति उभिएका थिए तर ड्युटीमा कोही नखटिएजस्तो लाग्थ्यो । सुरक्षा-स्थिति जटिल भइसकेको थियो ।

राष्ट्रिय सञ्चारमाध्यमबाट खबर फैलिएपछि कान टाठा पारेर सुनिरहेका सर्वसाधारण एक्कासि सडकमा निस्केर घन्किन थाले । पूरा उपत्यका अनिश्चयको चरम सरोबरमा डुब्न थालेको थियो । एउटा भीडबाट निस्कन आँट्दा राजा महेन्द्रको सालिकअगाडि म रौँबराबरले बचेँ । भीडबाट कसैले मलाई हानेको थियो । कानबाट रगत चुहिएपछि म पाखा लागेँ । मैले त्यसरी सोध्नै नहुने थियो । भीडभित्रका आक्रोशित युवकहरूलाई 'षड्यन्त्रै हो भन्ने तपाईंहरूलाई कसरी लागेको हो ?' भन्ने प्रश्न मैले त्यति बेला गर्नु सम्पूर्णतः मूर्खता थियो ।

कपाल खौरिएका तन्नेरीहरूले नाराजुलुस गर्दै सहर गुलजार गरेका थिए । दिवङ्गत राजपरिवारको तस्बिर नलिईकन गाडी कुदाउनु हुँदैनथ्यो । कपाल नखौरिईकन हिँड्नु पनि जोखिम बन्दै थियो । कुनै पनि बेला त्यस्तो व्यक्ति कहीँ पनि असन्तुष्ट युवकहरूको घानमा पर्न सक्थ्यो । टोलटोलमा निःशुल्क कपाल मुण्डन गर्ने क्लबहरूका सूचना टाँसिएका थिए । कपाल खौरिएका युवाहरूको अनियन्त्रित मोटरसाइकल-जुलुसले मुख्य सडक निस्केर दरबारमार्गको दिशा

पक्रेको थियो । राजपरिवारका पाँचै जनाको सामूहिक तस्बिरवाला फ्रेम लिएर गुड्न थालेका युवाहरूको अनुहार हेर्दा सहरमा थप विपत्तिको अनुमान गर्न सकिन्थ्यो । अगाडि मध्यसडकमा बालिएको टायरको धूवाँले आकाश अँध्यारो पार्न थालेको थियो । रूखको छायामा उभिएर टाढा बजेको रेडियो सुन्दा गृह मन्त्रालयको कर्फ्युको सूचना आयो । पसलहरू त खुलेकै थिएनन् ।

त्यो कर्फ्यु केही दिन जारी रहँदै थियो । किनभने पहिरो चलेपछि खुकुलो भएका ढुङ्गामुढा पनि खस्न थालेजस्तो भइरहेको थियो । यही अस्थिरतामा नयाँ नेपाल जन्मिरहेको थियो ।

सडकछेउ तर्किरहेका बेला सुरक्षाकर्मीले निषेधाज्ञा सम्झाउँदै भीड पातलो बनाउन थालेको देखेँ । रत्नपार्कछेउ दङ्गा प्रहरीले भीड तितरबितर पार्न बल प्रयोग गऱ्यो । प्रहरीले लौरो हान्न थालेपछि कैयौँ जुत्ता-चप्पल सडकमै मिल्किए । प्राचीनकालीन राज्यको झझल्को दिने गरी दुई दिनभित्र दोस्रो राजाको शवयात्रा भयो । कर्फ्यु लागेकाले कोही निस्कन पाएन । राज्यारोहणसमेत गर्न नसकेका राजाको अन्तिम दर्शन गर्न सडकमा कोही उपस्थित भएन । छाउनी अस्पतालबाट चक्रपथ हुँदै सीधै पशुपतितिर तेर्सिएको ट्रकमा शव राखिएको थियो । मलामी सैनिकहरू मात्र थिए । अस्पतालमा घोषित भई शय्याबाटै बिदा भएका इतिहासका एउटै राजाको बिदाइका बेला उपत्यकामा मनसुनअघिको झरी दर्किरहेको थियो । आर्यघाटमा हत्तपत्त अन्तिम संस्कार गरियो । मध्यजेठको धूप भए पनि साँझ चिसो थियो ।

कर्फ्युको आदेश कडाइ गर्ने गस्ती प्रहरीका आँखा छलेर मैले एउटा सानो गल्ली पछ्याएँ । भित्रका अर्ध सडक र चोकहरूमा भने प्रहरीमाथि छिटपुट ढुङ्गामुढा भइरहेको थियो । दङ्गा-पहिरनका प्रहरी सञ्चालित थिए । केही दङ्गाकारी पक्राउ परे । केहीले निर्घात लट्ठी खाए । अझै कोहीकोही हट्नै मानिरहेका थिएनन्, ब्ल्याङ्क फायर निम्त्याउँदै । प्रहरी भ्यानको साइरन कताकता निरन्तर सुनिन्थ्यो । रेडक्रसअङ्कित गाडी फाट्टफुट्ट गुडेका थिए । कसैले प्रहरीलाई हानेको एउटा इँटा ढाडमा बज्रेपछि म असन्तुलित हुँदै घ्याररररर बन्द गर्न लागिएको सटरमा अडेस लाग्न पुगेँ । सटर पूरै बन्द भएपछि सिँढीमा आराम गर्न बसेँ । अगाडिबाट आएको भ्यानले नदेखोस् भनेर म रक्सीले बेहोस भएको स्वाङ पार्दै हरिबिजोगले पल्टिएँ ।

राज्यारोहणका लागि वसन्तपुर दरबारमा परम्परागत समारोह भएको केही घण्टा मात्र गुज्रेको थियो । श्रीपेच र राजगद्दीबाट देशवासीलाई एकताको सूत्रमा भावनाबद्ध गर्ने त्यस कार्यक्रमको प्रत्यक्ष प्रसारण भइरहेको थियो । संवैधानिक पदाधिकारी र राजनीतिक नेताहरू दाम राखेर नयाँ राजाको दर्शनढोग गरिरहेका थिए । त्रासदीपूर्ण शुक्रबार-रात्रिको वियोग प्रतिबिम्बित अनुहारका नयाँ राजाको सवारी नारायणहिटीतिर बग्गीमा चलाइयो । सहरमा विरोध प्रदर्शनको सम्भावना देखी सैनिकहरूले कडा पहरा दिएका थिए । घोडचढी सैनिकहरूले मूल सडक नियन्त्रण गरेका थिए र सडक निस्कने साना गल्लीहरूका मुख थुन्न होसियारीपूर्वक तैनाथी दिएका थिए ।

परारै चिनेको एउटा शेर्पा आरोहीलाई हस्याङफस्याङ हिँडिरहेको भेटेँ । भर्खर आमादब्लमतिरबाट झरेको रहेछ आङफुर्वा । अनुहार कालै थियो घाममा डढेर । ऊ चार-पाँच जना गोरा डोऱ्याइरहेको थियो । सडकमा ट्याक्सी थिएन । 'फस्ट क्याम्पमा राति मैले नराम्रो सपना देखेँ,' ऊ भन्दै थियो- 'भोलिपल्ट वेदर बिग्रेपछि हामीले क्लाइम्बिङ एबान्डोन गऱ्यौं ।' उसका अतिथिहरू टक्क अडेर सुनिरहेका थिए । एउटाको नाकमा गहिरै चोट देखिन्थ्यो । भन्यो- 'हिमाल नचढे पनि मैले ई नेपालको यो चिनो लग्ने भएँ, साथीभाइलाई देखाउन ।'

ठमेलबाट दरबारमार्गतिर दौडिरहेको स्पेनियाली अधबैंसेलाई पनि टाढैबाट चिनेँ । औषधि किन्न हतारिएझैँ थियो ऊ । मेरो ग्यालरीमा एक दिन आएको थियो। पेन्टिङ किनुँलाझैँ गरेको थियो, फेरि आउँला भनेर छुट्टिएको पर्यटकलाई मैले त्यहाँ अस्तव्यस्त देखेँ । 'पहाडमा हिउँद' शीर्षक पेन्टिङको रङ्ग खुबै मन पराएको थियो । मैले उसलाई रोकेर सोधेँ- 'के भयो ?'

'प्लेन छुट्ने बेला भयो,' उसले भन्यो- 'ट्याक्सी खोज्न दौडेको । म अब यहाँ बस्दिनँ ।'

'किन ?'

'पत्रकारहरू ओइरिएको ठाउँ पर्यटक बस्नु खतरा हुन्छ,' उसले भन्यो र फुत्त बेपत्ता भयो । 'स्पाइडर म्यान ?' हुन सक्छ ।

सीएनएन, बीबीसीदेखि संसारका सारा सञ्चारमाध्यम अनेकानेक क्यामरा लिएर कभर गर्न थालेका थिए । युद्धग्रस्त क्षेत्रको भान पऱ्यो । अन्तर्राष्ट्रिय सञ्चारमाध्यमको यस्तोविधि ध्यान नेपालले कहिल्यै तानेको थिएन । दरबारमार्गमा ठड्याइएका विभिन्न देशका टेलिभिजन क्यामराले घिरौँलाको थाँक्रोझैँ सेटेलाइट

उभ्याउँदै प्रत्यक्ष प्रसारण गरिरहेका थिए। कोहीकोही होटलै पुग्न नभ्याएर डेडलाइन छोप्न सडकपेटीमै बसीबसी ल्यापटपबाट तस्बिर-समाचार पठाइरहेका थिए। होटल याक एन्ड यतीमा विदेशी पत्रकारहरूको मेला लागेको थियो। पर्यटक जाँदै, पत्रकार आउँदै। काठमाण्डूमा कतै पर्यटकभन्दा पत्रकार बढी थुप्रिएका त छैनन् ?

दरबार-गेटमा फूल चढाउनेको ताँती जहिल्यै उस्तै हुन थाल्यो। म उभिएको बायाँपट्टि दुई वृद्ध एउटा टीभी क्यामराका अगाडि बोल्दाबोल्दै एकै चोटि हिमतालझैँ भक्कानो फुटाइरहेका थिए। हातमा फूल र अगरबत्ती लिएर पङ्क्तिबद्ध महिलाहरू मैनझैँ पग्लिरहेका थिए।

'जेठ १९' शीर्षकमा दुइटा चित्रका विषय र रङ्ग कल्पना गर्दै घर फर्कें। गेटनेरि आरु-बोटको आडमा एउटा मान्छे ठिङ्ग उभिएको थियो। क्यापले चस्मा र चस्माले आँखा छोपेर टोलाइरहेको थियो ऊ। मलाई देखेर सतर्क भयो। झुस्स दाह्री पालेको, अग्लो, दुब्लो, गहिरो खाडल परेका गाला, गऱ्हुङ्गो झोला बोकिरहेको। चिनेचिनेजस्तो लाग्यो।

'नमस्कार,' उसले दुवै हात जोड्यो र भन्यो- 'म सिद्धार्थ।'

एक्कासि हिउँमा चिप्लिएझैँ भएँ म। जुत्ता हेरेँ। म केही बोल्न सकिनँ, उभिरहेँ।

'भित्र आऊ,' मैले आफ्नै उमेरको अतिथिलाई निम्त्याएँ। बैठककोठाको एउटा पेन्टिङमा ऊ घोरियो। त्यस क्यानभासभित्र म पढेको प्राथमिक विद्यालय थियो, आँखै रसाउने। बन्दै नहुने ढोका, वर्षामा चुहिने ढुङ्गाको पातलो छाना, बतास छिर्ने उदाङ्ग झ्याल, भित्र बेन्चहरू लथालिङ्ग, प्राङ्गणको धूलो फुङ्ग उडेको देखिन्थ्यो। गाउँको सिरान बच्चाबच्ची कोही लुडो खेलिरहेको, कोही गुच्चा हानिरहेको, कोही टालाको बल हुत्याइरहेको र कोही *गाउँछ गीत नेपाली, ज्योतिको पङ्ख उचाली* ... गाइरहेको हाफट्यामका बेला मैले त्यो रचना गरेको थिएँ।

बुकीफूलको उकालोपछि चौरमा देउराली ढुकिरहेको विद्यालय देख्दा जुनसुकै पहाडको झझल्को आउँथ्यो।

'अस्ति भर्खर यहाँ विस्फोटन भयो,' मैले उभिएर बमको छर्राले प्वाल पारेको भित्ता 'ऊ यहीँनेर हो' देखाएँ। 'दुई कक्षाकी एउटी बालिका मरेको त तिमीले समाचार पढ्यौ होला, एउटा विद्यार्थीको खुट्टा भाँचियो।'

ऊ निःशब्द त्यही चित्रमा घोरिरह्यो ।

'यसका दुई जना शिक्षक छ वर्षको दौरान मारिइसके,' मैले थपेँ- 'एक शिक्षकले धानिरहेका छन् ।'

'तपाईंले के अर्थ दिन खोज्नुभएको ?' उसले सोध्यो ।

'यो हाम्रो देश र समयको झलक हो,' मैले भनेँ ।

'कसरी ?'

'यो चित्रले देशको मर्म बोलेको छ अहिले,' मैले भनेँ- 'मेरो देश कस्तो अवस्थामा छ भनेर खुलदुली लाग्यो भने म यही हेर्ने गर्छु ।'

'क्षमा गर्नुहोला,' उसले भन्यो- 'म पनि दोषी छु यसका लागि । तर खासमा कोही दोषी छ भने त्यो हो यहाँको पुरानो जकडिएको राज्यसत्ता ।'

'के भन्न खोज्यौ ?'

'म भूमिगत छु,' उसले धक नमानी सानो स्वरमा भन्यो- 'र अहिले तपाईंकहाँ सेल्टर लिन आएको ।'



# ११

'तपाईंलाई के लाग्छ ?' म काउचमै निदाएको थिएँ । सिद्धार्थ उठिसकेछ, सोध्यो- 'यो घटना कसरी भयो ?'

मैले बुझिनँ । चकित छु । कलेजका दिन सम्झेर माया लाग्छ । हत्या-हिंसामा उत्रेको छ, डर लाग्छ । बास दिएँ, सुरक्षा निकायको आँखा लाग्ला । नदिए भवितव्यमा पार्ला । बिलखबन्दमा छु । निरुपाय उभिरहन्छु, उसलाई हेर्छु, बिहान पनि त्यही चित्र एकटक नियाल्यो र किचनतिर गयो ।

'कुन घटना ?' उसले चिया ल्याएपछि मैले उभिँदै सोधेँ ।

'अहिले तपाईं कुन घटना सम्झिनुहुन्छ र ?' काउचअगाडिको टेबलमा पत्रिका मिलाउँदै उसले सोध्यो । मतिर नहेरी ।

'दरबारको ?'

'हजुर,' उसले भन्यो चिया तान्दै । मैले पानी पिएँ । ओरेन्ज जुसको बट्टा निथोरेँ, ससाना दुई ग्लास भयो । ऊ भने चिया लिँदै थियो, तैपनि उसको हातमा जुस थमाएँ । उसले टेबलमा राख्यो ।

'म केही सोच्न सकिरहेको छैन,' मैले भनेँ ।

'भर्खर बिउँझ्या भएर ?'

'होइन,' मैले भनेँ- 'यो यति त्रासद घटना छ जसको तत्काल विश्लेषण गर्ने सामर्थ्य ममा छैन ।'

ऊ टोलायो । चिया सक्यो । ग्लास टेबलमा राखेर पत्रिका पल्टाउन थाल्यो । ऊ आफैँले ढोका खोलीवरी ल्याइसकेको रहेछ । फोन बज्यो । अमेरिकाबाट घरबेटीले गरेका रहेछन् । के छ हालखबर भन्दै थिए । मैले 'तपाईंको घर सकुशल छ' भन्ने जवाफ दिएँ । उनले मेराबारेमा सोधेका रहेछन् । 'ठीकै छ' भनिदिएँ ।

घटनाका बारेमा जान्न खोजे । मैले जानेबुझेको बेलीबिस्तार लगाएँ । उनले गाली गरेजस्तो लाग्यो- 'यति कुरा त हामीले इन्टरनेटबाट थाहा पाइसक्यौँ । तपाईंको व्यक्तिगत इम्प्रेसन भन्नुस् न !'

'म थाकेको छु डाक्सा'प,' मैले भनेँ । उतापट्टिको फोन उनकी छोरीले लिइछ, सोध्दै थिई- 'दाइ, मेरो पप्पी भेट्नुभयो ?'

उस् ! जाबीलाई अमेरिका उडेपछि पनि त्यही कुकुर सम्झिनुपर्ने ? मैले इमेल गरिदिएकै थिएँ- भाग्यो भनेर । फेला परेको भए म खबर गरिदिइहाल्थेँ । गोआ यात्रा गर्दा मैले छिरिङलाई पाल्न दिएको थिएँ, त्यहीँबाट हरायो । उसले पत्रिकामा सूचना पनि निकाल्यो कुकुरको तस्बिरसहित । फेला पारिदिनेलाई राम्रै पुरस्कार पनि घोषणा गरेको थियो, तर के लाग्छ ? मनाङतिरबाट ल्याएको हाइब्रिड तिब्बती कुकुर उसले अमेरिका उडाउन सकिन र आफ्नै घरमा छाड्ने बेला मलाई धेरैबेर सम्झाईवरी गरेकी थिई । तिथिभन्दा एक साताअघि नै पप्पीको बर्थडे गरीवरी उनीहरू हिँडेका थिए ।

म यति व्यस्त छु, कसरी त्यसको हेरविचार पुऱ्याउन सक्छु ? के कहिलेकाहीँ कुकुरसँग जिस्किनुको अर्थ म ऊसँग रत्तिन सक्छु भन्ने हो ? मलाई खासै चाख छैन कुकुर-बिरालामा । हरायो त के गर्ने ? छिरिङ पनि उत्तिकै दुःखी छ । उसलाई केको चिन्ता उति टाढा बसेर ? आखिर लैजान पाउने होइन र हेरचाह गर्न आउने पनि होइन । उसले फेरि 'केवँराको फूल कस्तो भइरहेछ ?' भनेर सोधी । यो उष्णतामा मलाई फूलसुलभन्दा देश कता जाने हो भन्ने चिन्ता भइरहेछ । यो कुरा ऊ बुझ्न सक्दिन । उसले श्रुतिका बारेमा भने निकै मर्म जनाई । लगभग एउटै उमेर हो क्यार उसको र अधिराजकुमारीको । यहाँ हुन्जेल निकै कुरा गर्ने गर्थी । मलाई पनि स्वाद लाग्थ्यो, विशेष गरी श्रुति आफैँ चित्र कोर्ने र प्रदर्शनीहरू उद्घाटन गर्न उत्साही देखेर । उनको अकाल मृत्युले मलाई पनि दुःख लागेको छ । छाउनीको सट्टा वीर अस्पताल पुऱ्याएको भए उनको ज्यान बच्ने थियो भन्ने लाग्छ । राजा वीरेन्द्रको वंशको कोही जीवित रहने थियो । श्रुतिका दुई साना काखे नानीको तस्बिर देखेर विह्वल भएको थिएँ म ।

'घरबेटी रहेछन्,' मैले भनेँ- 'डीभी परेर अमेरिका बसाइँ गए तर मलाई सास्ती !'

'किन ?' सिद्धार्थले सोध्यो ।

'फोन गरिरहन्छन् घरका बारेमा चासो दिएर,' मैले भनेँ- 'कुकुर थियो, हरायो, त्यसको चिन्ता मैले नै गर्नुपर्ने !'

सिद्धार्थ केही बोलेन ।

'म कमजोर रहेछु,' मैले भनैं ।

'किन ?'

'बेचैन छु ।'

'किन ?'

'आफ्नो साथीलाई यतिका वर्षपछि भेटेर पनि म खुसी छैन ।'

ऊ पत्रिका पल्टाउँदै थियो । केहीबेर टोलाएर भन्यो- 'यो अकस्मात् भएको घटना होइन ।'

मैले उसको अनुहार हेरैं, थप्यो- 'राष्ट्रिय परिदृश्यमा सोच्नुभयो भने यो घटनाले धेरै सङ्केत गरेको छ । मलाई लाग्छ, यसले देशमा थप विपत्ति ल्याउँदै छ ।'

'विपत्ति त तिमीहरूले नै ल्याइसकेका छौ,' मैले भनैं ।

'त्यस्ता राजाको हत्या भयो जो ब्यारेकबाट सेना निकाल्न चाहिरहेका थिएनन्,' उसले भन्यो- 'त्यस्ता राजा जो जनआन्दोलनलाई देशभित्रकै शक्तिहरूमाझ सहमति गराउन चाहन्थे ।'

उसको तर्क विरोधाभासपूर्ण लाग्यो । 'सेनासँग लड्न तिमीहरू नै तम्तयार बसिरहेका छौ, तिमीहरू नै आह्वान गरिरहेका छौ,' मैले भनैं- 'जसविरुद्ध गणतन्त्रको अभियान सुरु गऱ्यौ उसैका बारेमा सकारात्मक चिन्तन गर्न थाल्दै छौ ।'

'हामीले समग्रतामा हेर्ने हो र गुणदोषका आधारमा व्यक्तिको इमानदार विश्लेषण गर्ने हो,' उसले भन्यो ।

मेरा आँखाअघि क्यानभासमा रातो रङ्गको एउटा अस्पष्ट आकृतिमा ठिमीकी एक महिला छन्, रातो फेरो भएको कालो धोतीमा सजिएकी । जात्रामा उनीसँगै एउटा पुरुष छ जसले भादगाउँले टोपीमा दायाँ कानमाथि कागजको फूल झुन्ड्याएको छ । भोजमा जाने चिह्न हो त्यो । महोत्सवको मनस्थिति झल्काउने त्यस चित्रमा मैले धेरै रातो किन पोतैं, अहिले ठम्याउन सक्दिनँ । ऋतु-परिवर्तनको सङ्केत पनि छ त्यसमा । उसले हेरेको त्यस चित्रमा पोतिएको रङ्ग रगतजस्तो लागिरहेछ । र त्यो क्यानभासबाट चुहिन आँट्दै छ ।

'पेन्टर बाबू !' घरबेटीले फेरि फोन गरे- 'अघि लाइन काटियो ।'

उफ् ! मलाई यो 'पेन्टर बाबू' भनेकै चित्त बुझ्दैन। साइनबोर्ड लेख्ने कमर्सियल आर्टिस्ट भन्ठान्छन् उनी मलाई। कसरी उनी प्राध्यापक भए ? कसरी विद्यावारिधि गरे सामाजिक अर्थव्यवस्थामा ? र कसरी धेरै वर्ष सरकारका विभिन्न निकायमा सल्लाहकार, कहिले परामर्शदाता भएर बिताए ? 'अचेल इमेल गर्नुभएको छैन नि ?' भनेर उनले मलाई घोच्न खोजे। म कत्ति न उनलाई इमेल गरिरहनेजस्तो ! यहाँको परिस्थितिबोध गर्न नसकेको देखेर चित खाएँ। म आफैँ पनि कम्ती व्यस्त छैन। के उनको घरमा बसिदिनुको ब्याज मैले देशका बारेमा सधैँजस्तो खबर दिएर उनलाई तिर्नुपर्ने हो ? देशको त्यस्तो सुर्ता छ भने किन विदेशिनुपऱ्यो ? त्यतिका वर्ष देश बसेर उनले के योजना गरे, के विचार र चिन्तन दिए, कस्तो बन्यो देश ? अनि उनैलाई केको यत्रोविधि चासो ? के उनलाई आफूले बनाउन नसकेको देशका बारेमा जिम्मेवारीबोध हुँदैन ?

'यता त आइयो,' उनले भने- 'तर श्रीमती झ्याम्मिन सकेकी छैनन्। म एउटा डिपार्टमेन्टल स्टोरमा काम गर्न थालेको छु, म्यानेजर छु भनुँ न। राम्रै छ तर जतिखेर पनि त्यतैको सम्झना आउँछ।'

'हेलो,' उनकी श्रीमतीले फोन लिइछन्, भनिन्- 'मेरो त्यो पूजाकोठाको ख्याल गरिदिनू है बाबू !'

'हवस्,' मैले भनेँ। उनको पूजाकोठा त मैले कहिल्यै खोलेको पनि छैन। कहिलेकाहीँ राति मुसा दौडेको सुन्छु। मुसा भगवान्कै चेलो भएर होला। फोन राखेर कफी तानेँ। सेलाउँदै रहेछ। अर्को कप बनाउन किचन गएँ।

'मलाई एउटा चित्र फेरि हेर्न मन छ।'

'कुन ?'

'तपाईंले सायद बिर्सनुभयो,' उसले मतिर हेर्दै भन्यो- 'मेराबारेमा चित्र बनाउनुभएको थियो।'

'ए हो ?' मैले भनेँ। घोत्लिएँ।

धेरैअघि बाटामा भेटेको दिन ग्यालरी लगेर उसलाई दुई दिनसम्म स्टुलमा स्थिर राखी मैले उसको आकृति निकालेको थिएँ र त्यसैका आधारमा एउटा कथा चित्रण गरेको थिएँ। म त्यो राजनीतिक स्फूर्ति र ऊर्जा खिच्न चाहन्थेँ जसमा तन्नेरीहरू कस्तो नेपाल चाहन्छन् भन्ने प्रकट होस्। ऊ हाम्रो कलेजको एउटा नेता थियो। चौरमा विद्यार्थीहरू गोलबद्ध गरी उसले बहस गर्ने गरेको म

हेरिबस्थेँ । म कहिल्यै ऊसँग दोहोरो बोल्दिनथेँ किनभने मलाई राजनीतिमा खास रुचि थिएन । तर त्यो गोलबद्ध विद्यार्थी-झुन्ड र बेलामौकामा विषयले रन्काउने सिद्धार्थ र उसका साथीहरू मलाई चाख लाग्थे । जुनियर विद्यार्थी भईकन पनि तिनले मलाई आकर्षित गरेका थिए ।

उसको आकृतिलाई एउटा पात्र बनाएर तत्कालीन देशबारे बनाएको चित्र मेरो पहिलो प्रदर्शनीमै बिकेको थियो । अङ्ग्रेजी शीर्षक भए पनि त्यसको आशय 'हामी के चाहन्छौँ ?' भन्ने युवाबोल थियो जुन चित्र प्रदर्शनी निखिने बेलातिर एक सज्जनले खरिद गरेका थिए । ती सज्जन अहिले नेपालमा छैनन् । राजनीतिक चेत भएका चित्र खरिद गर्ने त्यस्ता सज्जन नबसेपछि देशको शोभा कसरी बढोस् ? उनी विदेशी विश्वविद्यालयमा पढाउँछन् भन्ने सुनेको छु । बेलायत ? हो जस्तो लाग्छ । उनको भिजिटिङ कार्ड मैले कता थन्क्याएको छु, तर त्यो चित्र उनले आफूसँगै लगे भन्ने चाल पाउँदा मलाई निकै गर्व लागेको थियो । उनले त्यो चित्र त्यति बेलाको दरअनुसार निकै महँगोमा खरिद गरेका हुन् । उनकी श्रीमती विदेशी हुनुको कारण पनि हुन सक्छ । ती महिला यौवनकालमा नेपाल आएकी थिइन्, विश्वविद्यालयको पोस्ट ग्र्याजुएसनको थेसिसका लागि । र त्यही बेलाको जम्काभेटले तिनलाई प्रेमालापमा परिणत गरिदिएको थियो, पछि त विवाह गरीवरी बच्चाबच्ची हुर्काइसकेका थिए । ग्यालरी आएको दिन उनले आफ्ना दुवै साना छोरी ल्याएका थिए । क्रस भएका हुनाले हलक्क बढेका, कालो कपाल तर गोरो वर्णका ती पुतलीजस्ता छोरीहरूलाई बोकाएर उनले त्यो चित्र लगेका थिए । उनकी श्रीमतीले मलाई केही राजनीतिक प्रश्न पनि गरेकी थिइन् । त्यस चित्रको भावभूमि उनी जान्न उत्सुक थिइन् । 'होइन-होइन, म मार्क्सवादी होइन,' मैले स्पष्टीकरण दिनुपरेको थियो- 'म कुनै वाद अनुसरण गर्छु भने त्यो हो सौन्दर्यवाद !'

'मैले वियोगान्त बनाउनुपर्ने रहेछ त्यस चित्रलाई,' मैले सिद्धार्थलाई भनेँ ।

'किन ?' उसले सोध्यो- 'तपाईं आफैँले व्याख्या गरेअनुसार म अभूतपूर्व उमङ्गले भरिएको पात्र निर्माण भएको थिएँ ।'

'म तिमीलाई त्यस्तो जाज्वल्यमान नबनाउन सक्थेँ,' मैले भनेँ र ऊतिर हेरेँ ।

'तपाईंले मलाई युवा आन्दोलनको पात्र बनाउन खोज्नुभएको थियो ।'

'अनि ?'

'आन्दोलनको पात्रलाई तपाईंले कसरी वियोग दिन सक्नुहुन्थ्यो ?'

'तिमी गोली लागेर ढलेको बनाउन सक्थैं ।'

'मलाई ढालेको भए,' उसले भन्यो- 'तपाईंले अर्कैलाई प्रमुख पात्र बनाउनुहुन्थ्यो ।'

'किन ?'

'किनभने मैले तपाईंको चित्रको भार बोक्न सक्ने थिइनँ ।'

'कसरी ?'

'जुन पृष्ठभूमिको चित्रणमा तपाईंको चित्र आधारित हुनुपर्छ,' उसले भन्यो- 'एउटा असफल नायकले त्यो जिम्मेवारी लिन सक्थेन ।'

'म आशावादी नभएको भए ?'

'तपाईंको दृष्टिकोण गलत हुन्थ्यो,' उसले भन्यो- 'चित्रकारले समाज हेर्छ, समाजको वैज्ञानिक विश्लेषण गर्छ, समाज अपूर्व आशाको अबिरले रँगिएको हुन्छ ।'

'त्यसो भए गल्ती कहाँ भयो त ?'

'तपाईंले हतार गर्नुभयो ।'

'कसरी ?'

'तपाईंले त्यो चित्र बलजफ्ती टुङ्ग्याउनुभयो,' उसले भन्यो- 'त्यो वस्तुनिष्ठ भएन ।'

'किन ?'

'म चाहन्थैं चित्रले एउटा तार्किक निष्कर्ष देओस्,' उसले भन्यो- 'तर तपाईंले मलाई रोक्नुभयो ।'

'तिमीले त्यति बेला केही पनि त भनेनौ,' मैले भनें- 'तिमी उल्लासमा थियौ, होसमा थिएनौ ।'

'तपाईंले मलाई सोध्नुभयो ?'

'तिम्रो अनुहार तिम्रो जवाफ थियो ।'

'त्यही त गल्ती भयो,' उसले भन्यो- 'खासमा म के चाहन्थैं तपाईंले ठम्याउन सक्नुभएन ।'

'तिमी के चाहन्थ्यौ ?'

'म चित्रको आत्मा नै परिवर्तन गर्न चाहन्थैं,' उसले भन्यो- 'तपाईं रूपमा जानुभयो, सारमा जानुभएन । अनुहारको विश्लेषण गर्नुभयो, आँत छाम्नुभएन ।'

'भन्नाले ?'

'तपाईंले मलाई एउटा पात्रका रूपमा प्रस्तुत गर्नुभयो,' उसले भन्यो- 'प्रवृत्ति मान्नुभएन ।'

'के फरक पर्छ ?'

'म प्रवृत्तिको भूमिका गर्न चाहन्थेँ,' उसले भन्यो- 'तपाईंले मलाई रोमान्टिक हिरो बनाइदिनुभयो । म एउटा पात्रमा सीमित भएँ ।'

'तर मैले तिमीलाई त्यत्रो भूमिका दिएको थिएँ ।'

'व्यक्तिगत भूमिकाले के गर्छ ?' उसले भन्यो- 'म प्रवृत्तिगत भूमिका लिन चाहन्थेँ ।'

'तिमी परिपक्व थिएनौ,' मैले भनेँ- 'र, म पूरै चित्र पुनर्लेखन गर्न पनि तयार थिइनँ । त्यति बेलाका लागि त्यो चित्र आफैँमा एउटा परिवर्तन थियो । समकालीन चित्रकलामा त्यो दह्रो र शैलीवान् चित्र थियो ।'

'मैले बनाउनू भनेको थिएँ ?'

'थिएन ।'

'अनि ?'

'तिमीलाई जे सोचेर मैले बनाएको थिएँ,' मैले भनेँ- 'तिमी उल्टो निस्क्यौ ।'

'तपाईं दिग्भ्रमित हुनुहुन्छ,' उसले भन्यो- 'मेरो चरित्र तपाईंले यसरी निर्माण गरिदिनुभएको छ, म जहाँ जे जसरी जहिले भए पनि एउटा निश्चित उद्देश्यका लागि लड्थेँ-लड्थेँ ।'

'मैले तिमीलाई विद्रोही पात्रका रूपमा परिकल्पना गरेको थिइनँ ।'

'त्यही त भन्दै छु,' उसले भन्यो- 'तपाईंले एउटा यस्तो मूर्ति बनाउनुभयो, त्यसको रूपको वशमा पर्नुभयो, ऊभित्रको स्वभाव कस्तो बनिरहेको छ तपाईंलाई हेक्का भएन ।'

'मैले सोचेको थिएँ,' मैले भनेँ- 'तिमी परिवर्तन चाहन्छौ, सकारात्मक परिवर्तन र त्यसको माध्यम तिमी शान्तिपूर्ण आन्दोलनलाई बनाउँछौ ।'

'त्यही त तपाईंको अदूरदर्शिता भयो,' उसले भन्यो- 'मलाई समय र देशमुक्त पात्र बनाइदिनुपर्थ्यो ।'

'किन ?'

'त्यसो भए तपाईंलाई कुनै समस्या पर्ने थिएन,' उसले भन्यो- 'म तपाईंकहाँ सेल्टर लिन आउने थिइनँ ।'

'त्यस्तो चरित्र काल्पनिक हुन्छ,' मैले भनेँ- 'त्यस्तो पात्रले चित्र कस्तो बनाउला ?'

'हो, बल्ल बुँदामा आउनुभयो मेरा आदरणीय चित्रकार,' उसले भन्यो- 'तपाईं आफ्नो रचनालाई जीवन दिन चाहनुहुन्छ र पात्रहरू जीवन्त होऊन् भन्ने चाहनुहुन्छ भने आफ्नै पात्रको विकासबाट किन अतालिनुहुन्छ ?'

'के यो तिम्रो विकासको रूप हो ?'

'विध्वंसकारी भन्नुहोला तपाईं ।'

'भनेँ भने ?'

'ध्वंस केका लागि ?' उसले भन्यो- 'नयाँ रचनाका लागि ।'

'ध्वंस नगरी नयाँ काम हुँदैन ?'

'केको ध्वंस भन्ने प्रश्न अहम् हुन्छ,' उसले भन्यो- 'यो जकडिएको राज्यलाई नयाँ जीवन दिन यसको मक्किएको स्वरूपमाथि प्रहार गर्नुपर्छ । हामी त्यही गर्दै छौँ ।'

'तर यहाँ जनता मर्दै छन् ।'

'पुरानो सत्ताका केही प्रतिनिधि, केही सुराकी र केही घानमा परेर मारिएका छन्,' उसले भन्यो- 'तपाईं समभ्रूदार हुनुहुन्छ, यस्तो कुरा आफैँ बुझ्न सक्नुहुन्छ । यो अवस्था कसरी सिर्जना भयो ? के राज्यले हामीमाथि पहिला हिंस्रक आक्रमण गरेको होइन ? हाम्रा निहत्था मान्छेलाई जेलनेल, शारीरिक यातना र गोली हान्नेसम्मका काम भएका होइनन् ?'

'त्यसको प्रतिरोध गोलीले नै गर्नुपर्थ्यो ?'

'विकल्प के थियो ?' उसले भन्यो- 'थिचिएका, पेलिएका जनताले त्यसको प्रतिकार सही ढङ्गले गर्न हतियार उठाए । हतियारबिनाको आवाज राज्यले कहिल्यै सही ढङ्गले सुन्न खोजेको छ ?'

'के हाम्रो समाज यति हिंसात्मक छ ? यसको प्रकृति त्यही हो ?'

'जनतालाई शान्ति होइन, न्याय चाहिएको छ,' उसले भन्यो- 'शान्तिको निहुँमा जनताको जीवनमा अशान्ति भएको कसले हेर्ने ? न्याय हुन्छ भने शान्ति आफैँ हुन्छ । राजा वीरेन्द्रले न्यायपूर्ण देश बनाउनुको सट्टा शान्तिक्षेत्र घोषणा गरे, त्यसमा सहमत हुन सकिन्न ।'

म चुप लागेँ । उसले थप्यो- 'हामीले शान्तिपूर्ण देश खोज्ने होइन, न्यायपूर्ण देश माग्ने हो ।'

'न्यायका लागि जनतामाथि अन्याय गर्नु कुन काइदा हो ?'

'न्याय के हो, अन्याय के हो छुट्ट्याउने क्षमता तपाईंसँग हुनुपर्छ ।'

'छैन जस्तो लाग्छ ?'

'मैले चाहेको भूमिका गर्न पाएको भए न तपाईंको यो तस्बिरजस्तो स्कुल देख्नुपर्थ्यो,' ऊ भन्दै थियो- 'न देशको दुरवस्थाको छिटा राजाको दरबारमा पनि पर्थ्यो ।'

'तिमी अमूर्त व्यञ्जना गर्न थाल्दै छौ ।'

'किन ?'

'दरबारलाई कसरी मुछ्न सक्यौ ?'

'तपाईं यो स्कुललाई देशको प्रतिबिम्ब मान्नुहुन्छ,' उसले भन्यो- 'म त त्योभन्दा सक्कली प्रतिबिम्ब दरबारलाई मान्छु ।'

'किन ?'

'किनभने देशको जर्जर अवस्थाको प्रतिच्छाया हो त्यो । हरेक घर जीर्ण भइरहेको छ । परिवारमा सिर्जित सङ्घर्षको अन्तरसम्बन्ध र अन्तर्प्रेरणा देशको समग्रतामा नियाल्नु नै वैज्ञानिक मूल्याङ्कन हो ।'

'तर यसमा त कसको सनकले गोली चलाएको हो, प्रस्ट आएको छैन र ?'

'हो भने पनि त्यो सुविधासम्पन्न, आलिसान चार दिवारमा युवराजलाई सडाएर गाँजा, चरेस, रक्सी र बन्दुकमा लिप्त सनकी किन बनाइयो ?'

'राजाको ध्यान पुगेन ।'

'तपाईं घटना बुझ्न सक्नुहुन्न भन्ने लाग्दै छ अहिले,' उसले भन्यो ।

म उसलाई हेर्न विवश भएँ । किनभने ऊ मेरा तर्क अस्वीकार गरिरहेको थियो ।

'तपाईं व्यक्तिको कुरा गर्नुहुन्छ,' उसले भन्यो- 'म संस्थाको गर्न खोज्दै छु ।'

'व्यक्तिले संस्था बनाउँछ र चलाउँछ,' मैले भनें- 'म व्यक्तिगत स्वतन्त्रताको पक्षपाती हुँ ।'

'तपाईं व्यक्तिलाई जोड दिनुहुन्छ, त्यही कारण तपाईंका सोचाइ धेरै माथि उठ्न सकेका छैनन्,' उसले भन्यो- 'हामी देश बनाउनुपर्छ भन्ने आन्दोलनमा छौं ।'

'म तिम्रो मान्यता बुझ्ने चेष्टा गर्दै छु,' मैले भनें- 'तर तिम्रा नीतिगत अस्पष्टता र कार्यशैलीगत विरोधाभास सही ठम्याउन सक्दिनँ ।'

'म तपाईंकहाँ आउनुको खास कारण त्यही हो, तपाईं मलाई बुझ्न सक्नुहुन्छ र हामीले चाहेको परिवर्तन खुट्ट्याउन सक्नुहुन्छ । तपाईं त्यही चित्रकार हो जसले मलाई प्रेरित गरेको थियो । म त्यसैबाट हौसिएर पनि हिँडेको हुँ ।'

'कहाँ ?'

'भूमिगत हुन,' उसले भन्यो- 'त्यसपछि म खुकुरीको धारमा हिँडिरहेको छु ।'

'तिमीलाई राजनीतिक भूमिका दिएर मैले गल्ती गरेँ ।'

'तपाईं आफ्नै छाया देखेर तर्सिनुभएको छ ।'

'मैले तिमीलाई विद्यार्थी बनाउनुपर्ने रहेछ ।'

'अनि म के राजनीति गर्दिनथेँ ?'

'तिमी वकिल बन्न सक्थ्यौ ।'

'झन् बढी बहस गर्न सक्थेँ कि ?'

'पत्रकार भएको भए ?'

'देशको अन्तरङ्ग अनुसन्धान गरेर तपाईंलाई झन् अत्याउँथेँ कि ?'

'सङ्गीतकार पनि हुन सक्थ्यौ ।'

'के थाहा ?' उसले भन्यो- 'म झन् जनतालाई उचाल्ने गीत-सङ्गीत गर्थें कि ?'

'तिमीलाई किसानका रूपमा प्रस्तुत गरेको भए ?'

'कोदाली लिएरै क्रान्ति गर्थें कि ?'

'कामदारका रूपमा कोरिया, अरब पनि पठाउन सक्थेँ ।'

'झन् उतैबाट गोर्खालीहरू बटुलेर ल्याउँथेँ कि ?'

'अमेरिका पठाएको भए त ढुक्कै हुन्थ्यो होला ।'

'तपाईं कसरी सोच्नुहुन्छ म जहाँ पठाइन्थेँ त्यहींको रामविलासमा भुल्ने थिएँ ?' उसले भन्यो- 'सङ्गठन गरेर जहाँबाट पनि म परिवर्तनको शङ्ख बजाउन सक्थेँ ।'

'तिमीले हतियार बोकेकामा म क्रुद्ध छु ।'

'तपाईंको प्रभाव, तपाईंको चित्रले मलाई उक्साएको छ,' उसले भन्यो- 'म जे छु त्यसको ठूलो श्रेय तपाईंलाई जान्छ । नत्र म अर्थशास्त्रको उच्च अध्ययन गरेर प्राध्यापक बन्ने ताकमा थिएँ । जुन दिन तपाईंले मेरो चित्र बनाउनुभयो, त्यसै दिनदेखि म एउटा योग्य नागरिक बन्न सक्छु र जनतालाई क्रान्तिको आँधीमा परिणत गर्न सक्छु भन्ने हिम्मत बढेको हो ।'

'गलत,' मैले भनेँ- 'कति योग्य नागरिक बन्यौ भविष्यले मूल्याङ्कन गर्नेछ । तर तिमी आफैँ खुकुरी बनेर प्रिय नेपाली शरीरहरू छिनालिरहेका छौ, त्यसले देशमा लामो रिक्तता र तिक्तता मात्रै उत्पन्न गर्नेछ ।'

'तपाईं चित्रकारका रूपमा समाज परिवर्तनको उद्देश्य राख्नुहुन्न ?'

'राख्दिनँ,' मैले भनेँ- 'समाज सुधार्ने चित्रको उद्देश्य हुँदैन । चित्रकारिता राजनीति होइन । चित्र सङ्गीतजस्तै हो, दैनिक जीवनबाट यो पर हुन्छ । एउटा कला हो जसले दर्शकको मन र चेतनालाई एकैपटक स्पर्श गर्छ । यसले रेखा र रङ्गको तालमेल मात्र खोज्छ । म रङ्गको अभ्यास र प्रयोग गर्छु, सुन्दरता खोज्छु, राजनीति होइन ।'

'सुन्दरता जीवनका तीता वास्तविकताहरूमा हुन्छ,' उसले भन्यो- 'तपाईंका रङ्गहरू यी झूटा विषयका भ्रममा अल्झिएका छन् ।'

'चित्रकारले क्यानभासमार्फत राजनीति गर्ने हो भने,' मैले भनेँ- 'राजनीति र कलाको दूरी मेटिन्छ । यी दुई विषय आफ्नै आड र अडानमा रहनुपर्छ । राजनीति देशको मूल नीति हो तर कलालाई यसको नारा बन्न दिनु हुँदैन । राजनीतिबाट टाढा रहने विधाहरूले समाजलाई समय र सौन्दर्यबोध गराउन सक्छन्, दिशा र दायित्वबोध गराउन सक्छन् । राजनीतिको छायामा रहने कलाले मौलिक भूमिका पाउँदैन । स्वतन्त्र अस्तित्वबिना यसको जीवन हुँदैन ।'

'त्यसो भए,' उसले भन्यो- 'म तपाईंलाई बाहिर लैजान चाहन्छु ।'

'कहाँ ?'

'तपाईं चित्रकार आफैँ देश चिन्ने प्रयत्न गर्नुहोला । आफैँ जाँच्नुहोला, तपाईंले यहाँ बनाइरहेका यी यावत् चित्रको कुनै माने छैन,' उसले भन्यो- 'यो संस्कृति, यो नाचगान, यो रामरमिताका रङ्गको भूलभुलैयामा परेको तपाईं आफैँ थाहा पाउनुहुनेछ ।'

उसको घोषणाबाट म छक्क परिबसेँ । अर्को चरण कफी उमालेँ । उसले भने लिएन । उभिरह्यो । ढिटले बनेको रहेछ । उसको धातु अर्कै छ । पर्दा खोलेर बगैँचा हेरेँ । पल्लो घरको कापबाट अलि पर एउटा थुम्कामा नीलो फूल देखेँ । शिरीष झर्दै होला हावाको झोक्काले । शिरीषका आखिरी फूलहरू झर्दै छन् ऋतु-परिवर्तनको बोल गर्दै । अब मनसुन सुरु हुनेछ । आउने भेलले काठमाण्डूको फोहोर सफा गर्नेछ । आफैँ हिलाम्मे बनेर यो प्राचीन सहर दुई-तीन महिना दलदलमा फस्नेछ । यहाँका नागरिकका आँखाको कचेरा पखाल्न शरद्यामको सिरसिर बतास आउनुपर्नेछ । काठमाण्डूमा जात्राहरू हुन थाल्नेछन् । जात्राका बेला बज्ने परम्परागत धुन र जताततै पोतिने रङ्ग अनि मदहोसी जात्रालुहरू म यसपटक देख्न पाउनेछैन ।

सिद्धार्थ मलाई उसले निम्त्याएको परिवर्तन हेर्न डोऱ्याउँदै छ। के त्यो परिवर्तन हो ?

'कहाँ जाने ?'

'तपाईं असल चित्रकार हो भने,' उसले धम्क्यायो- 'आफैं आभास पाउनुहुनेछ म तपाईंलाई कहाँ र किन डोऱ्याउँदै छु।'

'किन मलाई लैजान चाहन्छौ ?'

'प्रतिक्रियावादी कित्तामा भए पनि,' उसले भन्यो- 'सिर्जनशील व्यक्तिका नाताले तपाईंलाई दिशानिर्देश गर्नु मेरो कर्तव्य हो।'

'म गइनँ भने ?'

'ठीकै छ,' उसले भन्यो- 'प्रतिक्रान्तिकारी भासमा तपाईं आफैं जाकिनुहुनेछ। इतिहासले गद्दार ठहर गर्नेछ। र तपाईंको उद्धार कसैले गर्न सक्नेछैन।'



# १२

डोकामा फुत्तफुत्त सुन्तला खसालिरहेकी छ किशोरी। कान्लामा ठिङ्ग उभिएका सुन्तलाका बोट ऊभन्दा केही अग्ला छन्। कुनै त छुट्ट्याउन सकिँदैन, ऊ अग्ली हो कि बोट। किनभने ऊ डिलमा उभिएकी छ। आफ्नै मेसोमा छे। एकपटक बोटको हाँगा तान्न खोज्दा हाँगाको मायाले आफू ढलपल हुन्छे र कान्लामुनि पछारिन्छे। डोको उँधोमुन्टो हुन्छ र सुन्तलाका दाना डोकाबाहिर असरल्ल पर्छन्। 'ज्या !' उसको मुखबाट झर्छ। अनि उठ्छे, उसको फ्रकभरि लछ्रप्प तोरीका फूल टाँसिन्छन्। अर्को कान्लामा छ उसको भाइ। उसले भने डोको भर्न लागिसकेको छ। किशोरी हतार गर्छे। मेलो सिध्याउनु छ र घर पुगेर खाना पकाईवरी धन्दा भ्याउनु छ। पश्चिम डाँडामा सूर्य निभ्नुअघि बत्ती बाल्न घर फर्किसक्नुपर्छ।

राति हामीले उसकै घरमा बास गरेका थियौं। उसैले खाना खुवाईवरी बिस्तरा मिलाइदिएकी थिई। उसको भाइ लाल्टिनको प्रकाशमा धेरैबेर पढिरहेको थियो। सिद्धार्थ र उसका साथीहरू किशोरीका बाबुलाई फकाइरहेका थिए। म निदाउन सकिनँ, अबेरसम्म। स्लिपिङ ब्यागभित्र कोल्टो फेरिरहें। घरी चर्को स्वरमा, घरी सुस्तरी सिद्धार्थ बोलिरहेको थियो। बूढालाई इतिहास भनिरहेको थियो, ऊ उनकी छोरीलाई 'जनयुद्ध' मा सरिक गराउन चाहन्छ। गाउँभरिबाट पन्ध्र-सोह्र जना तन्नेरी टिपिसकेका थिए तिनले। भाले खोर पस्ने बेलामै गाउँ छाड्नु थियो। बूढा मानेका छैनन्, उनीहरूले दिनभरिको म्याद दिएका छन्। सिद्धार्थ पिँढीमा पलेटी कस्दै अझै बूढालाई फकाइरहेको होला, म यता तोरीबारीमा उसले सम्भवतः आखिरीपटक सुन्तला टिपिरहेको नियाल्दै छु।

'म एक्लै पर्नेछु ऊ गै भने,' बूढाले भनेका थिए।

'जनताका लाखौँलाख छोराछोरी हुनेछन् तपाईंको साथमा,' सिद्धार्थले सम्झाएको थियो ।

'उसलाई धेरै पढाउन सकिनँ,' उनी भन्दै थिए- 'ऐले मलाई त्यै सुर्ता छ ।'

'धन्दा नमान्नुस् बा,' ऊ भन्दै थियो- 'क्रान्तिमा उभिएपछि उसले दीक्षा प्राप्त गर्नेछे ।'

म उसलाई हेर्छु, तोरीको डाँठझैँ कमलो लाग्छे। अनुहार उज्यालो छ। हरेक दिन घामको डाम, ताजा हावा, सुन्तलाको रस पसेको आँत र माथि जङ्गलबाट झरेको कलकल पानीले बनेको शरीर। कम्मर चुँडिएलाजस्तो। पहिला स्कुल जाँदाखेरिकै कमिज र फ्रक पहिरिएकी सानु सुन्तला र तोरीझैँ फलेकी, फुलेकी देखिन्छे। घाम अब सुन्तलाबारीमा प्रवेश गर्न लागेको छ। उसको छाया तोरीबारीमा खस्छ । उसलाई धेरै जिज्ञासा, धेरै कौतूहल, धेरै डर लागिरहेको होला । जानुपर्‍यो भने यो भाइ र उमेर घर्किसकेका ती बाबुको निकै ख्याल आउनेछ । जङ्गलमा त ऊ एक्ली पर्नेछैन, गाउँका अरू केटीहरू पनि छन्, आफ्नै उमेरका । तै के-कसो हो, धेरै शङ्का र भयको रस पसेको छ उसको अनुहारमा । ऊ आफू केही निर्णय गर्न सक्दिनँ । बाबुका शब्दहरू नै उसलाई मार्गदर्शन हुनेछन् । म फेरि हेर्छु उसलाई, ऊ अझै व्यस्त छे सुन्तला टिप्न, डोको आधाआधी मात्र भइरहेको छ ।

'तपाईंहरू किन यस्तो काममा लाग्नुभो ?' बूढाले सुस्केरा काढेका थिए ।

'तपाईंकै निम्ति हो बा,' सिद्धार्थले तेल दलेको थियो- 'न तपाईंको घरमा बिजुली छ, न टेलिफोन, न टेलिभिजन । न सुन्तला बेच्ने बजार, न सडक । धनीमानी बोकेर उडिरहने जहाज मात्र हेरेर तपाईं हामी कति दिन सहने ?'

'यो त भगवान्‌को खेला हो ।'

'यही त गल्ती भइरहेछ,' उसले सम्झाएको थियो- 'ठूलाठालुले गरेका कुकृत्यलाई हामी भगवान्‌को कृपा सम्झिरहेका छौँ ।'

'यैं पखेरामा जन्म्यौँ, यैं हुर्क्यौं, हामी माटिकोरेलाई यो सब ज्ञानगुन कसरी हुने ?'

'यहाँ अस्पताल छैन, एक दिन टाढा जाबो स्वास्थ्यचौकी छ तर त्यहाँ न डाक्टर न औषधि, प्राइमरी स्कुल छ तर एउटै शिक्षक छन्, पढाउन भ्याउँदैनन्, न राम्रो पढाउन सक्छन्,' उसले थप्यो- 'यही तालले पनि तपाईं हाम्रा सन्तति पुस्तौँपुस्तासम्म माटिकोरे नै रहनेछन् । माटो कोर्नुबाहेक हामीसँग कुनै उपाय रहनेछैन ।'

'त्यो त हो।'

'धनीमानी, ठूलाठालु, शोषक-सामन्ती, बुर्जुवाहरूलाई के छैन ?' उसले भन्यो- 'कस्तो उपचार, कस्तो शिक्षा, कस्तो मनोरञ्जन, कस्तो गाडी, कस्तो सुविधा चाहियो सब जुटाउन सक्छन् तर भीरमौरीजस्ता भीरपहराका दाजुभाइलाई के छ ?'

'धनी भए त जसलाई पनि सुविधा मिल्छ नि,' बूढाले भनेका थिए- 'हामी गरिप भयौँ र पो हाम्लाई क्यै छैन !'

'तपाईं हामीलाई कसले गरिब बनायो ?' उसले भन्यो- 'कोही पनि पहिला धनी थिएन, तर राज्यसत्ता मुठीभरका ठालुहरूले आफ्नो पन्जामा पारेपछि, आफ्नै नातागोता, इष्टमित्र र भाइभारदारलाई पोस्न थालेपछि यत्रा जनता कसरी धनी हुने ?'

उनी टोलाए।

'राज्यसत्ता जनताको हातमा नपरेसम्म तपाईं हामीले खोजेको सुखसुविधा केही पाइँदैन। तपाईंकी छोरीले पढाइ छाड्नुपर्‍यो तर ठालुहरूका छोराछोरी अमेरिकामा फस्ट क्लास स्कुल-कलेजमा पढिरहेका छन्। भोलि तिनै डाक्टर, इन्जिनियर, योजना आयोगका सदस्य र नेता हुन्छन्। विकास तिनले आफ्नै पोल्टामा पार्छन्। तपाईं छोरीलाई बिहे गरेर पठाउनुहुन्छ। ऊ माटिकोरेको माटिकोरे नै रहन्छे। अनि के उसले आफ्ना सन्तानलाई राम्रो स्कुलमा पढाउन सक्छे ? हाम्रा सन्तान-दरसन्तान यसरी नै पिल्सिनेछन्, यही भीरपाखामा झुन्डिरहनेछन्। देश भने तिनै ठूलाठालुले चुसिरहनेछन्।'

म यता एउटा बोटमा छेकिएर सानु र उसको भाइलाई अझै हेरिरहेको छु। मैले आफूमा उनीहरूका आँखा पर्न दिएको छैन। म उनीहरूलाई चियाउन चाहन्छु, भोलिदेखि म किशोरीलाई यो रूपमा पाउनेछैन। के थाहा, ऊ बन्दुक बोकेर कहाँ हिँड्नेछे ? कुन प्रहरीचौकी लुट्न कहाँ कहिले कता कसरी आक्रमणकारी बन्नेछे ? आतङ्ककारी बन्नेछे, क्रान्तिकारी बन्नेछे, शहीद बन्नेछे। उसलाई त्यसको अनुमान छ कि छैन ? ऊ कहाँ किन कसरी होमिने हो, उसलाई आभास छैन। अहिले त ऊ फगत डोकामा सुन्तला फुत्तफुत्त खसालिरहेकी छ। भोलि यसरी नै ऊ एउटा गोलीले फुत्त ढालिन बेर छैन। र यसरी नै डोकामा हालिन बेर छैन। सुन्तला भर्ने डोकामा भोलि ऊ रगतमा लुटपुटिएर राखिएको न उसको भाइले देख्नेछ, न उसलाई जन्म दिने बाबुले।

'तँ जान्छेस् त दिदी ?' भाइ पल्लो बोटबाट सोध्छ ।

'खै, बा के भन्नुहुन्छ ?' ऊ जवाफ दिन्छे ।

'कहिले आउँछेस् नि ?'

'मलाई के था' ?'

'दसैँतिहारमा त बिदा देलान् नि ?'

'मलाई था' छैन ।'

'बन्दुक चलाउनुपर्छ रे, गोली हान्नुपर्छ रे, बम बनाउन सिक्नुपर्छ रे, बम त भयङ्कर आवाज गरेर पड्किन्छ रे, हो दिदी ?'

'खै, मैले देख्या छैन, था' पनि छैन ।'

'मलाई त बन्दुक चलाउन मन छ ।'

'देख्या छस् ?' ऊ सोध्छे ।

'सिकारीले बोकेको देख्या छु,' उसले भन्यो- 'चरा खसालेको पनि देख्या छु ।'

'काँ' ?'

'परारै हो हाम्रो स्कुल जाने बाटोमा,' उसले भन्यो- 'ऐले त सिकारीहरू कतै छैनन् । सबै बन्दुक खोसेर लगिसक्यो रे !'

'त्यै' भ'र चराहरू अचेल जताततै देखिन्छ,' उसले भनी ।

'मलाई त ढुकुरको मासु मीठो लाग्छ,' भाइले भन्यो- 'तैंले चाखेकी छस् ?'

'छैन,' सानुले भनी- 'मलाई त चरा मारेको मन पर्दैन ।'

उनीहरूले सिद्धार्थ र उसका साथीहरूले बोकेका हतियार देखेका रहेनछन् । सिद्धार्थले त पाइन्टमा पेस्तोल घुसारेको छ । उसका साथीहरूको भने मैले वास्ता गरिनँ । मलाई सिद्धार्थले किन यहाँ ल्याएको हो ? किन उसले मलाई यो सबै देखाउन खोजिरहेछ ? ऊ किन यस्ती सोझी किशोरीलाई बलिदानी बनाउन खोज्दै छ ? गाउँका अरू युवा पनि तिनले तयार गरिसकेका छन् । गाउँका हुर्कौला र बलिया पाखुराहरू रित्त्याउन खोजिरहेका छन् । मलाई उदेक लागिरहेछ । भर्खर रस पसेको फूलजस्तै किशोरीका हातमा गोली थमाउन उनीहरू सक्दो जोड गरिरहेका छन् । फेरि हेर्छु, केटी आत्तिएको भान पर्छ मलाई । ऊ फेरि तल्लो कान्लामा पछारिएकी छ । 'ऐया !' मैले सुनेँ, म जान सक्दिनँ तर उसको भाइले सुनेको छैन । म उसलाई उठाउन गएँ भने उनीहरूलाई चियाउन पाउनेछैन । म निष्ठुरी बनेर उभिरहन्छु । ऊ अझै उभिन सकेकी छैन ।

'तँ गइस् भने घर आइराख् है दिदी,' भाइ भन्छ । तर उसको जवाफ आउनेछैन । तल गहुँको टुसा निस्केको हरियो बारीतिर हेर्छ, पर काउली उम्रिरहेको गरातिर पनि देख्दैन । कहाँ गई त दिदी ? ऊ दरखरिएका घुँडा सुमसुम्याउँदै उठ्छे र फेरि डोकामा सुन्तला भर्छे ।

'घर आउँदा एउटा बन्दुक पनि ल्याइज है ?' ऊ भन्छ ।

'के भनेको ?' ऊ बुझ्दिन । गराबाट उठेर कान्लामा उभिन्छे ।

'म चलाउन सिक्छु क्या,' ऊ भन्छ ।

'के चलाउन ?'

'बन्दुक ।'

'पढ्नुपर्दैन ?'

'तँ पढ्नु नपर्ने भएर जान लागेकी हो र ?'

'होला नि,' ऊ भन्छे ।

'त्यसो भए म पनि पढ्दिनँ,' भाइले भन्यो । ऊ भारी बोकेर घर फर्किन तम्तयार भइसकेको थियो ।

म फर्किन्छु उनीहरूको पछिपछि । कान्लाको बाटो, चिसो माटो, छाया कोरलेर हिँडिरहेको घाम, तोरीफूलमा सुन्तलाले दफारेका छाप, पुतलीहरू उड्ने हावा, नली डाँठहरू चलमलाउने बारी, पात-पत्कर उड्दै थुप्रिने आली, तुवाँलाले ढाक्ने आकाश, बर्सादमा भेल बग्ने खोल्सा, पहाडको पसिना निखेर कुलकुलाउने कुलो अनि परिश्रमीहरू दैनिक ओहोरदोहोर गर्ने चिप्लो बाटो । अरू कान्लाहरूबाट पनि थुप्रै किशोरकिशोरी कतै फर्किरहेका छन्, डोकाले जीउ ढाक्दै ।

'सानु, तँ पनि जान लागेकी होस् ?' दोबाटामा भेटिएकी उसकी साथी सोध्छे ।

म अलि तल ओरालामै छु, अरूबाट छेलिएर ढिलोढिलो । रोकिन्छु, वार्तालाप सुनेर । ऊ के भन्छे, म सुन्दिनँ ।

'मलाई त जान मन छैन,' उसकी साथी भन्छे ।

'म त जाने भएँ,' अर्को कुनै किशोरीको आवाज आउँछ ।

उनीहरू कल्याङमल्याङ गरिरहन्छन् । म बिराली पाइला रोकेर ढिस्कोमुनि खस्याकखुसुक सुन्न कान थाप्छु ।

'हामी यसरी कति डोको-नाम्लो गर्ने ? हाम्री आमाले त्यै गर्नुभो, भाउजू त्यै गर्दै हुनुहुन्छ,' त्यो क्रान्तिकारी आवाजको आकार भनिरहेको थियो- 'ती दाइहरूले

ठीकै भनेका छन् । मेरो त बा मान्नुभा'को थिएन, जान्छु भनेर मै ठिक्क परेँ । पल्लो गाउँका पनि थुप्रै केटी गैसकेका छन् ।'

सानुको सानो आवाज फेरि मैले सुनिनँ । लाग्छ, त्यहाँ थुप्रै केटीहरू सुन्तलाको डोको बोकेर उभिरहेका छन् । बाङ्गिएर यसो आँखा तान्छु, डिलमा केही डोका र टाउका मात्र देखिन्छन् । त्यहीँमाथि घाम छ, आँखा तिरमिराउँछन् ।

'हामी बोर्डिङमा पढ्न पा'को भए कि डाक्टर बनिन्थ्यो, कि इन्जिनियर, क्यै' न क्यै' सीप हुन्थ्यो,' ऊ भन्दै थिई- 'यसरी घाँसपात र सुन्तला, तोरी हेर्दैमा यो जुनी खेर जाँदै छ । ती दाइहरूले ठीकै भनेका छन्, हामीले आज सङ्घर्षमा भाग लियौँ भने हाम्रा भाइबैनाले कम्तीमा राम्रो पढ्न पाउनेछन् ।'

'अर्कालाई मारेर र आफू मरेर पनि कैँ हाम्रा भाइबैनाले पढ्न पाउँछन् ? तँ त्यस्सै हावामा वेग हान्ने कुरो गर्छेस्,' अर्की केटीको आवाज सुन्छु ।

'ती दाइहरू भन्दै थिए,' उसले जवाफ दिई- 'हामीले सङ्घर्ष नगरे त काठमाण्डूले हाम्लाई चासै दिँदैन । कसैले सुन्दैसुन्दैन, टेर्दैटेर्दैन । अनि सबै दुःखी पहाड, गाउँ, लेकका मान्छे सधैँ आफ्नो घरधन्दा, उकाली-ओराली, गाउँबेसीमै टाँसिइरहने हो भने त हाम्लाई क्यै चाहिएको छ भन्ने पनि त भएन ।'

'म पनि जान्छु दिदी,' सानुको भाइलाई सुनेँ । तर उसलाई सबैले रोके । 'गुच्चा खेल्ने फुच्चा, कान मेरो बुच्चा !' एउटीले भनी । उनीहरू केही भन्दै थिए, सानुको भाइ अघि लाग्यो । उसले पछ्याई । तिनीहरू तितरबितर भए । सानुको घरमा भात छट्किसकेको थियो । सिद्धार्थले आलु र मूलाको झोलिलो तरकारी पकाइरहेको रहेछ, मस्यौरा हाल्दै रहेछ । सानु वाल्ल परी । उसका बाले चामल अडकलेर दिएका थिए । मैले पनि पछि आफ्नो थाल आफैँ माझेँ । हातमा खरानीको गन्ध बाँकी थियो । सिद्धार्थका साथीहरूले ताउलो खस्क्याए । बूढा भन्दै थिए- 'यो ताउलो मैले आफ्नो बिहेपछि हिजै निकालेको हुँ ।'

उनको एउटा दाँत ओठबाट तल निस्कने भएकाले स्वर अलि तोते रहेछ ।

'दाइहरू तँलाई लैजाने भन्दै छन्,' बूढाले भने- 'के गर्ने छोरी ?'

ऊ केही बोलिन । पिँढीको खाँबो समातेर निहुरमुन्टी भइरही । उसको भाइ पनि सँगै टुक्रुक्क बसिरहेको थियो । 'तँ स्कुल जा,' उसले भनी ।

'यसको ज्यानको सुरक्षा तपाईंहरूकै हातमा भो,' बूढाले सिद्धार्थको हात समात्दै आँखा पिलपिल गर्दै भने ।

'तपाईंले चिन्ता लिनुपर्दैन बा,' सिद्धार्थले भन्यो- 'तपाईंकी छोरी क्रान्तिको महान् लक्ष्यसिद्धिका निम्ति एउटा बहादुर सिपाहीका रूपमा समस्त जनताकी प्रिय कमरेड बन्नेछिन् ।'

साथीहरू कहिले एउटा घर, कहिले अर्को घर चहार्दै सिद्धार्थलाई रिपोर्ट गरिरहेका थिए । ऊ मलाई त्यहीँ छाडेर दिउँसो गाउँ डुल्न निस्क्यो । सानुले एउटा झोला ठीक पारी । 'सुन्तला बेच्न मै जाउँला भोलि,' बूढाले भने- 'तँ हिँड्नेलाई किन सास्ती ?'

'बेलुकासम्म फर्किउँला नि,' उसले भनी ।

'पर्दैन, आराम गर्,' उनले भने- 'भरेदेखि काँ हिँड्नुपर्ने हो, आफ्नो ख्याल राखेस् ।'

'तपाईं धेरै दुःख नगर्नू बा,' उसले सम्झाउन खोजी- 'म चाँडै फर्किउँला । भाइलाई स्कुल जा भन्नू सधैँ, नत्र ऊ ढिपी गरेर यतै हल्लिर'न्छ ।'

'तैँले याँ'को सुर्ता मान्नुपर्दैन,' उनले भने- 'जाँ' जाँदा पनि आफू अगाडि नपर्नू, पछाडि पनि नहिँड्नू, बीच्चमा बस्नू ।'

सानु फुरुक्क परी । बूढाले काँप्दै भने- 'के गर्नु र, हुर्केका छोराछोरी जोगाउन नसकिने भो !'

सानुले घर एक फेर सिनित्त सफा पारी । बाबु र भाइका कपडा धोईवरी सुकाई । आफ्ना कपडा पोको पारी अनि झोलामा कोची । बढारकुँढार गर्दा आमाको चोलो र मजेत्रो देखेपछि भने उसले खप्न सकिन । माथिल्लो तलामा बसेर धेरैबेर सुँक्कसुँक्क गरिरही । साँझपख सिद्धार्थहरू फर्किए । भाइ पनि स्कुलबाट आएको थियो । ऊ तल झरी झोला बोकेर ।

'छोरी दिने, तपाईंहरूलाई खाना ख्वाउने भनेर भोलि फौजीले मलाई थुनछेक गर्ने हो कि ?' बूढाले आँगनमा उभिएर पिरलो गरे ।

'त्यो चौकी उडाइसकेपछि तिनीहरू यहाँ आउन छाडेका छन्,' सिद्धार्थले भन्यो- 'यस भेगमा हाम्रै पुलिस, हाम्रै आर्मी, हाम्रै शासन छ, बा ।'

सानु अघिअघि लागेकी थिई । उसको भाइले डिलमा उभिएर करायो- 'दिदी, तँ झट्टै आइज है !'

हामी गाउँको सिरानबाट जङ्गल पस्ने बेला ठूलो लर्को भइसकेको थियो ।



# १३

प्यारी हजुरआमा,

नमस्कार ।

म आफ्नी हजुरआमाको अनुहार सम्भिन्नँ । अहिले कल्पना गर्छु, उहाँ तपाईंजस्तै हुनुहुन्थ्यो । तपाईंलाई भेटेपछि मैले एउटा उज्यालो देखेको छु जीवनको । तपाईं आशिष दिने उमेरमा हुनुहुन्छ । मलाई लाग्छ, तपाईंले मलाई धेरै आशिष दिनुभएको छ । तपाईं अनुभवको खानी हुनुहुन्छ र तपाईंका शब्दमा म जीवनका आशा, निराशा, कल्पना र भोगाइको अनौठो मिश्रण पाइरहेको छु । तपाईंले एउटा युग जिउनुभएको छ र तपाईंले जिएको युग म तपाईंको अनुहार पढेर बुभिरहेको छु । त्यसैले तपाईं एउटा पुस्तकजस्तै मेरा लागि प्रस्तुत हुनुभएको छ । र तपाईंका बोलीपिच्छे म नयाँ पृष्ठको स्वाद लिइरहेको छु ।

तपाईं छक्क पर्दै हुनुहुन्छ होला, एकैपल्ट भेटेको एउटा अपरिचितले आज पत्र लेखिरहेको छ । म तपाईंलाई सुनाउन चाहन्छु, मैले कसैका लागि लेखेको यो पहिलो पत्र हो । आजभोलि इमेलका कारण हस्तलिखित पत्रको उति चलन छैन । म आफ्ना कुरा कसैलाई लेख्नुपर्दा कम्प्युटरको सहयोग लिन्छु, कम्प्युटर आफैं कापी भएको छ र हुलाकी पनि । तर कम्प्युटरको पत्र कति कृत्रिम हुन्छ भन्ने अनुभूति तपाईंको सम्बोधनमा लेखिएका यी अक्षरमा म अहिले पाइरहेको छु । त्यसैले म भन्न चाहन्छु, तपाईंले मलाई आफ्ना अक्षरप्रति विश्वास दिलाउनुभएको छ । औंलाले लेखेका शब्द कति आत्मीय सञ्चार हुँदारहेछन् भन्ने अनुभूति दिलाउनुभएको छ । म तपाईंप्रति आभारी छु, तपाईंले मलाई आज हातैले पत्र लेख्न आकर्षित गर्नुभएको छ ।

म तपाईंलाई टेलिफोन गर्न सक्थें, अभ्र घरमै आएर यो कुरा भन्न सक्थें । तर किनकिन म अक्षरमा पोखिन चाहेको छु । म आफू लेखिन चाहेको छु ।

अक्षरहरूमा व्यक्त हुन खोजिरहेछु । किन ? आखिर म तपाईंलाई पत्र नै किन लेखिरहेछु भने तपाईं यति बेला मेरो सबैभन्दा घनिष्ठ हुनुहुन्छ । तपाईंलाई देख्नासाथ र तपाईंलाई सुन्नासाथ म चिमोटिएँ । मैले यस्तो आदरणीय उमेरको कोही पनि राम्ररी भेटेको रहेनछु । तपाईं एउटा सुन्दर हिमालजस्तो लाग्यो । सेतै फुलेर मात्र होइन, जीवनको एउटा लामो हिस्सामा भाग लिएर तपाईं अनुभव र ज्ञानले स्थिर, प्राज्ञ र मोहक भइसक्नुभएको छ । म त्यो दिन तपाईंकहाँबाट निस्कनै चाहिरहेको थिइनँ ।

हुन सक्छ, मेरो जीवनमा वात्सल्यको अभाव छ । स्नेहको अभाव छ । पितृत्व र मातृत्वका अतिरिक्ति मानिस चाहँदोरहेछ एउटा अभिभावकीय छहारी । त्यो वात्सल्यको जहाँ ऊ स्वच्छन्द विचरण गर्न सकोस् । म देखिरहेछु, उत्तरमा हिमालको छहारीमुनि म बसेको डाँडाको पश्चिम पाखामा किसानहरू एकाबिहानै सुन्तलाका बोटको स्याहार गरिरहेका छन् । उनीहरू हिमाल देखेर रमाएका होइनन्, उनीहरू आफ्नो कान्लाको फलको आसमै झुन्डिरहेका छन् । तर उनीहरूलाई न्यानो भइरहेको छ, भर छ त्यो हिमालको जहाँ घाम ठोक्किएर उनीहरूतिर उज्यालो पोखिनेछ । तपाईं जसरी मन्दिरको भरोसामा हुनुहुन्छ, यी किसानहरू त्यसै गरी हिमालको आडमा छन् । हिमाल खुलेको छ र मौसम सफा छ । किसानहरू मौसममा भर गर्छन् भने उनीहरू त्यसको सुइँको हिमाल हेरेर पाउँछन् । मलाई त्यस्तै भइरहेछ, तपाईंका लागि मन्दिर, किसानका लागि हिमाल र मेरा लागि तपाईं, समान आस्थाका धरोहरका रूपमा ।

मैले तपाईंलाई नचाउन चाहेँ र तपाईं फुरुङ्ग पर्नुभयो । तपाईं नाचेको क्षण मैले जिन्दगीकै अनुपम आनन्द हासिल गरेँ । तपाईं जिन्दगीको घामछायामा यसरी पारखी भइसक्नुभएको छ, मैले सोचेँ हिमालमा घाम परेर हिउँ पग्लिरहेछ । घरी घाम टल्केको छ र घरी पानी दर्केर हिउँ पग्लिरहेछ । घामपानीको सनातन ओहोरदोहोरीमा बेलाबेला सप्तरङ्गी इन्द्रेणी परिरहेछ । त्यस्तै हो, तपाईं दैनिक मन्दिर धाउनुहुन्छ । देउताको रूप उही छ तर तपाईं आफ्नो मनोभावनाअनुसार कहिले देउतालाई गम्भीर, चिन्तित, आनन्दित र पुलकित देख्न सक्नुहुन्छ । मैले तपाईंलाई जीवित देवीका रूपमा उमङ्गले भरिएको देख्न चाहेँ । तपाईंका पनि आफ्ना चिन्ता र पीर छन् अनि आशा र भरोसा छन् । तपाईं बत्ती कातिरहनुहुन्छ र घरीघरी ख्याल गर्नुहुन्छ होला, कतै बत्तीले मलाई कातिरहेको छ कि ? तपाईं देउताका लागि बत्ती कात्नुहुन्छ आशा र भरोसा राखेर । अनि आफैँले कातेका

छोराबुहारी परदेशिएकामा चिन्ता पनि गर्नुहुन्छ। जसरी सुन्तला सप्रिएकामा किसान दङ्ग पर्छ र रस राम्रो नपसेमा ऊ पीर पनि गर्छ। त्यसरी नै मैले तपाईंलाई भेटेर आनन्द पाएँ, तपाईंलाई सम्झेर पत्र लेखिरहँदा पनि मलाई न्यानो अनुभव भइरहेछ। तर मेरा पनि आफ्नै तनाव र समस्या छन्, चासो र चिन्ता छन्। तपाईंको उमेर पुग्दा पनि मसँगै मेरा विशेषता हुर्किरहनेछन्।

म किन यसो भनिरहेको छु भने तपाईंले बोलाउँदाबोलाउँदै पनि म उपस्थित हुन सकिनँ। यति बेला म उपत्यकादेखि टाढा कुनै एक पश्चिम पहाडमा छु। तपाईं ठान्नुहोला, तपाईंले बोलाउँदा पनि नातिसरहको मैले नाइँनास्ति गरेँ। म त्यस्तो धृष्टता कसरी गर्न सक्छु ? म फर्केर आउनेछु, तपाईंलाई भेट्न। तर मलाई डर पनि लागिरहेछ, कतै म तपाईंसँग बढी नै घनिष्ठ भइरहेको त छैन ? अनि तपाईं पनि कतै मलाई अपत्यारिलो किसिमले खोजिरहनुभएको त छैन ? किनभने म तपाईंका लागि एउटा अपरिचित हुँ, एउटा साधारण चित्रकार र तपाईंको घरमा एउटा साधारण पाठक। तपाईंले भनेजस्तै म कहिलेकाहीँ घमन्ड पनि गर्छु। हो, म घमन्ड गर्छु तर केका लागि ? तपाईंलाई नचाउन त म जे पनि गर्न सकूँजस्तो लाग्छ। अनि तपाईं म सधैँ घमन्ड गरिरहेको देख्न सक्नुहुन्छ ? म आउँदा मसँगै मेरो स्वभाव पनि आउनेछ। अनि थाहा छ हजुरआमा ? म आएपछि तपाईं फेरि नाच्नुपर्नेछ। तपाईंले कसैलाई देखेपछि लजाएर नाच्न छाड्न पाउनुहुनेछैन। मलाई लाग्छ, यो पत्र तपाईंलाई तपाईंकी प्रिय नातिनीले पढेर सुनाइरहेको हुनुपर्छ, भनिदिनू कि उसले पनि हामीसँगै नाच्नुपर्नेछ।

म छक्क परिरहेको छु, तपाईंलाई भेटेर म आफूलाई धेरै किसिमले प्रकट गर्न सकिरहेको छु। तपाईंलाई के ढाँटूँ, म प्रेममा परेको छु। मलाई कसैसँग प्रेम भएको छ। म प्रेममा परेको छु तर आफैँलाई विश्वास लागिरहेको छैन। मैले उसलाई मन खोल्न सकिरहेको छैन। उसलाई आफ्नो कुरा भन्न मसँग आँट पनि छैन। म ऊसँग डराइरहेको छु। मानिस प्रेममा किन डराउँछ ? यस्तोविधि कि म भागिरहेको छु। उसको अगाडि पर्न सकिरहेको छैन। किनभने आफ्नो प्रस्तावप्रति उसको प्रतिक्रियामा म अहिले ढुक्क छैन। उसले हुँदैन भनी भने ? उसले मलाई चाहन्नँ भनी भने ? उसले मलाई प्रेम गर्दिनँ भनी भने ? म चिप्लिनेछु, उक्लिन नसक्ने गरी। किनभने यो मेरो पहिलो गम्भीर प्रेम हो र म चाहन्नँ, पहिलो प्रेममै असफल बनूँ। म जीवनप्रतिको दृष्टिकोण फेर्न सक्नेछु। आफ्ना कमजोरीहरूप्रति म सधैँ ग्लानिले सडिरहनेछु। मेरो आत्मसम्मानमा ठेस

पुग्नेछ र आत्मसम्मानविहीन जिन्दगी एउटा मुढो हो भन्ने म ठान्छु । तपाईंले मलाई घमन्डी भन्नुभएको सही रहेछ, म यति बेला त्यही गर्दै छु । तर समस्या उस्तै छ, मैले मन पराएकी केटी पनि कम छैन । ऊ सुन्दर छे, चलाख छे, बुद्धिमान् पनि छे र मलाई लाग्छ, मभन्दा अझ घमन्डी पनि छे । मलाई किनकिन ऊ संसारकै सुन्दर लाग्छे, शरीरले मात्र होइन, सोचाइले पनि । शरीरले मात्र सुन्दर भएकी भए ऊ एउटा सेपिलो पहरा बन्थी तर सोचाइले पनि सुन्दर भएकीले ऊ एउटा पारिलो पहाड हो । ऊसँगको प्रेमको अङ्कुरणले मलाई गजबको सुख दिएको छ । मेरो सम्मुख हिमाल बिहानी घाममा मस्त नुहाइरहेको छ र मेरो आँतको मयल पनि पखालिँदै छ । तपाईं भन्नुस् हजुरआमा, म के गरूँ ?

म पूर्वी झ्यालको पर्दा तानेर मिर्मिरेदेखि तपाईंलाई लेख्न थालेको थिएँ । हिमालको काँधबाट सूर्य उदाउँदाको क्षण मेरा आँखा तिरमिराए । घामको सुन्तला रङ्गले म पनि रँगिए हुँला, त्यतिखेर ठ्याक्क रातो र पहेँलोमिश्रित रङ्गले छोएका अक्षरमा मैले लेखेछु, म प्रेममा परेको छु भनेर । म चकित छु, प्रेम भन्ने शब्द लेखिरहेकै बेला सूर्यले झ्यालबाट मलाई चियाएको छ । ऊ साक्षी बसेको छ । सूर्यलाई साक्षी राखेर म तपाईंसामु आफ्नो मनको छाया उज्यालो पारिरहेको छु । यी अक्षरमा तपाईं सूर्यको स्पर्श पाउनुहुन्छ । मलाई मेरी हजुरआमासँग पत्रमा भेट गराउन प्रकट भएका सूर्यदेवलाई म नमस्कार गर्छु । संयोग हो, मैले प्रेम गरेकी केटीलाई पहिलोपल्ट सूर्य डुबिरहेका बेला देखेको थिएँ । सूर्य डुब्दै गरेका बेला देखेकी केटीका सम्झनामा म सूर्य उदाउँदै गरेका बेला यी शब्द उन्दै छु । त्यो पनि सूर्य अस्ताउन लागेको पर्वतजस्तै उमेरकी व्यक्तिसमक्ष । म तपाईंलाई साक्षी थापेर यो भन्दै छु, म उसलाई प्रेम गर्छु । मेरो हृदयमा ऊ बास गर्नेछे पूर्व पर्वतमा सूर्य उदाएसम्म । र पश्चिम पर्वतमा सूर्य अस्ताएसम्म । हाम्रो चोला क्षणिक छ, यसो सोच्दा एउटा पर्वतबाट उदाउँदै अर्को पर्वतमा सूर्य अस्ताएकै अवधिजस्तो । त्यस्तै अपरिहार्य र त्यस्तै नियति । जसरी सूर्यले हिमाललाई साक्षी राख्छ, त्यसै गरी म आफ्नो प्रेमको साक्षी तपाईंलाई बनाउन चाहन्छु । किनभने मेरा लागि मैले अघि नै भनेँ, तपाईं एउटा हिमाल हो । हिमाल सुन्दर छ भने बिहान उत्तिकै न्यानो र उज्यालो हुन्छ । तपाईंको काँधबाट उदाउने प्रेमले तपाईंको यो सेपिलो नाति पारिलो पहाड बन्नेछ ।

म कतै कविजस्तै बिम्बमा त बोलिरहेको छैन ? र म कतै पागलजस्तै अभिनय त गरिरहेको छैन ? सेक्सपियरले भनेझैँ कवि होस्, पागल वा प्रेमी, उसका लागि

यो चराचरमा सम्पूर्ण स्वच्छन्दता छ । घामले रातो बनाएको यस कापीमा मेरा औँलाहरूले कलमलाई वेगवान् बनाइरहेका छन् । मेरो कलमको टुप्पो फुरफुर गरिरहेको छ र म तपाईं नाचेको सम्झिरहेको छु । विचित्रको संयोग छ, म कताकताबाट तपाईंको घर पुग्नु, तपाईंले क्यासेट बजाउनु, मैले जिकिर गर्नु अनि तपाईं नाच्नु । मानिसलाई केले डोऱ्याउँछ, मलाई थाहा छैन । म पुस्तक खोजिहिँड्दा तपाईंकहाँ पुग्नु र तपाईंलाई साक्षी राखेर अहिले प्रेमको संसार चियाउनु । पुस्तकको साइनो बलियो हुँदोरहेछ । किनभने मैले प्रेम गरेकी केटीसँग मेरो जम्काभेट र आवतजावत पनि पुस्तककै कारण सम्भव भएको हो । पुस्तक नभएको भए, मैले पुस्तक नलेखेको भए वा पुस्तक खोज्दै नहिँड्ने भए म यसबाट वञ्चित हुने रहेछु ।

मैले प्रेम गरेकी केटी तपाईंको उमेरमा तपाईंभन्दा फरक अनुहारकी हुनेछैन । कुनै दिन तपाईंलाई चिनाउँला । म सफल भएँ भने । तपाईं नै पहिलो दर्शक हुनुहुनेछ हाम्रो सम्बन्धको । म तपाईंसँगै आशीर्वाद लिनेछु । तपाईंलाई यतिसारो स्नेह गर्नुको मसँग प्रस्ट कारण छ, तपाईंले स्याहार गरिरहेको घर । यस्तो घर मैले कतै देखेको छैन । तपाईंले बत्ती कात्ने कोठा एउटा सिङ्गो पुस्तकालय हो, यस मानेमा सिङ्गो संसार हो । म त झुक्किएँ पनि, स्वर्गको एक टुक्रा खुत्रुक्क त्यहाँ खसेजस्तो । एउटा व्यक्तिगत घरमा यो सम्भव छैन । तर तपाईंको छहारीमा त्यो यथार्थ भएको छ । तपाईं अक्षर खुट्ट्याउन सक्नुहुन्न तैपनि ज्ञानको दियो बालिरहनुभएको छ । धपधपी बलेको चम्किलो ज्ञानघरजस्तो छ तपाईंको आश्रम । सच्चा देवी बस्न सुहाएको छ । भोल्टेज चर्को भएका बत्तीहरूले कैयन् घरलाई उज्यालो पारिरहेका होलान् तर म यो पहाडमा बसेर हुस्सुग्रस्त काठमाण्डू सोचिरहेको छु जहाँ तपाईंको घरले अरू सबै उज्यालाहरू छाया पारिरहेको छ । मलाई टस बसेको छ तपाईंको घर र म चाहन्छु महिनौँमहिना बिताउन । मेरो पनि एउटै बानी छ– कि घुम्याघुम्यै गर्छु कि पढ्यापढ्यै । घुम्नलाई संसार खाली छ तर पढ्नलाई तपाईंकै घर आकर्षक पुस्तकालय छ । म फुर्किरहेको छु अहिले, म टाढा भए पनि मेरो चिठी पक्का त्यही पुस्तकालयमा बसेर तपाईं सुनिरहनुभएको छ । म उपस्थित हुन सकिनँ तर मेरा अक्षरहरूले त्यो प्रिय संसारमा उपस्थिति जनाइरहेका छन् । त्यही पुस्तकालय मेरा अक्षरको हकदार हो । यसो सोच्छु– म लेखक हुँ भने मेरो लेखाइको नियति पुस्तकालयमा जीवित रहनु हो । मेरो पुस्तकको त्यो गन्तव्य हो । त्यसैले पुस्तकालय मेरो

सर्वाधिक आकर्षण-स्थल हो जहाँ भोलि म पनि कैद हुनेछु, मेरा किताबहरू कैद हुनेछन् । कैद शब्द प्रयोग भएकामा मलाई माफ गर्नुहोला, म तपाईंको घरमा जतन हुनेछु, मेरा किताबहरूको हिफाजत हुनेछ ।

म तपाईंलाई यो चिठीसँगै मैले रुचाएकी केटीको फोटो पठाउन चाहन्थेँ । तपाईंको प्रतिक्रिया बुझ्न । म उसको फोटो संसारलाई देखाउन चाहन्छु । म छाती खोलेर सबैलाई भन्न चाहन्छु कि म उसलाई प्रेम गर्छु । मैले प्रेम गर्ने युवती तपाईंलाई नै नचिनाउने प्रश्नै उठ्दैन । तर अहिले म विवश छु किनभने एक औँलाले प्रेम लेखिन्न । मैले उसको परीक्षा लिन बाँकी नै छ र म ऊकहाँ पुग्नै बाँकी छ । उसको मन चियाउन र चोर्न बाँकी छ । मैले उसलाई चोर्न सकेँ भने सबैभन्दा पहिला म तपाईंलाई चिनाउनेछु । अहिलेलाई तपाईं के सम्झिरहनुहोला भने त्यो केटी ठ्याक्कै तपाईंकी नातिनीजस्तै छे, उस्तै अनुहार, आकार, बानी र बेहोरा । र उत्तिकै घमन्डी पनि ।

तपाईंको,

प्रिय नाति ।



# १४

एउटा सिङ्गो याम बितेको छ । म लालीगुराँस फुलेको पहाड आइपुगेको छु । देउरालीको चियापसलछेउ एउटा गुराँसको बोटमा रुक्स्याक ठड्याएर म स्विटर फुकाल्छु । पसिना निथार्नु छ यहाँ बसेर । ओठबाट सुस्केरा फुत्किन्छ । भरियाहरू छन् छेवैमा । मैले त्यो पसलमा चिया भनेँ कि भनिनँ ? भरियाहरू बिस्कुटका पुरिया निकालिरहेका छन् । घाम टक्क लाग्न थालेको छ । एउटी बहिनी आइपुग्छे सिसाको गिलास तातोसँग समाउँदै । पहिलो सुरुपमै म राताम्मे पहाड हेर्छु, मस्त यौवनले रँगिएको छ मेरा आँखाको सेरोफेरो । यस फेरोमा एउटा सङ्केत छ ऋतुको । यस ऋतुले उघारेको छ हिउँदको घुम्टो । यो घुम्टो अब एक वर्ष सुक्नेछ गुराँसको पोथ्रामा । यस पोथ्रालाई भाका राखेर समय सुटुक्क सरेको छ यहाँबाट । त्यस पाखाबाट घामसँगै छाया सरेजस्तै । पहाडको छाया बोकेर रातभरि निदाएको पाखामा अहिले घामको न्यानो च्यादर बिछ्छिएको छ । र आगोझैँ तात्तिएका छन् गुराँसका थुँगाहरू । चियाको सुरुपसँगै चञ्चल भइरहेको छु म । एउटा चरा फुत्त उडेको छ माथिको गुराँसबोटबाट । त्यो चरा बत्तिएको आकाशमा एउटा गुञ्जन निम्तिएको छ, एउटा लय कोरिएको छ । त्यसले गुराँसको रङ्ग चुसेजस्तो, घामका फीँज पर्दा त्यसको सेतो प्वाँख रातो टल्किएको छ । म आफ्ना आँखा त्यसका प्वाँखमा टाँसेर उडाउन चाहन्छु किनभने मैले हेर्नु छ गुराँसको जङ्गल । त्यो एकान्त, त्यो रनवन, त्यो चिरबिर । हिउँदभरि भित्तामा टाँसिएका हिउँका धर्सा अब खस्न थालेका होलान् । मलाई सुन्नु छ त्यसको सङ्गीत । लेउ लाग्ने ढुङ्गामा खस्दै, बज्रिँदै, मुन्टिँदै तल झर्ने पानीको बाटो चियाउनु छ मैले । त्यसको त्यो निर्मल गतिले पहाडको शान्ति खलबल गर्दै, हुन्डरी मच्चाउँदै आतङ्क निम्त्याइरहेको होला । म तल आतङ्कित परिवेश हेर्न चाहन्छु ।

'यै बाटो हिँडेका थिए ती पुलिसहरू,' चिया ल्याउने बहिनी भरियाहरूसँग भनिरहेकी थिई- 'आधी घण्टाकै बाटोमा एम्बुसमा परे ।'

'के सप्पै मरे ?' एउटा भरिया सोधिरहेको थियो ।

म बाटो तताउँछु । कतै रगतका टाटा देखिएलान् । गुराँसको छाया परेको सम्झुँला । अहिले घाम लागेको छ । घामका छिटा परेको सोचुँला । म आत्तिनेछैन यस बाटामा । शताब्दियौँदेखि पहाडियाहरू यही बाटो हिँडिरहेका छन् । यहाँ हाम्रा पुर्खाका पाइला छन् । म तिनका डोब छाम्न चाहन्छु । म तिनका पसिनाले कोरेको बाटो छुन चाहन्छु । म एक्लै चिच्च्याएँ भने पनि चरा चिरबिराएको सुनिएला । म एक्लै बहुलाएँ भने पनि झरनाको झरझरमा त्यो बिलाउला । म रोइरहेँ भने पनि न्याउली सम्झेलान् बटुवाहरू । म हिँड्छु, म आँट्छु यो यात्रा, म भोग्छु यो गोरेटो । यस गोरेटामा गाईका खुरका डामहरू छन् । म दूध पिएर हुर्किएका आफ्ना खुट्टा कुँज्याउन चाहन्नँ । मेरा पूर्वजहरूको पोषण गर्ने गाईका छाप छन् यहाँ, तिनका घण्टी अझै भित्तामा प्रतिध्वनि दिइरहलान् । ती भरियाहरू हिँडेको बाटो मेरो स्कुल छाउने स्लेट ढुङ्गा बोकेर । म पढेको स्कुल जाने बाटो । मैले अक्षर सिकेको बाटो । मैले सिसाकलम चलाउन जानेको बाटो । मैले कागजमा रङ्ग भर्न थालेको बाटो । मैले ज्ञानको उज्यालो पाएको बाटो । मैले आत्मविश्वास आर्जन गरेको बाटो । मैले ठूल्ठूला सपना देख्दै आफूलाई हुर्काउँदै डुलाएको बाटो । म फेरि ती सपना सम्झिँदै हिँड्न चाहन्छु । सपना देख्न सिकाउने यो वन, यो एकान्त, यी फूलहरू, आकाशलाई आकार दिने यी पहाडहरू अनि पहाडलाई आकार दिने यो बाटो म फेरि भोग्न चाहन्छु । आमाले कान अँठ्याउँदै स्कुल डोऱ्याएको यस बाटामा मेरा आँसु पनि छन् । ओ चियापसले बहिनी, म रुँदै हिँडेको यो बाटो वर्षौंपछि आज ई अब हिँड्दै छु ।

'शिक्षक मारिएपछि स्कुल पनि बन्दै छ,' त्यो बहिनी भने अझै भरियाहरूसँग भनिरहेकी छ- 'बच्चाहरू अचेल गाई हेर्न जान्छन् ।'

'अस्तिताका नेता मारिएको पनि त्यै गाउँमा होइन ?' त्यही भरिया सोधिरहेको छ ।

पहिलो ओरालामै केही खस्याक्क गर्छ । बाँदर उफ्रेको सम्झिन्छु । आवाजले आकार दिन्छ । आफ्नो मनमा के गुज्रेको छ त्यस्तै आकृति आउँछ आँखामा । कसैको पाइला सरेको सुन्छु, आफूअघिअघि । कोही हिँडिरहेको होला वा स्याल, मृग केही तर्किरहेको होला । आवाज अलि बढ्छ, सँगसँगै कल्पनाको आकार पनि

बढ्छ । चितुवा, भालु केही होला कि ? होइन, होइन । म आफूलाई सम्झाउँछु र पाइलाको दूरी बढाउँछु । गति बढाउँछु । मुटु ढकढक गर्छ । केही होइन है भन्दै आफूलाई सान्त्वना दिन्छु । 'ल है !' चिच्च्याउँछु । अगाडि झन् ठूलो खस्याक्क गर्छ । थाम्न सक्दिनँ, एक्कासि ठिङ्ग उभिन्छु । आँखा च्यातिन्छन् । हा, केही होइन रहेछ । लालीगुराँसको ठूलो रूखबाट गाईहरू निस्कन्छन्, एउटा किशोर लट्ठी हल्लाउँदै बाटामा ओर्लिन्छ । मन शान्त हुन्छ । ओठमा न्यानो लहर चल्छ । आँखा साना पार्छु । र यथावत् पाइला चाल्छु ।

'अगाडि बम होला है दाइ,' किशोर भन्छ- 'अस्ति भर्खर ऊ त्याँ पड्केको थियो ।'

'कहाँ ?'

'त्याँ अगाडि कता हो, झाडमा छ कि, बाटामै छ कि, अलि होस गरेर हिँड्नुहोला है ।'

घोसेमुन्टो लगाएर हिँड्न थाल्छु । मलाई गुराँस हेर्ने मन छ । कस्तरी फक्रेका छन् वसन्त ऋतुका यी सूचकहरू ! ओहो, ल बाटाकै छेउको बुटामा बुट्टा भरेजस्तै फूल ढाकिएको छ । हरियो पोथ्राभरि रातै ढकहरू छन्, नमस्कार गर्ने मुद्रामा । मन त्यसैत्यसै आनन्दित हुन्छ । फुरुङ्ग पर्छ । उड्छ हावासँगै । यसो हेर्छु, कहाँ त्यो मात्रै बोट हो र ? अगाडि, दायाँ, बायाँ, तल, माथि जताततै उस्तै झ्याम्म राता टाटेपाटे बोटहरू छन्, नयाँ ऋतु-क्षेत्रको स्वागतद्वारझैँ उभिरहेका । कलिला आँखा र कमला पाखुरा हुँदै डुल्दै फिर्दै गाउँदै रत्तिएको यो वन आज यतिका वर्षपछि कति मनोहर देखिएको छ ! बुटा त्यही हो, फूल तिनै हुन्, वन त्यही हो, बाटो उही हो तर नयाँ ऋतु बनेर म प्रवेश गर्दा भावना अर्कै छ । आँखा उही हुन् तर हेराइ अर्कै छ । शरीर उही हो तर सोचाइ बेग्लै छ ।

'ल है दाइ, नआत्तिई जानुहोला,' किशोर भनिरहेको छ- 'राम्ररी हेर्नुहोला ।'

'हँ ?' म उभिन्छु । उसलाई हेर्छु । ऊ गाई धपाउँदै डिलमा पुगेको छ । त्यहाँ तल ठूलो भीर छ । भीरमा उभिएर पनि ऊ मलाई सुझाव दिन्छ, सान्त्वना दिन्छ । मलाई सन्तोष हुन्छ । भीरमाथि उभिरहेको किशोर मेरो बाल्यकाल हो । ऊ अझै गोठालो गर्छ, म चित्रकार बनेर उभिएको छु, दुई दशकपछि । म ऊभन्दा फरक थिइनँ । न बोलीमा न अनुहारमा । फरक यत्ति हो, उसलाई कान अँठ्याउँदै स्कुल लैजाने उसकी आमा हुनुहुन्न । आमा हुनुहुन्छ तर उहाँ आफ्नो छोरालाई अब स्कुल लैजानुहुन्न । उसको स्कुलमा बम पड्केको छ । अस्ति भर्खर उनीहरू

चालीस जना अपहरित भए । दुई दिनपछि छाडिए । प्रधानाध्यापक भने मारिए । तैपनि बम असरल्ल छाडिएको वन आउनुपरिरहेछ उसलाई । ऊ मलाई हेर्दै टोलाउँछ । लट्ठीको टुप्पामा चिउँडो अड्याइरहेछ ।

झन् अगाडि गुराँसको ढकमक्क बोट छ । त्यसको ओझेलमा म उभिन्छु । एउटा फूल टिप्न चाहन्छु । एउटा फूल रुक्स्याकमा जुरो पार्न चाहन्छु । म धन्य छु, यो गाउँ फर्केको छु त गुराँस-याममा । यतिका महिना म कहाँ-कता चहारेँ तर फर्केको छु एक दशकपछि यो गुराँस-गाउँ । मेरो गाउँ । यस गाउँले मलाई हुर्काएको छ, बढाएको छ, पढाएको छ र काम गर्न बाहिर पठाएको छ । म चित्रकार बनेको छु तर रङ्गहरू खोज्दै चार भुवन चहार्दै फर्केको छु आफ्नै ओतमा । मेरो कोही छैन यहाँ । तर सबै थोक यहीँ छ । मेरा चित्रमा यहीँको प्रतिबिम्ब छ, यही पहाडको झलक छ, यही बोटको छाया छ । यही पृष्ठभूमिमा बाँधिएको छु म । यहीँको झरना बगेको छ मेरो क्यानभासमा । यसैको छङछङ उर्लिएको छ मेरो रेखाको लयमा । यहीँको गुराँसको रङ्गले लिपिएका छन् मेरा चित्र । रङ्गप्रतिका मेरा भावना र दृष्टिकोण यिनै पहाडले स्थापित गरिदिएका हुन् । यी पहाडका फूल र रङ्गले दिएको चेतनामा मेरो चित्रकार व्यक्तित्व विकसित भएको हो । यही डाँडाकाँडा ढाक्दै उड्ने तुवाँलोले छोपेको छ मेरो भावना । म उभिएको डिल, म हिँडिरहेको बाटो, सुँघिरहेको हावा, नुहाइरहेको घाम, यिनै सम्पदा छन् मेरो व्यक्तित्वमा । नोटकपी झिक्छु र पढ्छु फेरि त्यही कविता मैले पल्पसाका लागि कोरेको । म यही डिलमा उभिएर सुनाउन चाहन्छु यहाँको हावालाई, मेरी प्रियको नाममा रचना गरिएको यो कविता ।

*लैजान्छु म तिमीलाई*
*मेरो जन्मगाउँ*
*त्यो पहाडपारि*
*मैले खेल्ने ठाउँ*
*लेउ लाग्ने ढुङ्गा*
*बल्छी थाप्ने खोला*
*देखाउनु छ मैले*
*सिमल झर्ने चउर ।*

तुवाँलाले ढाकिरहला
भालेसँगै उठौँला
हुस्सुले छोपिरहला
झरनासँगै हिँडौँला
बादलले छेकिरहला
बुनेर छत्री ओढौँला
उकालीको चिप्लो ढुङ्गा
ओरालीको चिसो छाया
मृगसँगै कुदौँला
पसिना निचोर्दै
डाँफेसँगै उडौँला
सिउरिदिउँला तिमीलाई
सुनाखरी सुनगाभा
लैजान्छु म तिमीलाई
मेरो डाँडाकाँडा ।

कतिले छाडे
आफ्नो जन्मगाउँ
कतिले त्यागे
माया गर्ने ठाउँ
जता पनि म देख्छु
गाउँ छाड्नेहरू
जहाँ पनि म भेट्छु
माया मार्नेहरू
पुछिएको सिउँदोझैँ
म जन्मेको पहाड
वसन्त त आओस्
रँगिएला गुराँस
लैजान्छु म तिमीलाई
म जन्मेको गाउँ ।

'गीत गाउनुभा'को हो दाइ ?' किशोर मतिर दौडिन्छ ।

'होइन,' म भन्छु- 'कविता पढेको ।'

'म सारूँ ?'

ऊ मैले च्यातेको पन्नामा मेरै कलमले हुबहु उतार्न थाल्छ । यसरी नै मैले यही डिलतिर उभिएर सिसाकलमले यो पहाडको चित्र उतारेको थिएँ, धेरैपल्ट । कविता पनि रचेको थिएँ । यसरी नै मैले गोठालाहरूको भाका टिपेको थिएँ, उनीहरूकै शब्द टिपेर मैले लय भरेको थिएँ । स्कुलमा उभिई-उभिई मैले सुनाएको थिएँ ।

'तिमी त कवि बनौलाजस्तो छ,' गुरुले भनेका थिए ।

'म त इन्जिनियर बन्ने सर,' मैले भनेको थिएँ ।

अनि हाँसेका थिए मेरा साथीहरू ।

'तिमी चैं गोठालो बनौलाजस्तो छ,' चर्को हाँस्ने मेरो सहपाठीको नाकतिर औँलो तेर्स्याउँदै गुरुले भनेका थिए । अनि उसले जवाफ फर्काएको थियो- 'म त मास्टर बन्ने सर !'

'हो ! तिमी मास्टर बनौलाजस्तो छ,' गुरुले भनेका थिए- 'कपडा सिउने मास्टर !'

फेरि सबै गललल्ल हाँसेका थिए ।

'म के बन्छु होला सर ?' अर्को टेबलमा बसेकी उर्मिलाले उभिएर कौतूहलवश सोधेकी थिई । फेरि सबै हाँसेका थिए ।

'तिमीलाई के बन्न मन छ ?' गुरुले सोधेका थिए ।

'म त ठूली मान्छे बन्ने सर,' उसले भनेकी थिई । हाँसो झन् बढेको थियो ।

'तिमी यत्रै त रहन्नौ नि,' उनले भन्दा कक्षाकोठा फेरि रन्केको थियो । अनि ऊ थचक्क बसेकी थिई, लाजले । पछि ऊ 'ठूली' नहुँदै अन्मेर डोलामा चढी । ऊ जन्तीको माझमा रुँदै गएको हामीले देख्नुपऱ्यो ।

त्यसैताकादेखि मलाई साथीहरूले 'इन्जिनियर सा'प' भनेर जिस्क्याउन थालेका थिए । 'मास्टर' बन्छु भन्नेले बाहेक । सम्झेर म हाँसेँ । मेरो हाँसो गुराँसको थुँगाजस्तै भुइँमा खसेछ ।

'किन हाँस्नुभा'को दाइ ?' किशोरले सोध्यो- 'मैले सारेको मिलेन ?'

'ए होइन-होइन,' मैले भनेँ- 'त्यस्सै हाँसेको ।'

अनि ऊ फेरि कवितामै दत्तचित्त भयो ।

'मेरो अक्षर नराम्रो छ, हगि ?' उसले सोध्यो ।

'मेरो भन्दा राम्रो छ ।'

'तपाईंको भन्दा धेरै राम्रो त होइन,' उसले भन्यो ।

'अलिअलि ।'

'अलिअलिभन्दा अलि कम,' उसले भन्यो । ऊ निहुरिरहेको थियो ।

'स्कुल बन्द भएछ, हगि ?' मैले सोधेँ ।

'त्यसै भन्नुपर्‍यो ।'

'कहिले खुल्छ रे ?'

'ढोका त खुल्लै छ,' उसले भन्यो- 'बमले उडाइदिएको ।'

'ढोकै छैन ?'

'ह्वाङ्गै छ ।'

'कविता कस्तो लाग्यो ?' मैले सोधेँ ।

'राम्रो छ,', उसले भन्यो- 'तपाईंले कसको कापीबाट सार्नुभा'को नि ?'

'आफैँले लेखेको ।'

'कसले सिका'को नि ?'

'आफैँले सोचेर लेखेको ।'

'ए, आफैँले सोचेर पनि लेख्न सकिन्छ ?' उसले सोध्यो ।

'हो,' मैले भनेँ- 'यस्तै मन लगायौ भने तिमी कवि बन्न सक्छौ ।'

'नाइँ,' उसले भन्यो- 'म त इन्जिनियर बन्ने ।'

म झस्किएँ, मेरो जस्तै सपना हुर्काइरहेको किशोर भेटेर । म हिँडेपछि पनि उसले बाटो राम्ररी हेर्दै हिँड्न सुझाव दियो । ऊ गाई भएको भीरतिर पुगेर कापी हेर्दै भट्ट्याउन खोजिरहेको थियो । उसलाई लय थाहा छैन, आफैँ सोचेर मिलाउला । यो वनपात, फूल-बगैँचा, झरना, खोल्सा, घामछाया अनि पहाडको यो हावासँगै उसले त्यसको भाका पाउनेछ । म पाइला लामा-लामा पार्छु । फर्केर हेर्छु, ऊ पाना हेर्दै हात हल्लाइरहेको छ ।



# १५

'हु इज दिस ?' कोही कराएको सुनियो ।

गाउँ प्रवेश गर्ने पर्खालमाथि बसेर चर्को बोल्ने को हो भनेर टोलाएँ । दौदबेको रूखले ओझेल परेर बसेको छाया देखेँ । टोप सिउरेर उभिएका लाहुरे काका रहेछन् । रूपलाल आले । अङ्ग्रेजी बोल्ने आदत किन मेटिन्थ्यो ?

हाम्रो गाउँका पूर्वलाहुरेमध्ये यिनै काका एक जना हुन् जसलाई अङ्ग्रेजी फर्माइहाल्नुपर्छ । त्यसमाथि स्कुले विद्यार्थी वा काठमाण्डूबाट आएका पढालेखा तन्नेरीसँग उनी नेपालीमा कुरै गर्दैनन् । म सानो हुँदासम्म अङ्ग्रेजी बोल्नुपर्छ भनेर उनको नजिकै पर्दिनथेँ । हामी तर्किनुको अर्को कारण के पनि थियो भने उनको स्वर कडा हुन्थ्यो ।

अहिले पनि स्वरको ओज उस्तै रहेछ । उनी फेरि माथि डिलबाट कड्किए- 'हु इज कमिङ ?'

यसो छड्के परेर उनलाई हेरेँ, माया लाग्यो– शिरमा उही टोप रहेछ, खुइलिइसकेको । कमिज र हाफपाइन्ट पनि नयाँ लागेन । पेन्सिन पकाएर फर्क्या भए पो हुन्थ्यो । ब्रिटिस लाहुरे भन्नु मात्र, बरा !

'गुड इभिनिङ लाहुरे काका !' मैले भनेँ ।

उनले ठम्याउन सकेनन् । ए, उनका आँखामा बाक्लो सिसा भएको चस्मा झुन्डिएकै रहेछ ! उनी उभिरहेका थिए । मैले पर्खालको सिँढी चढेँ । छप्पनी ढुङ्गा बिछ्याएका बेला हामी गाउँभरिका केटाकेटीले आफ्ना अभिभावकहरूसँगै स्लेट खानीबाट सकी-नसकी ढुङ्गा ओसारेका थियौँ । उनको नजिक पुगेपछि बायाँपट्टिको आँखाको सिसा फुटेको देखेँ । होत्त नि, चितुवाले कोतरेको आँखा उनी ऊ बेलादेखि देख्दैनन् । पट्टी बाँधेर हिँडेका थिए केही वर्ष ।

मै हुँ भनिटोपल्नुपर्ने दशाले बिचरा लाहुरे काका टाटे चितुवासँग कुस्ती खेल्न पुगे । मलायाबाट फर्केकै वर्ष हो क्यार, गाउँनजिकै चितुवा घुर्न थालेको छ भन्ने थाहा पाएर गाउँलेहरूलाई 'लेफ्ट राइट' गराउँदै जङ्गल के पसेका थिए, मर्नु भयो । मुस्किलले ज्यान जोगाएका थिए । एउटा आँखो गइहाल्यो । बाबियोघारीमा उनको रस्साकस्सी धेरै वर्ष पर पहाडसम्म किंवदन्ती बनेको थियो । दुई-तीन पहाडपारिबाट समेत उनलाई हेर्न आउने गाउँलेहरू हामीले देखेका थियौँ ।

बिसेक भएपछि फेरि त्यही चितुवासँगको घमासान युद्ध पनि कथा हाल्न थाले । पहिला मलाया अनि चितुवा, उनका जम्मा दुई कथा हुन्थे । एकपछि अर्को गर्दै हरेक दिनजसो त्यही कथा सुनाउँदा-सुनाउँदा उनको एउटा शैली स्थापित भइसकेको थियो, जसलाई हामी सजिलै नक्कल गरेर जिस्क्याउँथ्यौँ- 'चाइन्जो क्यारे नि, है, त्याँ दौडेर गनसहित पोजिसनमा बस्दा गड्याम्म ... !'

त्यसै गरी चितुवाको कथा उनी यसरी सुरु गर्थे- 'चाइन्जो क्यारे नि, है, त्यस्साले त माथिपट्टि झाडभित्र लुकेको रहेछ ... !'

कक्षा चढ्दै गएपछि हामीसँग अङ्ग्रेजीको निहुँ झिक्ने भएर मात्र उनीबाट भाग्नुपर्ने भएको थियो । महिला र गाउँका बूढापाकासँग भने एक थोपा अङ्ग्रेजी मिसाउँथेनन् ।

माथि गाउँबाट कुकुर भुक्यो । गहुँका ठुटा भरिएको बारी, उतापट्टि गोबरका काला थुप्राहरू देखिए । कोटगाउँको डाँडातिर घाम सर्किसकेको थियो । उनी यसो निहुरिएर मलाई हेर्न थाले । कसरी चिनून् उनले ? दश वर्षपछि लाठे भएर गाउँ फर्केको मलाई नचिन्नु उनको दोष होइन । लट्ठी पनि टेकेका रहेछन् । लट्ठीको टुप्पो मेरो अनुहारतिर तेर्स्याउँदै उनले आँखामा क्वारक्वारती हेरे ।

'ए हे,' उनी बोले- 'आर यु द सेम योङ च्याप ?'

'के काका ?'

'द योङ च्याप आई युज्ड टु टेल द स्टोरी अफ आवर वार ?'

कुन युद्धको कुरा गरेका होलान् बूढाले ? अनि कुन तन्नेरी थिएन र गाउँमा उनको कथा नसुन्ने ? माथिको चौतारामा बसेर उनले आफू लडेको मलाया-युद्धको कति बखान गरे कति ! उनको कथा दोहोऱ्याई-तेहऱ्याई कतिपल्ट सुनियो, गन्ती नै हुन सक्दैन । उनले कथा सुनाएका कति केटाहरू त अहिले ब्रिटिस आर्मीमा त्यस्तै युद्ध लडिरहेका होलान्, कति भारतीय सेनामा छन्, कति मलेसिया,

अरब, कोरिया पुगेका छन् । बाहुनका छोराछोरी, स्कुलबाट उम्किन सकेकाहरू, कर्मचारी छन् । धेरैजसो शिक्षक बनेका छन् । अहिले त गाउँमा को पो होला र ?

'चिन्नुभयो काका अब ?'

'आई थिङ्क यु आर द सन अफ माई गुड फ्रेन्ड,' उनले भने ।

उनका 'गुड फ्रेन्ड' पनि हाम्रो बाको पुस्ताका सबै थिए । त्यसैले उनले मलाई को भनेर लख काटे, मैले ठम्याउन सकिनँ । त्यही पनि उनलाई अब पत्यार भइसकेको छ म उनको कथा सुनेर हुर्केको यहीँको चल्लो हुँ ।

'ह्वेन आई रेमेम्बर योर फादर,' उनले चिनेछन्, भने- 'आई स्टिल बिकम इमोस्नल !'

'भैहाल्यो काका,' मैले सम्झाएँ- 'मेरा बाआमाको कुरा नसम्झाउनोस्, गएको कुरा गयो-गयो । बरु भन्नुस्, हाउ आर यु ?'

मेरो आफन्ती त खासै कोही छैन, यहीँ गाउँमै पनि । साइनो खोज्दै जाँदा भेटिनेहरू भने होलान् ।

'ओके, आई एम ओके,' उनले गम्रङ्ग अँगालो हालेर आफूसँग मेरो उचाइ पनि नापे । उनी यसै गरी सानामा मेरो नापो लिएर ब्रिटिस आर्मीमा क्लर्क बन्नुपर्छ भन्थे । मेरो उचाइ सोचेभन्दा तीव्र गतिले बढेपछि एकपल्ट त उनले भनेका थिए- 'यु क्यान बी अ ट्राफिक पुलिस !'

उनको पछि लागेर म गाउँ उक्लिएँ । बारीभरि गोबरका थुप्रा जम्मा गरिएकाले उकालो बारीको बाटो घुम्दै जानुपर्थ्यो ।

घाँसपातको भारी बोकेर उक्लिरहेका महिलाहरूको लर्को पल्लोपट्टि यस्तै घुमाउरो उकालामा थियो । तल खोलाको किनारबाट आएको त्यो लर्को देखेर मलाई ती ढुङ्गाहरूको सम्झना भयो । तिनै ढुङ्गा हुन् मलाई कलाकार बनाउने । ती ढुङ्गाको आकार र फुत्तफुत्त उड्ने चराहरूको गतिबाटै मेरो उत्सुकता बढेको थियो । एकै खाले ढुङ्गाका अनगिन्ती आकारमा म विभिन्न मानिस, जनावर र रूखको छवि पाउँथेँ । चरा देख्नेबित्तिकै म कति फुर्किन्थेँ भने एकपटक परालको टौवाबाट चराझैँ उड्न सिक्दा दुई दिनसम्म हल न चल हुने गरी पछारिएको थिएँ । दाइँ हाल्ने बेला परालका न्याना छाप्राभित्र सिरक ओढेर गीत गाउँदै सुत्ने दिनहरू घरीघरी सम्झिन्छु ।

दाइँसँगै झन् कठ्याङ्ग्रिँदै जाने हिउँदको चिसो मेट्न हामी उखु पेल्ने बेला खुब तातो खुदो खान्थ्यौँ । मच्चीमच्ची कोल धकेल्ने र दाइँ हाल्दा मियो रिङ्ने

गोरु पिट्ने, अहो, कति निश्चल र चञ्चल दिन थिए ती ! पूर्वपट्टिको सानो खोल्सोपारि कोल भएको गरो अहिले देख्न सकिनँ । त्यसभन्दा माथि तोरी पेल्ने कोल बसेको गरामा भर्खर घामको फिक्का रङ्ग बास गर्दै छ । घाम सर्दै माथि टिनको छाना भएको घरमा ठोक्किएपछि आँखा तिरमिराए ।

'मलेसियाबाट छोराले पैसा के पठाइदे'को थ्यो,' लाहुरे काकाले भने- 'भानु बज्जियाले टिनको छाना हाल्यो !'

'तपाईं बिसेकै हुनुहुन्छ काका ?'

'भन्नुपर्‍यो ।'

'तपाईंलाई सम्झिरहन्छु म ।'

'हाउ डु यु रेमेम्बर मी ?'

'तपाईंले हालेका कथा,' मैले भनेँ- 'आफ्नो गाउँ सम्झिनेबित्तिकै चौतारामा भएभरका केटाकेटी बटुलेर कथा भन्ने तपाईंको अनुहार आइहाल्छ ।'

'आई एम ग्ल्याड टु नो ।'

'सत्य हो काका,' मैले भनेँ- 'तपाईं नभएको भए यो गाउँ फर्किन पनि मन लाग्थेन ।'

उनी एक गरामाथि उक्लेर ठिङ्ग उभिए । 'आई एम ह्याप्पी टुडे,' उनले भने- 'आफ्नै छोरो फर्केजस्तो लाग्यो ।'

'हो नि त,' मैले भनेँ- 'बरु भन्नुस्, कस्तो छ गाउँको स्थिति ?'

उनले एकटक मलाई हेरे । नजिक आएर उभिए । शिर अलि निहुर्‍याएर सानो स्वरमा भने- 'टेक केयर माई सन ।'

'किन ?'

'आज ठूलो ग्रुप आउँदै छ,' उनले भने- 'उनीहरू बलिया-बाङ्गा तन्नेरीलाई लैजान्छन् । हाम्लाई त के छ र ? खाना खान दिने हो, चामल, तरकारी दिने, भाँडाकुँडा दिने । आफैँ पकाउँछन्, आफैँ पस्किन्छन्, आफैँ भाँडा मस्काउँछन् ।'

'अचेल पनि तपाईं अङ्ग्रेजी बोल्नुहुन्छ काका,' मैले भनेँ- 'केटाहरूसँग ?'

'माउवादी हो कि होइन म सुरुमै ठम्याइहाल्छु ।'

'कसरी ?'

'अङ्ग्रेजीमा सोध्छु,' उनले भने- 'जसले पुँजीवादी भाषा नबोल्नोस् भन्छ, ऊसँग बोल्दिनँ ।'

म सम्झिन्छु, यिनै काका हुन् जसले मलाई पाँच कक्षा पुग्न लाग्दा झन्डै बूढानीलकण्ठ स्कुल पठाउन लगाइसकेका थिए । मेरा बाले सुरसार पनि कस्नुभयो तर सदरमुकाम पुगेर जाँच दिनुपर्ने बेला टरिसकेछ ।

'तिम्रो छोरा राम्रो पढ्लाजस्तो छ,' यिनले भनेका थिए- 'कम्तीमा आँपपीपल स्कुल वा गण्डकी बोर्डिङ लैजाऊ ।'

तर बाले मेसो पाउनुभएन । 'ठीकै छ,' बाले भन्नुभयो- 'यहीँ पढोस्, पढ्न चित्त लगायो भने सकिहाल्ला नि !'

पछि मुस्किलले काठमाण्डू जान पाएँ ।

ऊ त्यो पश्चिमपट्टिको नेटो काटेर जाने भिरालो जङ्गलमा एकपटक बाले मलाई कति तर्साउनुभयो भने म अहिले पनि झसङ्ग हुन्छु, बेलाबेला । ठूलो ढुङ्गामा बसेर उहाँले धम्की दिनुभएको थियो- 'तँ स्कुल जाँदैनस् भने यैँबाट खसालिदिन्छु ।'

'तल चितुवाको घ्वारघ्वार छ, सुनिस् ?' उहाँले त्यसरी पनि तर्साउनुभएको थियो ।

तैपनि म स्कुल जान नमानेपछि आमा मलाई घोक्र्याउँदै, घिसार्दै लैजानुहुन्थ्यो ।

'आजकाल स्कुल कस्तो छ काका ?' मैले सोधेँ ।

'देअर इज नो मोर अ स्कुल,' उहाँले भन्नुभयो- 'भएभरका केटाकेटी पढिर'का बेला ड्याम्म पड्क्यो ।'

चुप्प लागेर अर्को कान्ला चढ्यौँ । चिर्रचिर्र कस्तो चरा हो, बत्तेर हामीमाथिबाट तल झऱ्यो ।

माथिबाट को हो रेडियो घन्काउँदै झरेको आवाज पनि आयो । म जन्मिनुअघिको कुरा हो, एकपटक बाले एक जना ब्रिटिस लाहुरेसँग रेडियो किन्नुभएको थियो । त्यो रेडियो गाउँमा पहिलोपल्ट आएको हुनाले त्यसको भाउ थिएन । सबै जना झुम्म परेर के बोल्छ भनीकन कान थापिरहने त्यस बेलाको कुरा, बाले भर्खर ब्याएकी एउटी माली गाईसँग त्यो साट्नुभएको थियो । 'बेटारी निखेपछि रेडियो जति कान निमोठे पनि बोलेन,' बा भन्ने गर्नुहुन्थ्यो- 'त्यो जैरेलाई फेरि तिनै लाहुरे अर्को छुट्टीमा आउँदा साटेँ, बेत बसेकी गाईसँग ।'

'नब्याउने भए पनि धर्म हुन्छ भनेर त्यो गाई पालेँ,' उहाँ भन्नुहुन्थ्यो- 'गोबर त हुन्छ !'

गोबरका थुप्राहरूको गन्धसँगै घर आउन लागेको थियो । मेरो घरको त नामोनिसान होला र ? लाहुरे काकाकै घर बास गर्नुपर्ला ।

'कसो काका ?'

'सोध्नुपर्छ ?' उनले हप्काए- 'सिल्ली ब्वई ! यु आर स्टिल द सेम ।'

'सेम योङ च्याप, है काका ?'

काकाको पिँढीबाट आफ्नो घर हेरेँ । ढुङ्गाको छानो उस्तै छ, बार्दली बरु अलि ढल्केछ । पिँढीका खाँबाहरू टेढिएछन् । नजिक पुगेँ । भत्केको आँगनमा गाउँभरिका कुकुर झुत्तिने रहेछन् । वस्तुभाउ सबै यही आँगन भएर गाउँ छिचोल्ने रहेछन् । आरुका बोटहरू भने जतनसाथ छिमलिएका थिए । डिलबाट आफ्नो बारी हेरेँ, अँध्यारोको च्यादरले गाउँलाई सर्लक्क छोप्दै थियो । बाँसुरी बज्न थाल्यो । किस्नलाल थियो जो हरेक दिन गाउँको टुप्पादेखि तलसम्म बाँसुरी फुक्दै हिँड्थ्यो । कतै उभिएर बजाउनै नजान्ने । बजाउँदै भन्ज्याङसम्म पुग्थ्यो अनि झर्दै तल फेदीसम्म डुल्थ्यो । 'बाँसुरी बजाउने को हो काका ?' मैले सोधेँ ।

'किस्नेलाई बिर्स्यौ ?'

'ए उही हो ?' मैले भनेँ- 'अनि किन त बजाउँदै नडुलेको ?'

'गोली झिके पनि एउटा खुट्टा चल्दैन बिचराको,' काकाले भने- 'घरको बार्दलीमा बस्छ, बजाउँछ ।'

'कसरी गोली लाग्यो ?'

'क्रसफायरमा पर्‍यो,' उनले भने- 'फुक्दै हिँडेको सुरमा गोली चल्न थालेको पत्तै पाएन ।'

उतापट्टिको घरमा पनि चहलपहल देखिनँ । त्यो घर शुभशङ्करको हो जो हरेक वर्ष इन्द्रजात्रा हेर्न काठमाण्डू जान्थे । हिँडेरै उति टाढा 'नेपाल' जाने शुभशङ्करले भनेको सुन्थेँ- 'जीवनमा इन्द्रजात्रा नहेरी स्वर्ग गइँदैन । स्वर्ग पुगिहालियो भने पनि त्यहाँ सोध्छन्– तिमीले इन्द्रजात्रा देखेका छौ ? छैन भन्यो भने पठाइदिन सक्छन्, नरकतिर ।' पछि थाहा पाएँ, उनी केही वर्षअघि 'स्वर्ग' पुगिसकेछन् ।

'टेक दिस ग्लास,' काकाले पानी उमालीवरी मेरो हातमा पुरानो स्टिलको तातो गिलास थमाए ।

गाउँमा कतै चालचुल देखिएन । काकाकै घरमा पनि कोही छैनजस्तो छ । के भनेर सोधूँ ? म फेरि त्यो बार्दली हेर्न थालेँ जहाँ बसेर म रेखा कोर्न थाल्थेँ ।

मलाई सम्झना छ, एकपटक चौतारामा कथा हालिरहेका बेला काकाको चित्र खिचेको थिएँ । पल्लो डिहीतिर हेरेँ जहाँको तोरीबारीमा बसेर म तोरीका परागसहित डाँठहरूको खुबै चित्र गर्थें । रङ्गप्रति मेरो टस त्यही बेला बसेको थियो । एकपटक मैले सदरमुकाम झरेर रङ्गहरूको सिसाकलम ल्याउन बाको बुस्कटबाट पैसा चोरेको थिएँ । सम्झेर ग्लानिबोध भइरहन्छ, तर ठीकै त भयो भन्ने पनि लाग्छ । सम्झेर चित्त केमा कुँडिन्छ भने उहाँले पैसा चोऱ्यो भनेर एउटा गोठालालाई सिस्नुपानीले हान्नुभएको थियो । त्यो बरा अहिले इन्डियातिर छ भन्ने सुन्छु । कुनै दिन भेटेँ भने ऊसँग माफ माग्ने मन छ ।

'ओहो काका,' म चकित भएँ- 'यो त कफीजस्तो छ !'

'कफीजस्तो ?' उनी जङ्गिए- 'अनि असली कफी चैँ कस्तो हुन्छ ?'

'यो कफी नै हो,' मैले भनेँ, अर्को सुरुप पनि लिएँ । हरर्र बास्ना चलेकै थियो ।

'तिमीले के ठानेका छौ हाम्लाई, हामी गाउँलेलाई ?' उनले भने- 'मैले आफ्नो दुई हल पाखोमा पूरै कफी लगा'को छु, दुई वर्ष भैसक्यो । तिम्रो बारीभरि पनि लगा'को छु । तिमी आउने होइन, मलाई लाग्यो किन बाँझो राखिरहुँ ?'

'वाह !' मैले भनेँ ।

'म एक्लै भए पनि यसैमा दत्तचित्त लागेको छु,' उनले भने- 'दिन काट्ने मेलो यै हो । दिन ढल्किँदै गएपछि भने अघि तिम्लाई भेटेको पर्खालतिर गएर उभिन्छु ।'

'किन काका ?'

'छोरा फर्कियो कि भनेर,' उनले भने ।

'कहाँ छ बेलु ?'

'था' भए किन त्यसरी सधैँ बाटो कुरी बस्नुपर्थ्यो ?'

कफी सकेर गिलास पिँढीमा राखेँ । म कस्तो बेसोमती ! सम्झेर आँगनछेउको धारामा पखालेर पिँढीको सानो टेबलमा राखेँ ।

'कफी मीठो रहेछ ।'

'हावापानी मीठो हो,' उनले भने ।

काकाको घरअगाडिबाट एक हूल तन्नेरीहरू नबोलीकन माथि लागे । काकाले हेरे । नचिने पनि बाटामा उभिएर बातचित गर्ने उनको बानी बदलिएछ । खै त, नबोली उभिरहे ! एउटी केटीले मलाई पुलुक्क हेरेजस्तो लाग्यो । उसको अनुहार

कटिबद्ध थियो । ऊ पुछारमा थिई । कसिलो कपडामा हिँडेकी त्यस केटीभन्दा अगाडिका सबैजसोको एउटै उमेर, लगभग उस्तै पोसाक र हिँडाइको समान गति थियो । काका नबोलीकन उभिरहेको देखेर चित खाएँ ।

'को हुन् यिनीहरू ?'

'नयाँ सत्ताका जनता हुन्,' उनले सानो स्वरमा भने ।

'के भन्छन् यिनीहरू ?'

'हाम्रो सत्तामा देश अर्कै बन्छ भन्छन् ।'

'चिन्नुहुन्छ यिनीहरूलाई ?'

'एउटीलाई चिन्छु ।'

'कुन ?'

'त्यही पुछारमा हिँड्ने ।'

'को हो ऊ ?'

'मेरी छोरी,' बूढा भन्दै भित्र पसे- 'त्यै एउटी छोरी पनि गई !'

ए, त्यो केटी यमकुमारी हो ? मेरी बास्सै, हुर्केर हिँड्ने भइसकिछ ! दश वर्ष धेरै समय हो हुर्कौलो उमेरका लागि । मैले चिन्दासम्म आमाको धोती समातेर रोइरहन्थी । उसले गुच्चा खेल्ने उमेरमा म हुर्किसकेको थिएँ । मपछिको पुस्ताकी हो ऊ । उसले पनि मलाई चिनिनजस्तो छ । पुलुक्क त हेरेकी थिई । नौलो मान्छे को होला भनेर हेरेकी होली ।

'यिनीहरू यता हिँडिरहन्छन् ?'

'कहिले आउँछन् थाहा हुँदैन,' उनले भित्र मझेरीमा लाल्टिन बाल्दै भने- 'ऊ बाँचोस् भन्ने मात्र कामना गरिर'न्छु ।'

'त्यसरी हिँडेकी छ,' मैले भनेँ ।

'एक्लै छैन क्यारे,' उनले सन्तोष मान्दै भने ।

'अरू पनि गाउँकै हुन् ?'

'चिनेनौ कसैलाई ?'

'अहँ ।'

'म पनि ठम्याउन सक्दिनँ, चस्माले पनि सबै देखाउँदैन,' उनले भने- 'एउटा मान्छे चिनियो भने अर्को धमिलो हुन्छ ।'

'भने'सि ... गाउँबाट धेरै हिँडेका छन् यसरी ?'

'त्यहाँ बिर्खेको छोरो हुनुपर्छ, भानुकी छोरी हुनुपर्छ, मोतीको छोरो, खुइलेको जेठो छोरो, कुमालेको माहिलो छोरो, बिखे विश्वकर्माको छोरो, कैलेकी छोरी, पण्डित होमनाथको ...,' उनले भने- 'सबै हुनुपर्छ ।'

'यमकुमारीलाई कसरी पठाउनुभयो त ?'

'स्कुल गएकी थिई, एसएलसी दिनुपर्ने मान्छे, उनीहरूकै ड्रेस लगाएर घर आई,' उनले भने- 'राति याँ मलाई हतियार देखाई । मैले चलाउन सिकाएँ । राम्ररी सिकिन भने उसकै ज्यानको खतरा !'

म घरबाहिर निस्कैं । त्यो समूह अदृश्य भइसकेको थियो । तिनीहरू हिँडेको बाटो केहीबेर पाइला सारैं । अँध्यारो बढ्दै गए पनि बाटाको उज्यालो बाँकी थियो। जून कति बेला टल्केला कुन्नि ? अँध्यारामा मैले आफ्नो घर हेरैं । यति बेला त्यस घरमा म लाल्टिन बालेर बार्दलीमा पढिरहेको हुन्थैं । त्यहाँ अहिले निस्पट्ट अँध्यारो छ । मलाई उज्यालो दिने घर अहिले अँध्याराको घुम्टामा लपेटिएको छ ।

'तिम्रो घरको बिजोग देखेर पनि मलाई गाउँमा बस्न मन लाग्दैन,' काकाले भने ।

म केही बोलिनँ । म के गर्न सक्छु ?

'फुर्सद लिएर आऊ,' उनले भने- 'याँबाट टुरिस्ट हिँड्ने बाटो बनाउन सकिन्छ । धानचुली हिमालको फेदतिर जाने रुट पार्न सकियो भने याँ अनेकन् देशका मान्छे हिँडाउन सकिन्छ ।'

हो, यहाँबाट बायाँ तर्पायाँ लागियो भने अघिल्लो पहाड काटेपछि लेक सुरु हुन्छ । अर्कै मौसम र प्रकृति, अर्कै भूगोल र वेशभूषामा प्रवेश गरिने त्यस भेगबाट आधारशिविरसम्म रोमाञ्चक पदयात्रा गर्न सकिन्छ । यो रुट बनाउन सकियो भने कोटगाउँ हुँदै आउने पर्यटकको बास सीधै यहीँ गराउन सकिन्छ । त्यसमाथि मैले आफ्नो कल्पनाअनुसारको रिसोर्ट बनाउन सकैं भने के होला ?

म आफ्नो पाखालाई जोडजाड गरेर चक्लाबन्दी गर्न सक्छु। घर बसेको थुम्कामा एउटा रिसोर्ट बनाउन सकिन्छ । क्याफेसहित आकर्षक कलाग्राम निर्माण गर्न सक्छु। गाउँदेखि अलि उचाइको थुम्कामा एक्लै उभिने आफ्नो घरको रूपान्तरणको सुन्दर खाका सोच्दै बस्छु ।

भोलि यो पहाड फरक हुनेछ । मान्छेहरू पहाड फर्किनेछन् । दूरसञ्चारमा टिक्न थालेको छ समय । टेलिकम सुलभ र सस्तो हुँदै छ । धन्य छन् माइक्रो

चिप्स, सेटेलाइट, अप्टिकल फाइबर र इन्टरनेट ! म यही पहाड बसेर विश्वग्रामको सदस्य हुन सक्नेछु । त्यस्ता पदयात्री यहाँ आउन रुचाउनेछन् जो पहाडसँगै ध्यानमग्न हुन चाहन्छन् । र तिनलाई इन्टरनेटमार्फत विश्वभेलमा आबद्ध गराउन सकिन्छ । पहाड र इन्टरनेट परस्पर अमिल्दा लागे पनि यसको मिश्रणको मधुरो कल्पना म गर्छु । म यहाँ उभिएर यो पहाडलाई विश्वग्राममा उभ्याउन सक्नेछु । के यो पहाडको छहारीमा त्यो सम्भव छैन ?

घिरौँलाको झाङमाथि ठडिने सेटेलाइटले यो पहाडमा नयाँ समय बोलाउनेछ ।

'किन टोलायौ ?'

'कुनै दिन म त्यो घरको रूप फेर्नेछु ।'

उनले मलाई हेरे ।

'मेरो मनमा एउटा चित्र छ,' मैले भनें- 'त्यो चित्रलाई यही गाउँमा म झुन्ड्याउनेछु ।'

'सपना देख,' उनले भने- 'आजकालका केटाहरू गाउँका बारेमा रोमान्टिक हुने मात्र हो भन्ने हाम्लाई था' छैन ?'

'साँच्चै भनेको काका,' मैले भनें । त्यसै बेला तल ढोका ढकढक गरेको आवाज आयो ।

झ्यालबाट मुन्टो निकालेर बूढाले सोधे- 'हु इज दिस ? को हँ ?'

'बा,' यमकुमारी रहिछ, झ्यालतिर टर्च लाइट बाल्दै भनी- 'म आ'की ।'

बूढालाई उठ्न अप्ठ्यारो हुन्छ भनेर म तल झरें र ढोकाको गजबार खोलें ।

'के छ भुन्टी ?' मैले जिस्क्याएँ । उसले हातको लाइट मेरो अनुहारमा पारेर हेरी ।

'ओहो दाइ !' उसले भनी- 'मैले अघि तपाईं उभिएको त देखेकी थिएँ तर चिनेकी थिइनँ ।'

'तिमारू त पूरै बन्दुक बोकेर हिँड्न थालेछौ ।'

'पढ्न सकिएन क्यारे,' उसले भनी- 'बाहिर जान पनि सकिएन ।'

'मैले बिहे गर्दिन आँटेको थिएँ,' बूढाले माथिल्लो तलाको खाटबाट भने- 'भाग्यमा रै'नछ ।'

'म आफ्नो भाग्य आफैं बनाउनुपर्छ भनेर लागेकी हुँ,' उसले भनी । उसको वाक्य सीधा मेरो छातीमा आएर बज्रियो ।

उसले टर्चको सहारामा एउटा सन्दुक खोली । आफ्ना कपडा रहेछन् । निकाली । घैंटोबाट दुई-तीन पाथी चामल पनि खिची । म हेरिरहेँ, बूढा माथिबाट सुनिरहेका होलान् ।

'अहिल्यै जाने ?'

'हो, पल्लो गाउँमा आजको सेल्टर छ,' उसले भनी- 'हाम्रो भेट होला नि, हगि दाइ ?'

ऊ निस्केपछि रातभरि निद्रा परेन ।

जाने बेला उसले भनेकी थिई- 'मलाई अब भुन्टी नभन्नुहोला है, लिखुरे दाइ !'

'ल, ल,' मैले भनेँ- 'कमरेड भुन्टी भनुँला !'

भोलिपल्ट बूढाले मेरो रुक्स्याक आफैँ खोलेर एउटा पोको हालिदिए । 'कफी हो, के आनाकानी गरेको ?' उनले हप्काए- 'आई होप, यु डन्ट फर्गेट अस ।'

'म फर्किन्छु लाहुरे काका, चिन्ता नगर्नोस् ।'

'कैले ?'

'पर्यटक ल्याउने गरी रुट बनाउने,' मैले भनेँ- 'र रिसोर्ट खडा गर्ने !''

'योजना आयोगमा छौ ?'

'तपाईं पत्याउनुहुन्न होला काका, म यस्तो योजना गर्दै छु जसमा यहींको उत्पादन र श्रमको बजार तयार हुन्छ,' मैले भनेँ- 'र यो गाउँलाई एउटा नयाँ रूप दिन प्रयत्न गर्नेछु ।'

उनले मलाई एउटा झोला दिए सानो रुक्स्याक । गऱ्हुङ्गो थियो । मैले जिज्ञासु आँखाले उनलाई हेरेँ । उनले भने- 'तिम्रो बारी कज्याए पनि तिमी बुझ्न सक्छौ म पूरै आम्दानी दिन सक्दिनँ । अलिकति कफी हालिदे'को ।'

मैले आफ्नो रुक्स्याकमा त्यो पुन्टे झोला कसेँ । उनी हेरिबसे ।

'यो पहाड चिन्न सक्नुपर्छ,' उनले भने ।

मैले उनलाई फेरि हेरेँ । उही टोप लगाएका थिए । हाफपाइन्ट उही, कमिज उही ।

उनी भन्दै थिए- 'यो लेक पनि होइन र बेसी पनि । अलि माथि काफल पाक्छ, तल कफी । काफललाई ठन्डी चाहिन्छ, कफीलाई धूप । माथि सुन्तला फल्छ, तल केरा । एकै छिन दौडे सुन्तला टिपेर तल केरा लुछ्न भ्याइन्छ । काफल टिपीवरी तल कफीबारी आइपुग्छौ । डु यु गेट माई प्वइन्ट ?'

'हजुर काका,' मैले भनेँ । उनी ठिङ्ग उभिरहे । मेरो गाउँजस्तै उनी उभिरहेका थिए जहाँको शान्ति र स्थायित्व ढलपल भइरहेको छ । म आफ्नो घर

र थुम्कालाई एक फेरो मारेर तल झरेँ। साग सुकाएका कान्लाहरू हरर्र बसाउने। मूला उखेलेर खाऊँ ? उतापट्टि कोदोबारी। अलि पर कान्लामा पनि साग सुकाइएको छ। त्यतापट्टिको साग भर्खर ओइलाउँदै होला।

मेरो गाउँले एउटा भविष्य कोरल्न खोजेको छ। यस गाउँले समुन्नत हुने हक राख्छ भने म केही योगदान गर्न सक्छु। म त्यही गर्नेछु जे गर्दा मलाई आत्मसन्तोष हुनेछ। आफूले तोरीको डाँठमा चित्र कोर्न सिकेको पहाडलाई मैले नयाँ जीवन दिनुपर्छ। मैले यही पहाडबाट रङ्ग सापटी लिएको छु, त्यसको ब्याज तिर्नुपर्छ। यही माटो, हावा, पानी र यही ग्रामीण ममता मैले संस्कृतिका रूपमा बटुलेको हुँ, त्यसको ऋण तिर्नुपर्छ। साग सुकिरहेका यी कान्लाहरूले मलाई रेखाको डिल सम्झाएका छन्, यी पहाडले मलाई रेखाको उचाइ सिकाएका छन्, यी खोल्साहरूले मलाई रेखाको छाया पढाएका छन्। यी डोका, नाम्ला, खुर्पेटा र छत्रीले मलाई आकृति बुझाएका छन्। यो उकालीका सुस्केरा र सुसेलीले मलाई जीवनको मर्म देखाएका छन्। म जन्मेको पहाडमाझको मेरो पखेरो कफीबारी भएको छ, अब मैले यसलाई आफूले जानेको कला दिनुपर्छ।



# १६

घुमाउरो ढिस्को काटेपछि उसले आफ्नो एक पुरुष सहकर्मीलाई मेरो शरीर छामछुम पार्न निर्देशन दिई । रुक्स्याकमा पनि उनीहरूलाई आपत्ति हुनुपर्ने केही छैन । उनीहरूको 'आधार इलाका' प्रवेशविन्दु आइपुगेको रहेछ । उसले आफ्नो बन्दुकको ब्यारेलमा बुकीफूल राखी । फूलबुट्टे पाखाबाट चट्ट कान चुँडेझैँ टिपेर उसले सिउरेको त्यस सेतो फूलले शान्तिको सङ्केत गर्थ्यो । उसका साथीहरूले पनि त्यसै गरे । पछाडिपट्टि हिँड्नेले फूल भेटेन । कागजलाई सानो डल्लो पारेर घुसार्‍यो । 'हामीले विस्तार इलाका पार गर्‍यौँ,' उसले भनी- 'तपाईं डराउनुपर्दैन ।'

म कहाँ डराएको छु र ? मेरो पछिपछि आएको गाइड बरु हच्किरहेको छ । उसले पाँच जना पर्यटक डोर्‍याएको छ । चिन्ता छैन भन्दै थियो, उसले आफ्नो अनुहारमा तनाव आउन दिएको छैन । किनभने उसका गेस्टहरू आत्तिनेछन् । खासमा ऊ गाइड पनि होइन रहेछ । ती पर्यटकलाई लिएर ऊ आफ्नो गाउँमा स्कुल भवन उद्घाटन गर्न आएको काठमाण्डूवासी वातावरणविद् रहेछ । अस्ट्रियालीहरूले साल्सबर्गमा जम्मा गरेको दश लाख रुपैयाँ सहयोगमा स्कुलको पाँचकोठे पक्की भवन बनेको देखाउन आउँदै गरेको गाइड अर्थात् वातावरणविद्ले मलाई पछ्याएको थियो ।

गाइडले अलि मास्तिर चौतारा पुगेपछि मलाई रोक्यो । 'तपाईं धेरै समयदेखि यता घुम्दै हुनुहुँदोरहेछ,' उसले भन्यो- 'हामीलाई केही समस्या त नआउला, है ?'

'ब्यारेलमा सेतो फूल राखेका छन्,' मैले भनेँ ।

'तैपनि क्रसफायरमा परिन्छ कि ?'

'क्रसफायरको खतरा उनीहरूको विस्तार क्षेत्रमा मात्र हो ।'

'त्यसो भए यता यिनीहरूको सम्पूर्ण पकड होला ?'

'हेरौँ न,' मैले भनेँ- 'चन्दा दिनुभयो ?'

'जनही दुई हजारका दरले,' उसले भन्यो- 'रसिद पनि खल्तीमा राखिरहेको छु ।'

उसका पर्यटकले मेरो अनुहार हेरे । एउटा अधबैंसेले कम्मरमा झुन्डिरहेको पानीको बोतल झिक्यो । अर्को एकले पनि पानी घुटघुट पाऱ्यो । अरू तीन जना पसिना पुछिरहेका थिए । 'हिम्मतिला रहेछन् तपाईंका गोराहरू,' मैले भनेँ- 'अगाडि हिँडिरहेकी जुन केटी छ नि ...,'

'ड्रेस लगाउने ?' उसले सोध्यो ।

'हो, त्यो खाकीधारी केटी मेरो गाउँकी एउटी बहिनी पर्नेकी साथी हो,' मैले भनेँ- 'तपाईंसँग कुरा गरी ?'

उसले मुन्टो हल्लाउन के भ्याएको थियो, ऊ सरर्र बगेको पहिरोझैँ तल हामीसामु उभिन आइपुगी । म हच्किएँ । किनभने उसले भिरेको बन्दुकको कुन्दाले मेरो गाला छोलाजस्तो गरेको थियो । फूल सिउरे'नि त्यो त बाहिरी रूप न हो ! भित्रबाट केही निस्किहाल्यो भने ? उसले गाइडसँग भनी- 'तपाईंका टुरिस्ट अमेरिकी जासुस त होइनन् ?'

'होइनन्,' उसले भन्यो ।

'पासपोर्ट माग्नुस्, सबैको,' उसले उर्दी जारी गरी ।

ती पर्यटक त्यस केटीको नेतृत्वमा रहेको समूहका बन्दुकधारीहरू देखेपछि अलि बढी आत्तिएजस्ता देखिएका थिए । तिनले खुरुखुरु पासपोर्ट दिए ।

'भिसा लगाउनुहुन्छ भन्ने सुनेको थिएँ,' उसले भन्यो ।

'स्टिच मार्दैनौँ,' उसले भनी- 'कति दिन बस्ने हो ?'

'एकै दिनको कार्यक्रम हो, पर्सिपल्ट फर्किन्छौँ,' उसले भन्यो ।

म अघि हिँड्न थालेँ । मैले पदयात्रा-मार्ग बनाउने भनेको यही दिशा हो । अलिकति परदेखि पश्चिम मोडिनुपर्छ । तर यता हामी धेरै उकालो आइसकेका छौँ । गाइडले आफ्ना पाहुनाहरूलाई के भन्यो कुन्नि, उनीहरू निकै जोडसाथ उकालो हिँड्न थालेका थिए । केहीबेर पर्खिए हुन्न ? कसलाई पर्खिने ? तल कोही पनि छैन । पर्खिने भनेको पसिना पुछ्ने र दुई-चार मिनेट आराम गर्ने ।

बर्दीधारीहरू अगाडि राँके जुलुसमा भाग लिएझैँ टाप कसिसकेका थिए । हामी पहिरोले अड्किएको ठुटोझैँ उभियौँ । 'म एक चित्रकार हुँ,' आफ्नो परिचय

दिँदै ती विदेशीहरूसँग भिज्ने कोसिस गरेँ । तिनले मलाई चिनेपछि आत्मविश्वास बढेजस्तो अनुहार गरे ।

उनीहरूको पैसाले ठडिएको नवनिर्मित स्कुल भवनको प्राङ्गणमा साँझ हामी गोलो बनेर कुर्चीमा बस्यौँ । साल्सबर्गको एउटा शिक्षकले भन्यो- 'हाम्रा थुप्रै स्कुले नानीहरूले टिफिन खर्च काटेर जम्मा गरेको पैसा यसमा परेको छ ।'

'ढुक्क हुनुहोस् महोदय,' स्कुल सञ्चालक समितिका जान्नेबुझ्ने अध्यक्षले सान्त्वना दिए जसलाई अङ्ग्रेजीमा उल्था गरेर गाइडले सुनायो- 'यहाँका नानीहरूले अब आफूजस्तै विदेशी बच्चाहरूले दिएको पैसाबाट बनेको यो सुकिलो घरमा आनन्दले पढ्नेछन् ।'

अध्यक्षले मछेउ आएर के भन्न खोजेका हुन् ? म आफ्नै धुनमा रेखाहरू सोचिरहेको थिएँ । मलाई होइन रहेछ, मैछेउ बसेको गाइडसँग उनी साउती मार्न आएका रहेछन्, भन्दै थिए- 'कसो गर्ने होला गाइड सर ?'

'के कुरा ?'

'यहाँ गाजसका मान्छे आएका छन्,' उनले भने- 'गाउँ जनसरकार भनेको बुझ्नुभयो होला नि ?'

गाइडले मलाई पुलुक्क हेऱ्यो ।

'बोलाउनुस् न,' उसले भन्यो ।

केहीबेरमा तीन जना तन्नेरी आए । उनीहरूले आफ्नो परिचय दिएर हात मिलाउँदै गाइडसँग भने- 'भोलि तपाईंको उद्घाटन कार्यक्रममा हामी एउटा सांस्कृतिक कार्यक्रम प्रस्तुत गर्न चाहन्छौँ ।'

गाइडले फेरि मलाई हेऱ्यो । के गर्ने ? उनीहरूकै नियन्त्रण छ भने एउटा प्रस्तुति गर्न दिएर के बिग्रेला ? उनीहरूको सहयोग लिन नसके भोलि स्कुल चल्न सक्नेछैन ।

गाइडले हुन्छ भनिदिएपछि उनीहरू पाखा लागे । हामीले खानासाना खायौँ । गोराहरूले 'डिजर्ट' मा गाईको दूधबाट पकाइएको खीर पनि खाए । 'डिनर' सकिएपछि अघिका तीन तन्नेरी फर्केर आए । अध्यक्षले फेरि गाइडलाई भेटाए । उनीहरूले भने- 'अघि हामीले एउटा प्रस्तुति भनेका थियौँ । अलि पुगेन, दुइटा गर्न दिनुहोला, है ?'

के भन्ने ? त्यो पनि हुन्छ भन्न लगाइयो । सांस्कृतिक कार्यक्रम न हो !

सुत्ने तर्खर गरिरहेका बेला गाइडलाई भेट्न फेरि तिनै तन्नेरीहरू आए । उनीहरूको भनाइ थियो- 'अघि हामीले दुइटा प्रस्तुति भनेका थियौँ । अलि पुगेन, तीनटा गर्न दिनुहोला, है ?'

मैले गाइडलाई हेरेँ । मैन्टोलको उज्यालामा ऊ उपायहीन देखिन्थ्यो । 'अध्यक्ष मान्नुहुन्छ भने मलाई केही आपत्ति छैन,' उसले भन्यो- 'हामी चाँडै सकेर फर्किऊँ कि भन्ने योजनामा छौँ ।'

भोलिपल्ट कार्यक्रम सुरु हुने बेलातिर छपक्कै उनीहरू आइपुगे । स्वागतगान पनि तिनैले गरे । त्यसपछि उनीहरूकै 'गाजस प्रमुख' ले भाषण पिटे । त्यसपछि फेरि उनीहरूको कबाज नृत्य भयो । 'जनवादी गीत' आउँदा फेरि सबै जना गाउँलेहरूले स्कुल प्राङ्गणमा ताली पिटीपिटी स्वागत गरे ।

'आर्मी आयो भने के हुन्छ ?' मैले एउटा तन्नेरीलाई सोधेँ ।

उसले प्राङ्गणको भुइँमा एउटा छेस्को खेलाउँदै मतिर मसिनो स्वरमा भन्यो- 'तपाईंहरूलाई हामीले पूरै सुरक्षा दिएका छौँ ।'

मैले नृत्यतिर आँखा लगाएँ । बन्दुक लिएरै उफ्रिने कबाज नृत्य सकिएपछि पनि अर्को प्रस्तुतिमा अर्का थरी 'कलाकार' हतियारसहितै प्रस्तुत भइरहेका थिए ।

'कस्तो सुरक्षा ?' मैले सोधेँ ।

'स्कुलवरिपरि एउटा सुरक्षाघेरा छ,' उसले भन्यो- 'अलि पर अर्को घेरा छ त्यस्तै । त्यसपछि यो गाउँबाहिर एउटा घेरा बसेको छ । त्यसपछि दुई-चार कोस टाढा अर्को घेरा छ ।'

'घेरैघेरा ?'

'हाम्रो यो आधार क्षेत्रमा गस्ती आयो भने धेरै टाढाबाट थाहा हुन्छ ।'

'हेलिकप्टर आयो भने ?'

'तपाईंलाई थाहा होला, आफ्नो आधार क्षेत्रमा हामी दुस्मनसँग लड्दैनौँ । आयो भने पाखा लागिदिन्छौँ,' उसले भन्यो- 'किनभने यहाँ तपाईंहरू पाहुना हुनुहुन्छ, तपाईंहरूको सुरक्षा गर्ने दायित्व हाम्रो हो ।'

'ए ।'

'विस्तार क्षेत्रतिर पऱ्यो भनेचाहिँ क्रसफायरमा कोही पर्न सक्छ,' उसले भन्यो ।

मञ्चतिर कोही स्थानीय नेता बोल्न थाले । उनले सुरुमा दायाँ हात जुरुक्क उचालेर माथि लगे । हात माथि स्थिर हुनुअगावै उनले त्यसलाई कसिलो मुठी पारे । पर्यटकहरू भने झोक्राएर बसेका थिए । तिनले अपुङ्गे फूलको माला लगाएका थिए । एउटाले डिजिटल क्यामरा चलाइरहेको थियो । तर हतियारधारीहरूको अनुहार नखिचीकन अलक्कसँग हतियार र गोडाको मात्र पोज मिलाइरहेको मैले देखेँ । कसैले शंका नगरोस् भनेर चलाखी अपनाएको होला !

बोल्ने नेताले पृथ्वीको उत्पत्तिलाई द्वन्द्वात्मक भौतिकवादसम्म जोड्न फराकिलो नदीमाथि तोरण टाँगेझैँ करिब एक घण्टा लगाए । त्यसपछि बल्ल उनले नेपालको इतिहास सुरु गरे । त्यो पनि पृथ्वीनारायण शाहको पालो आउन त्यस्तै दश-पन्ध्र मिनेट अरू लाग्यो । काठमाण्डू आक्रमण गरेको इन्द्रजात्राको दिन होइन ? उनले संसदीय विकृतिहरूको कुरा उप्काउन सुरु गर्दा के सम्झेर हो, झ्वाट्ट विषयान्तर गरेर चे गेवराको नाम लिए । ‘कम्पोसा’ को अगुवाइमा सारा दक्षिण एसिया रातो उपमहादेश हुने विलक्षणको घोषणा गरेर पुछारमा ‘दुई शब्द टुङ्ग्याउनुअघि’ नारा लगाउन सबैलाई अनुरोध गरे ।

सेलरोटी र चिया आउन थालेपछि म बाउँडिन लागेको खुट्टा तन्काउन उभिएँ । कुन छिमलमा हो, बिस्तारै आगन्तुकहरू हट्दै गएर स्कुल झन्डै रित्तो भयो । मैले गाइडलाई आफू बाटो लाग्ने बताएँ । उसले नियास्रो मानेजस्तो गऱ्यो । उसका पर्यटकहरूले पनि साथै बसे हुन्थ्योझैँ गरे । गाइडले अध्यक्षमार्फत ‘गाजस’ वालाहरूसँग हेलिकप्टर मगाउन सकिनेबारे सोधपुछ गऱ्यो । अग्रिम सूचना चाहिन्छ भन्ने तिनको सर्त थियो । एक जनासँग सेटेलाइट फोन भएको मैले अनुमान गरेँ । उनीहरू भोलि हेलिकप्टरमा काठमाण्डू फर्किन्छन्, म किन आजै आफ्नो बाटो नतताऊँ भनेर बिदावारी भएँ ।

म सदरमुकामतिर लाग्नेछु । एक्लै हिँड्दा छिटो हुन्छ । मनभरि बतास चल्छ । पङ्खा चलेको गतिमा म आफ्नो खुट्टा तीव्र पार्छु । एकनासको बाटो, सुनसान कतै उकालो, कतै ग्वारर्र ओरालो रातो माटो फुस्स उडाउँदै मैले साँझ पर्ने बेलातिर एक लर्को गाउँलेहरू भेटेँ । तिनीहरू विस्थापित रहेछन् । सदरमुकामतिर अडिएनन् भने मधेश झर्नेछन् ।

विस्थापितहरूलाई उछिनेर एउटा गाउँ पुग्दा आँगनमा एउटी महिला पछ्यौराले मुख छोपेर नाक मात्र देखाइरहेकी थिइन् । घरीघरी उनी आँखा

पुछ्थिन् । बोल्ने साथी कोही नभएपछि त्यस्तो हुन्छ । उनले टाढैबाट मलाई बोलाइन्, चिनेजस्तो गरेर । आँसु बरर्र पारिन् ।

'ऊ, ल हेर त त्यो जुत्तो,' उनले ढोकाछेउ पिँढीमा चिनियाँ कपडाको एउटा जुत्ता देखाइन् । मैले बुझिनँ । ट्वाँ परेर उनलाई हेरेँ । एउटा गाउँले किशोर आइपुगेको थियो । उसले अर्थ्याएअनुसार जङ्गल पस्न यो घरको एउटा पाखुरा देऊ भनेर सूचना दिइएको रहेछ त्यो । बिचरी महिलाले बिहान उठ्दा देखेकी रहिछन् । त्यसपछि न गाँस लिएकी छन् न पानी । आँसु झार्दै बरबराउँदै बसिरहेकी छन् ।

किशोरले बेलीबिस्तार लगायो । उनको एउटा छोरा प्रहरीमा रहेछ, अर्को एसएलसी तयारी गर्न सदरमुकाम गएको छ । त्यही छोरालाई जङ्गलबाट ताकेता आएकाले उनी बेचैन रहिछन् ।

मैले कागज निकालेर तिनको अनुहार स्केच गर्न थालेँ । उनी आफ्नो फोटो खिच्न लागेझैँ सतर्क भइन् । किशोरले मलाई हेरिरह्यो । घरी मलाई, घरी कागज । 'तिमी पराया भए पनि मेरो जेठो छोराको झल्को आयो,' उनले भनिन् ।

'छोरा नदिए म आफैँ जानुपर्छ,' उनी आफैँ बोलिन् । म उनको अनुहार उतारिरहेको थिएँ ।

'नभए एक लाख रुपैयाँ दिनुपर्छ,' उनको बोली टुङ्गिएको थिएन । 'सप्पै डिँगा बेचे पनि गोडा दशेकै हजार पाइएला,' उनी भन्दै थिइन्- 'त्यो पनि याँ कसले किन्छ ?'

मैले रेखा तानिरहेका बेला किशोरले उत्सुक आँखा झन्झन् च्यात्दै गएको म अनुमान गर्दै थिएँ । उसले भन्यो- 'यिनका बूढा इन्डिया गा'छन् । एक्लै भएर पनि निन्याउरिएकी हुन् ।'

'छिमेकीले के सुझाव दिएका छन् त नि उहाँलाई ?'

'बूढा आए'सि तिर्ने भाका गर भनेका छन्,' उसले भन्यो ।

'एक लाख ?'

'जति सक्छन् ।'

'मेरो बूढा कमाउन गा'को यिनैको भुँडी भर्न हो ?' उनी उता विस्फोट भइन् ।

'एउटा छोरा त जागिरे छँदै छ नि,' किशोरले भन्यो ।

'त्यो आउँछ कि आउन्न के था' ?' उनले सुनेकी रहिछन्, भनिन्- 'बिदा भए'नि गाम आउन सक्ने होइन । उतै बिहे गरेर बस्यो कि ? चौकीतिर भुटियो कि ?'

'राम्रो सोच्नुहोस् आमै,' मैले भनेँ ।

'आफैँ जाऊ न बूढीमाउ,' किशोरले अलि चर्को स्वरमा ती महिलालाई जिस्क्यायो ।

'कहाँ जाने म ?'

'होलटाइमर कार्यकर्ता हुन जाऊ अब,' उसले भन्यो- 'आमै कमरेड भनौँला हामी पनि !'

मलाई अलि निको लागेन किशोरले त्यसरी ती महिलालाई जिस्क्याएको । 'धत् लाटा,' मैले सानो स्वरमा उसले मात्र सुन्ने गरी भनेँ- 'त्यसरी किन नुन छर्केको ?'

'हा, यी अलि बढी नै रुन्चे छन् क्या,' उसले भन्यो- 'यिनलाई मात्र यस्तो बेथा पऱ्या हो र ?'

रेखाकृति तयार भएपछि उनलाई देखाएँ । उनले आफैँलाई नचिनेझैँ गरिन् । सुँक्कसुँक्क अलि कम भयो । आफ्नो आकृतिबाट उनले आँखा हटाएपछि म तल झरेँ । किशोर परसम्म मलाई पुऱ्याउन आयो । 'साँझ पर्नुअघि सदरमुकाम पुग्ने हो भने,' उसले भन्यो- 'अलि लम्कनुपर्ला तपाईं ।'

'हुन्छ भाइ, धन्यवाद,' मैले भनेँ ।

'खै मेरो त चित्र बनाउनुभएन क्यारे,' उसले ट्वाक्क हानिहाल्यो ।

'सदरमुकाम पुग्न भ्याउँदिनँ नि त ।'

'यतै बसे भैहाल्छ नि,' उसले भन्यो ।

'राति म सुतेको घरको ढोकामा कसैले एउटा जुत्ता राखिदियो भने ?' मैले भनेँ- 'मै जङ्गल पस्नुपर्ला ।'

'पाहुनालाई त के पर्ला र ?' उसले भन्यो- 'बरु तपाईंकै जुत्ता चोरिएला नि।'

'एउटा ?'

'किन हुन्थ्यो ?' उसले भन्यो- 'चोर्नेलाई एउटा जुत्ता के काम ?'

'घर-घरमा राति राखिदिन हुन्छ नि !' मैले भनेँ तर उसले सुन्न नसक्ने गरी म टाढा पुगिसकेको थिएँ ।



# १७

सदरमुकाम पुगेको साँझ म बसेको सानो लजकी साहुनी बिरालो रोएकामा चिन्ता गरिरहेकी थिइन् । बिरालो कान्छी छोरीजस्तै माथिल्लो कोठामा पसेर विलाप गरिरहेको थियो । तल साहुनी अलच्छिन लागेको सङ्केतले शिर उँधो गर्दै बाटातिर हेरिरहेकी थिइन् । मैले नमस्ते गरेको उनले सुनिनन्, सानो छोराले दुई हात जोरेर मलाई भित्र पसायो । बिरालो रोइरहेको कोठाछेउको ढोकाको साँचो दिएर ऊ तल झऱ्यो । 'छिट्टै भात खान झर्नोस् है,' उसले भऱ्याङबाट टाउको मात्र देखाउँदै भन्यो- 'कर्फ्यु लाग्छ ।'

सानो ओछ्यान थियो, सिरक पनि त्यति सफा लागेन । भित्ताभरि चलचित्रका नायक-नायिकाका पोस्टर थिए । साहुनीका छोरीहरू सुत्नेजस्तो लाग्यो । तर लजमा तिनीहरू देखिएनन् । बास्ना र रूप त्यस्तै थियो कोठाको । काठको पूर्वी झ्याल खोलें, बजारमा साँझ ढल्केको थियो । मान्छेको आवतजावत पातलिँदै थियो । एउटा बडहरको रूख उभिएको थियो लजलाई साँध दिँदै । अमिताभ बच्चन, मनीषा कोइराला, राजेश हमाल र ब्रुस लीका पोस्टरछेवै अरू अनगिन्ती हिरो-हिरोइनका पोस्टकार्ड थिए । नेपाली र हिन्दी चलचित्रका क्यासेटका खोलहरू झ्यालभरि थिए । बिरालाको आवाज आइरहेको थियो ।

'डाँडापारि मान्छे थुप्रेका छन् रे,' साहुनीले आलु र तामाको तरकारी थपिदिँदै भनिन्- 'कैले हान्ने हो !'

उनको छोरो अर्को टेबलमा बसेर सप्पासप खाइरहेको थियो । लजमा म एक्लो पाहुना थिएँ । मेरो टेबलसम्मुख भित्तामा चाउचाउ, मःमः, चिकन फ्राई, चाउमिन, आलु-चिउरा, हाँसको छोइला, खसीको सुकुटी, रम, भोड्का, जिन, बियर, खुकुरी फिल्टर किङ आदिको मूल्यसूची टाँसिएको थियो । बाहिर बुटहरूको

आवाज थियो– टक, टक, टक । आखिरी गस्तीको सङ्केत गर्दै । पूर्व-पश्चिम कताबाट त्यो आवाज बढिरहेको हो, मैले थाहा पाइनँ । खाना सकेँ र खम्बामा झुन्ड्याइएको रुमालले हात पुछेँ । रुमालछेउको सानो ऐना हेरेँ र सुपारी टोकेँ । साहुनीको छोरो त्यही टेबलमा स्कुलको होमवर्क गरिरहेको थियो ।

'आज यी बुटहरूको पनि लक्षण राम्रो छैन,' साहुनीले भनिन् ।

'तपाईं किन आत्तिनुभएको ?' मैले सोधेँ ।

'क्यै दिनदेखिन् नौला मान्छेहरूको हिँडडुल बढेको छ,' उनले भनिन् ।

'हा, केही हुँदैन,' भनेँ र म तला उक्लिएँ । उनले ढोकाको चुकुल र गजबार लगाइन् । माथि कोठामा उक्लिँदा एउटा बिरालो लुसुक्क कतै हरायो । त्यो तर्केपछि म कोठामा पसेँ । मनीषा कोइराला मुसुक्क हाँसी । 'ब्रिजेज अफ म्याडिसन काउन्टी' निकालेँ र आनन्दले सिरानी दोब्बर पारेर पाना पल्टाउन थालेँ। फिल्म हेर्नुभन्दा पहिला किताब पढेको भए यो उपन्यासको स्वाद बेग्लै हुने रहेछ । रबर्टका रूपमा खालि क्लिन्ट इस्टउडकै अनुहार आउँछ । उसैले बोलेजस्तो लाग्छ । प्रेममा मान्छे नयाँ हुन्छ । हरेक नयाँ प्रेममा ऊ बेग्लै हुन्छ । नभए यो बूढो अभिनेताले आफ्नो प्रेमको उद्गार कसरी यस्तो सक्कली रूपमा दिन सक्थ्यो होला ! तर उसको प्रेम परिपक्व छ । मैले फिल्म नहेरेको भए उसको अनुहारको अर्कै कल्पना गर्न सक्थेँ । धेरै जिज्ञासा हुन्थ्यो । सीमा कोरिदिएको छ र लाग्छ, रबर्ट भनेको क्लिन्ट इस्टउड नै हो । अनि उसैका लागि यो उपन्यास लेखिएको हो।

बत्ती झ्याप्प गयो । हिरो-हिरोइन पनि निदाए । झ्याल खोलेँ, बजार पूरै चकमन्न भयो । तल नदी कराएको सुनियो । अँध्याराले आँखाभरिको आकाश छोपेको थियो । फेरि झ्याप्प बत्ती आयो । बिनसित्तिमा आउने, जाने किन ? म फेरि त्यो उपन्यास पल्टाउन थालेँ । रबर्टले फ्रान्सेस्कालाई कस्तरी गफमा भुलाइरहेको छ ! ऊ मोरी पनि हुर्केका छोराछोरी र अधबैंसे लोग्ने हुँदाहुँदै पराईसँग सल्किरहेकी छ । ऊ यो उमेरमा पनि प्रेमको टुसा पलाएझैँ आफूलाई निर्मल पाइरहेकी छ । यस्तो लाग्छ, एकरसको ग्रामीण अमेरिकी जिन्दगीमा रबर्टलाई भेटेर उसले क्रमशः उज्यालो पाइरहेकी छ । प्रेमकथाको पनि आफ्नै आकर्षण र तनाव हुन्छ । ऊ लोग्नेलाई माया गर्छे, छोराछोरीको ख्याल गर्छे तर परपुरुष र उसको अज्ञात आमन्त्रणमा लिप्त हुन लागेकी छ । के ऊ आफ्नो घर छाडेर पोइल जाली त ? फेरि झ्याप्प बिजुली जान्छ । फेरि झ्याल खोल्छु, कोठामा मैनबत्ती पनि छैन । ओथारो बसेकी पोथीझैँ बजारभरि घरका चिसा आकार निहुरिएका छन् ।

'आज लक्षण पटक्कै राम्रो छैन,' साहुनी टाढा कुनै कोठाको ढोका खोल्दै फतफत गरेको सुन्छु ।

'टेलिफोन पनि काटियो,' छिमेकी घरको बार्दलीबाट कोही बोल्छ ।

सलाई कोर्छु, कोठा एक निमेषलाई झर्रर बल्छ । हिरोहरू पूर्ववत् पोज दिइरहेका छन्, वातावरणमा विश्वास जगाउन । उता साहुनी मकैको ढिँडो पाक्न लागेझैँ फतफताइरहेकी छन् । सलाईको काँटी झ्यालबाहिर हुर्‍याउँछु । एकै झिल्काले खरघारी सल्केझैँ डढेलो लागेको देख्छु, सामसुम निभ्छ उत्तिन्खेरै । टिनको छानामा असिना बर्सेझैँ आवाज बरर्र खस्छ, जतातातै ।

आक्रमण सुरु भएछ ।

नदीपारि पनि त्यस्तै डढेलो देखिन्छ, उत्तिन्खेरै निभ्छ, त्यता पनि आवाज त्यस्तै चर्केको होला, नदीको गडगडाहटमा मिसिन्छ । हत्तपत्त झ्याल बन्द गर्छु। झ्वारर्र ... दालमा तातो घिउ हालेझैँ आवाज आउँछ । तत्काल बिलाउँछ । गड्याङगुडुङ चल्छ, मेघ गर्जेझैँ । अनि भुइँचालो आएझैँ घर थर्किन्छ । अघि नै बिलाएको बिरालो एक्कासि रुन थाल्छ, र रुँदै यताउता चहारेको सुनिन्छ । साहुनी हडबडाउँदै आफलविफल हुँदै कराउँछिन् । उनको छोरो 'आमा हो' भन्दै चिच्च्याउँछ अर्को कोठामा । खाट बेस्सरी हल्लिन्छ । च्याप्प समातेर म थाम्न खोज्छु । झ्यालको कापबाट एक चिर्पटो उज्यालो पस्छ र त्यस्तै आवाज आउँछ । खाट झन्झन् हल्लिन्छ ।

माइकिङ सुरु हुन्छ, हतियार बिसाउन आह्वान गर्दै । तर गड्याङगुडुङ रोकिँदैन । 'हामीले सदरमुकाम कब्जा गरेका छौँ,' माइक सुनिन्छ- 'तुरुन्त हतियार बुझाओ र आत्मसमर्पण गर ।'

एक छिन सन्नाटा व्याप्त हुन्छ । बाहिरको बिरालो रुँदै हिँडेको सुन्छु । साहुनी र छोरो, दुवै क्वाँक्वाँ गर्न थाल्छन्- 'बाबा हो, बाबा हो !'

फेरि गोला-बारुद सुरु हुन्छ । पहिरो खसेजस्तो लाग्छ । पछाडि कतै घरहरू गर्ल्यामगुर्लुम भत्केजस्तो हुन्छ । घरघरै मानिसको चीत्कार ह्वात्तै बढ्छ । उस्तै उज्यालो, उस्तै आवाज अनि एक सेकेन्ड उस्तै सन्नाटा । फेरि चिच्च्याहट, फेरि माइकिङ, फेरि गोला-बारुद । पछाडि कतै अर्को पहिरो गएजस्तो लाग्छ, गर्ल्याम्म गर्छ । ढुङ्गैढुङ्गा पहिरिएजस्तो । खाट उत्तिकै हल्लिरहेको छ र म थाम्न ढल्किरहेको छु । 'बाबा हो, बाबा हो !' चीत्कार बढिरहेको छ । शरीरभरि पसिना सलल्ल बग्छ । घरी दुवै कान थुन्छु, घरी दुवै हातले खाट अँठ्याउँछु ।

'यो अन्तिम चेतावनी हो,' माइकिङ सुनिन्छ- 'अब पनि हतियार बिसाएनौ भने हामी सबै ध्वस्त पार्छौं । यो अन्तिम चेतावनी हो ।'

हल्लीखल्ली, रैलाबैला कति बढ्छ भने केही पनि बुझिँदैन । पल्लो घरबाट रुवाबासी चर्किन्छ । मान्छेका पाइला बढ्छन्, तल छप्पनी ढुङ्गामा । ग्वारर्रर दौडेको सुनिन्छ । फेरि सर्लक्क अडिन्छ । फेरि ग्वारर्रर आउँछ । आकाशै पड्केजस्तो हुन्छ । पहिरो चलिरहेको छ । 'आत्था, आम्मा हो' सुन्छु । म खाट समातिरहेको छु ।

ए 'हान, हान' अनि यता बिरालो रोइरहेको सुन्छु । कतै भर्खर बच्चा जन्मेजस्तो आवाज, कतै सुत्केरी बेथाले छटपटाइरहेकी महिलाको जस्तो आवाज, कतै शङ्ख फुकेजस्तो आवाज, कतै 'राम नाम सत्य हो' जस्तो आवाज, कतै बेहुली रोइरहेजस्तो आवाज, कतै गुलेली लागेको चराको आवाज । मथिङ्गलभरि भुनभुन-भुनभुन अरिङ्गाल झुम्मिएजस्तो हुन्छ ।

कतिखेर हो, बजारभरिको भुनभुन रोकिन्छ । विश्वास लाग्दैन, कतै केही पड्केको छैन, कतै आगाको झिल्काजस्तो उज्यालो चर्किएको छैन, रुवाबासी र चीत्कार छैन, खाट पनि हल्लिरहेको छैन ।

भाले बासेको छैन तर उज्यालो भइसकेको रहेछ । म झ्याल उघार्छु, कतै पनि झ्यालढोका खुलेका छैनन् । भयानक शान्ति हुन्छ, भयानक सन्नाटा हुन्छ । धूवाँ भने फैलिरहेको छ । हावामा भिन्दै गन्ध छ । आँखा पोल्लाजस्तो हुन्छ । उज्यालो भइसकेको छ, भयानक खराब सपनाबाट बिउँझेजस्तो लाग्छ । म अझै खाट समाउन खोज्दै छु । झ्यालबाट एकोहोरिएको मधुरो उज्यालामा हिरो-हिरोइनहरू प्रकाशित हुन्छन् । उस्तै मुस्कान, उस्तै पोज, उस्तै गम्भीरता, उस्तै विश्वास जगाउने मुद्रा । ब्रुस लीले तुरुन्तै भिड्ने खाले मसल बटारिरहेको छ, मनीषा उसरी नै मस्किरहेकी छ । गोलीका खोकाहरू उछिट्टिएका रहेछन् । खुट्टासम्म हेर्छु, राति फुकाल्न पनि नभ्याएको पाइन्टमा प्वाल परेको रहेछ, तिघ्रामुन्तिर, कुर्कुच्चाभन्दा मास्तिर । पाइन्ट मात्र छिचोलेर बत्तिएछ गोली । त्यो गोली खल्तीमा हाल्छु । र ढोका खोल्छु । साहुनीलाई बोलाउँछु, जवाफ आउँदैन । उनको कोठातिर लम्किन्छु, बिरालो भलभली रगत बगाएर चिरनिद्रामा पल्टिसकेको रहेछ । साहुनीको कोठाबाहिर उभिन्छु, कामज्वरो आएर कोही बरबराइरहेको सुन्छु ।

हेलिकप्टरको चर्को आवाजले बजारको आकाश फन्को मार्छ । नदीपारि अर्को एउटा कप्टर रोकिइसकेको रहेछ । बरन्डाबाट दक्षिण हेर्छु, थानामा नयाँ प्रहरीहरू

झुम्मिसकेका थिए । केहीले उस्तै पहिरनका शरीर ओसारिरहेका थिए । भत्केका भवनहरू खोतल्दै केही खोजी भइरहेको थियो । साहुनीले ढोका खोलिन्, उनी काँपिरहेकी थिइन् । उनीसँगै टाँस्सिएर उनको छोरो बरबराउँदै बाहिर आयो । उसको पाइन्टभरि पिसाबको डाम थियो । ढोका खोलेर म बाहिर निस्कें, सडकमा सुरक्षाकर्मी छ्यापछ्यापी थिए । बैङ्क भवन ह्वाङ्गै थियो । जेल पनि फुटेको रहेछ । सरकारी कार्यालयहरू कुनै साबुत थिएनन् । साइनबोर्ड झुन्डिएका सबै भवन हानिएको रहेछ । एउटा-दुइटा ढोका खुल्न थाले, पसल र निजी निवासका । एउटा खुलेको आवाजले अरू पनि खुल्न थालेका थिए । बजारवासीका अनुहार निदाउरा-निन्याउरा थिए । आँखा च्यात्दै तिनले अरूलाई हेर्न थाले । गोली, खोका र बम यत्रतत्र देखिए ।

कसैले मलाई 'अलक्क हिँड' भन्यो । मैले ऊतिर फर्केर हेर्न पनि सकिनँ ।

'सकियो, सकियो,' कसैले बोलेको सुनें ।

'म त रातभरि खाटमुनि लुकिरहें,' एक भद्र बैङ्कका म्यानेजरसँग भनिरहेका थिए । म्यानेजर भने थाप्लामा हात राखेर झोक्राइरहेका थिए । बैङ्क पूरै लुटिएको थियो । 'कानमा गन ताकेर साँचो माग्यो,' म्यानेजर भन्दै थिए- 'त्यस्तो बेला म के गर्न सक्थें ?'

'यो काठमाण्डूको समस्या हो,' ती सज्जनले म्यानेजरलाई फकाउन खोजे- 'तपाईं हामी काठमाण्डूले सुल्झाउन नसकेको समस्या सामना गरिरहेका छौं ।'

जेलर हस्याङफस्याङ गर्दै प्रमुख जिल्ला अधिकारीतिर दौडिरहेका थिए । 'तीन जना कैदी फर्केर आए, दुई जना जानै मानेनन्,' दौडिँदा-दौडिँदै उनी फतफताउँदै थिए- 'बाँकी सबै लगे तिनीहरूले ।'

कोही झ्याल, कोही ढोका, कोही बार्दली, कोही आँगन र कोही बाटामा निस्केर टोलाइरहेका थिए । जति बोलाए पनि बोल्न नमान्ने ढुङ्गाको मूर्ति भएको मन्दिर थियो छेउमा । यो बिहान कोही पनि मन्दिर आइरहेको थिएन । भक्तहरू थिएनन् कतै । घण्टीहरू पनि बजेनन् । अगरबत्तीको धूप जलेन । वातावरणमा बारुदको नमीठो गन्ध थियो । मैले भगवान्को अनुहार हेरें, कलाकारको सीप मान्नुपर्छ । कस्तो शालीन, कस्तो भद्र, कस्तो गहनता, कस्तो रहस्यमय मुद्रा ! भगवान्ले मलाई रोके, हेरिरहे । म निस्किसकेपछि पनि उनी म उभिएको ढोका हेरिरहेका होलान् । म पनि कलाकार हुँ । मेरा कृतिले पनि देशको यो चाल चुपचाप हेरिरहेका होलान् ।

'सबै सिद्धियो,' एउटी महिलाको सुस्केरा सुनें । एउटा हेलिकप्टर उड्यो, अर्को आएर अलक्क त्यही झोलुङ्गे पुलपारि चौरमा बस्यो । हेलिकप्टरहरू उड्न थालेपछि चराहरू देखिएनन् । मान्छेहरू झुरुप्प बस्न थालेका थिए एक-अर्काका कथा सुन्दै । म आफ्नो लज फर्कें, बडहरको रूखका हाँगा तछारिएछन्, त्यसका ठूल्ठूला पात पनि खसालिएछन् । छेउको दुबो हेरें, पूरै मडारिएछ, फूलको बगैंचा पनि । अलि पर केही प्रहरी धसारिएको पोसाकमा दाउराको भारीझैं भित्तामा अडेसिँदै विश्राम गरिरहेका थिए । उनीहरूको छेवैबाट एक लस्कर लास ओसारिएको थियो । तिनीहरू टाँसिएको पर्खाल पनि क्षत-विक्षत थियो । एउटाले गोडा पसार्न खोज्दा एउटा खोका भेट्यो । चिसो पस्यो उसको मनमा तर ऊ ठाउँ सर्न झिजो मानेझैं त्यसै त्यहीं लपेटियो । उसका साथमा बायाँपट्टि उसका दुई सहकर्मी इन्तु न चिन्तु लडिरहेका थिए, भुइँमा मुन्टो जोतेर । रातभरि धोकेर नालामा पछारिएको जँड्याहाझैं ।

हेलिकप्टरबाट ओर्लिएका एक हूल पत्रकारहरू भुरुर्र बजारतिर दौडिए । क्यामराका लेन्स तेर्सिन थाले । टेप रेकर्डर अगाडि तन्काउँदै आएको एउटा रिपोर्टरले च्याप्प मेरो पाखुरो समात्यो । एउटा फोटोग्राफरले मेरो प्वाल परेको पाइन्टमा फोकस गऱ्यो । मैले हातमा गोली राखें, त्यो पनि एक-दुई स्न्याप खिचियो ।

'कति जना मारिए ?' रिपोर्टरले सोध्यो ।

'सीडीओलाई सोध्नुस्,' मैले भनें ।

'तपाईं रातिको आक्रमणका बारेमा के भन्नुहुन्छ ?'

'एउटा खराब सपनाजस्तो ।'

'अलि विस्तार गर्न सक्नुहुन्छ कि ?'

'प्रहरीहरू बढी भन्न सक्लान् ।'

'यो गोली लागेर पनि तपाईं कसरी बच्नुभयो ?'

'गोली मलाई लागेन,' मैले भनें- 'पाइन्ट छेडिएको पनि पत्तो पाइनँ ।'

'के तपाईं निद्रामा हुनुहुन्थ्यो ?' उसले सोध्यो । अरू तीन-चार जना पत्रकारले मलाई सर्लप्प घेरे ।

'ए, ल ऊ प्रहरी !' तिनीहरू एक्कासि दौडिए, मेरो वाक्य फुट्नुअघि । म उभिएँ । पर्खालमा अडेसिएको एउटा प्रहरी बोल्न मुख बाइरहेको थियो । उसलाई

पनि वाक्य झर्न दिनुअघि उनीहरू 'ए, ल ऊ इन्स्पेक्टर' भन्दै अन्त दौडिए । मैले उभिएर हेरेँ, तिनको चटारो । एउटा खुट्टा कुँजो पार्दै सकी-नसकी ठडिरहेको इन्स्पेक्टरले पनि बोली झार्न पाएन । उनीहरू 'ए, ल ऊ सीडीओ सा'प' भन्दै त्यहाँबाट पनि दौडिए ।

साहुनीले भनिन्- 'तपाईंको हिसाब नगर्ने !'

'किन ?' मैले सोधेँ ।

'तपाईं आज पनि बस्नुस्,' उनले भनिन्- 'बरु हामी पैसा लिँदैनौँ ।'

'होइन, मलाई जानु छ,' मैले भनेँ ।

मलाई सुनेर साहुनीको छोरो रुन थाल्यो । ऊ मेरो त्यही प्वाल परेको साइडतिर पाइन्ट समातिरहेको थियो ।

'फेरि आक्रमण होला,' उनले भनिन्- 'हेलिकप्टर आउँछन्, जान्छन्, तपाईं बसे हाम्लाई सास फेर्ने साथ हुन्छ ।'

उनको छोरालाई हेरेँ । ऊ मेरो मुख हेर्दै रोइरहेको थियो ।



# १८

मलाई औधी दु:ख लाग्यो, मीतबाले पनि बास दिनुभएन । उहाँले 'बस' नभनेपछि मैले अब बाटो तताउनुपर्छ । मितिनी आमा पनि भान्छाबाट निस्कनुभएन । बहिनी र भाइ त घरमै थिएनन् । उहाँले केही पनि भन्नुभएन । मैले उहाँलाई हेरिरहें । मीत मारिएको महिनादिन भएको रहेछ । उहाँ पहिला त मलाई देखेर आँखा रुभ्फाउन थाल्नुभयो, मितिनी आमा भित्रको भित्रै सुँक्कसुँक्क गरिरहनुभयो । आफ्नो घरपछिको कुनै बेलाको मेरो प्रिय आँगन आज पराई लाग्न थाल्यो । म मीतसँग लडेको, भालेजुधाइ गरेको, टालाको बल खेलेको, गुच्चा हानेको, मीतबाले मालुवा केरा दिएको, मितिनी आमाले दही-चिउरा मुछिदिएको त्यही पिँढी हो, त्यही आँगन हो । तर अहो, आज म व्यर्थै पाइला टेकिरहेको छु !

'तिम्लाई देखे'सि छोराको झल्को आउँछ,' मीतबाले अन्तै हेरीकन रुन्चे स्वरमा भन्नुभयो । त्यसको सन्देश 'जाऊ, नबस' भन्ने हो । उहाँको ढाड हेरें, उही फाटेको भोटो लगाउनुभएको थियो । कछाड च्यातेर टालेको त्यही खैरो भोटो । मलाई उदेक लाग्यो । टोपीबाट अझै उसै गरी कपाल निस्केको थियो । तर त्यहाँ कपाल कालो थिएन, झुसिइसकेछ । कुर्कुच्चा हेरें, परपरी फुटेको थियो, पानी नपरेर बाँझो खेत चिरिएजस्तो । उहाँले मतिर ढाड फर्काएर तल कोदोबारीतिर एकटक लगाइरहनुभयो । उहाँको अनुहारसम्म ठम्याउन पाइनँ । झन् माया लाग्यो, उहाँ अझै त्यही जाँघे लगाइरहनुभएको रहेछ । उफ्, उहाँले मलाई हेर्ने आत्मबल पनि जुटाउन सक्नुभएन !

'मीतबा !' मैले फेरि बोलाएँ- 'म छु नि तपाईंको छोरा ।'

'आखिर तिमी पनि अर्कैको छोरा हौ,' भित्रबाट मितिनी आमाले च्वास्स भन्नुभयो । मलाई छातीमा सियो रोपेजस्तो भयो । त्यसरी उहाँले मलाई परको ठान्नु, ल बा म खप्न सक्दिनँ । उहाँले त्यसरी मलाई कहिल्यै नुनचुक छर्किनुभएको

थिएन । आफ्नो छोरालाई भन्दा साख्खै गर्नुहुन्थ्यो । मैले कहिल्यै यस घरमा अर्काको छोराको अनुभव गर्नुपरेको थिएन । उहाँ रेसमलाई भन्दा बढी माया मैलाई गर्नुहुन्थ्यो । बाहुनको छोरालाई गुलियो मन पर्छ भनेर दूधमा पनि सखर घोलिदिनुहुन्थ्यो । 'आज मीत छोरो आउँछ' भनेर उहाँ अनुहार उज्यालो पार्नुहुन्थ्यो । बरु मीतबा टाढैबाट देख्नासाथ मलाई जिस्क्याउनुहुन्थ्यो, 'ल आयो बाहुनचरी मगरको गुँडमा !'

'रेसम, तँ मेरो घर जा,' म भन्थेँ- 'तेरो घरमा म बस्छु ।'

ऊ मलाई एक लात्तो हान्थ्यो, कहिलेकाहीँ त बेठाउँमा पर्दा म भाउन्निएर खप्न नसकी रुन्थेँ अनि मितिनी आमा उसलाई कुएँलिदिनुहुन्थ्यो । ऊ रोएपछि बल्ल म रोकिन्थेँ । अनि म 'खुच्चिङ, खुच्चिङ' गर्थें । ऊ रुँदै मलाई झन् बेस्सरी हान्न खोज्थ्यो । म भाग्थेँ । एकपल्ट त्यस्तै के भयो, मलाई लखेट्न उसले गरो हामफाल्दा घुँडा नराम्ररी तछारेको थियो । मीतबाले पीर गर्नुभएको थियो, मेरो छोरो पछि लाहुरे हुन सक्दैन कि भनेर । म काठमाण्डू गएपछि ऊ प्रहरीमा भर्ना भयो । उसले मलाई बिर्स्यो तर मीतबाले खबर पठाउनुभएको थियो- 'तिम्रो मीत पुलिस भो ।'

'ए काठा !' रेसम मलाई हप्काउनुपर्दा भन्थ्यो । म रिसाउँथेँ, मलाई हेप्यो भनेर । म मितिनी आमासँग गुनासो गर्थें । उहाँ उसको गाला रन्काइदिनुहुन्थ्यो । 'ओइ, लिखुर बाहुन !' ऊ फेरि आफ्नी आमाको पिटाइको जवाफमा मलाई बोलीले पिट्न खोज्थ्यो । मैले पोल लगाइदिने भएकाले आमाको चड्कन खानुपर्छ भन्ने उसको सदाको पिरलो थियो । म उसको तिघ्रामा हान्न त खोज्थेँ तर ढुङ्गामा टाउको ठोक्न खोजेजस्तो हुन्थ्यो । उसका तिघ्रा र पाखुरा बटारिएका थिए, बलियो लहराजस्तो । म केही गरी पनि उसलाई जित्न सक्थिनँ । एकपल्ट म बोलचाल बन्द गरेर उसको घरै जान छाडेको थिएँ । भोटोमा छाताको बिँड अड्याएर खुत्रुकखुत्रुक मीतबा हाम्रो घरमा ओर्लिनुभयो र मलाई सोध्नुभयो, किन नआएको भनेर । माइत बसेकी श्रीमती फकाउन आएको लोग्नेजस्तो ।

'केरा पाकेको छ, दही पनि मज्जाले जमेको छ,' उहाँ भन्नुहुन्थ्यो- 'मितिनी आमा सुर्ता गरिराखेकी छ, खै मीतछोरो आएन भनेर ।'

'जान्नँ के !' म ठुस्किन्थेँ । आफ्नै घर फर्किन मन नलागेजस्तो वा स्कुल नजान ढिट गरेजस्तो वा गाई चराउन जान्नँ भनेजस्तो । मामाघर बसेको छोरो

लिन आएका बाबुजस्तै उहाँ मलाई करकर गर्नुहुन्थ्यो । उहाँ कति अड्डी कस्नुहुन्थ्यो भने म उहाँको टोपी छिचोल्ने कपाल समातेर रिँगाउन थाल्थेँ । जवाफमा उहाँ मलाई तिघ्रामा चिमोट्नुहुन्थ्यो र म रुन खोजेँ भने 'ऐया, ए बारुलाले चिलेछ' भनेर उम्किन खोज्नुहुन्थ्यो ।

'जाँदै जान्नँ के !' म भन्थेँ अनि उहाँ फन्केर हिँड्नुहुन्थ्यो । रिसाएपछि झनक्कै पर्ने उहाँको स्वभाव थियो । उहाँ घर पुग्नुअघि म अर्कै बाटो दौडेर उहाँको पिँढीमा पुगिसक्थेँ र सोध्थेँ- 'काँ' पुगेर आउनुभा', मीतबा ?'

उहाँ चकित पर्नुहुन्थ्यो र आफ्नो आश्चर्य छिपाउँदै भन्नुहुन्थ्यो- 'बजार ग'र आ'को ।'

'खोइ त क्यै' ल्याउनुभएन ?' म उहाँको खाली हात हेर्दै भन्थेँ ।

'ल्या'को छु,' उहाँ भन्नुहुन्थ्यो ।

'के ?'

'चड्कन,' भन्दै मतिर हात बढाउन थाल्नुहुन्थ्यो ।

'कति पर्दोरै'छ ?' म पनि जिस्किन छाड्थिनँ ।

'खै एकपल्ट यता आऊ त,' उहाँ कम हुनुहुन्थेन- 'एक चड्कनको दुई रुप्पे !'

अलि हुर्केपछि भने हामी मीत 'तँ-तँ' बाट 'तिमी-तिमी' मा सरेका थियौँ । मीतहरू झगडा गर्नु हुन्न, मिल्नुपर्छ भनेर सिकाएपछि हामीबीच अर्कै सम्बन्ध बसेको थियो ।

'मीत बा !' मैले फेरि बोलाएँ । उहाँले उत्तिकै मुन्टो फर्काइरहनुभयो । मितिनी आमा मलाई एकपल्ट घोचेर भित्रको भित्रै बस्नुभयो ।

म झरेँ स्वाट्ट, मीतकाकाको घरतिर । ढोका बन्द रहेछ । बोलाउँदा केही जवाफ आएन । पिँढी फोहोर भइसकेको थियो, भत्किन लागेको रहेछ । लिपपोत धेरैअघिदेखि हुन छाडेजस्तो । बसाइँ गएजस्तो लाग्यो । करेसामा सिस्नोघारी हुर्किसकेको थियो । निकै तल चियापसलमा ओर्लिएँ ।

पसलेले हिचकिचाई-हिचकिचाई मलाई बस्न काठको मुढो दिए । अगेनाछेउ रुक्स्याक राखेँ । पसले त हरिलाल दमाईं पो रहेछन् । मेरो मीतको भोटो र जाँघे सिउने । यिनी बिहेमा बाजा पनि बजाउँथे । जन्तीको अघिअघि नरसिंह फुक्दा यिनको घाँटीको नसा फुलेको हामी तन्कीतन्की हेर्थ्यौं । जन्ती एक छिमल अघि

बढेपछि बाजाको नाइके टोपलेर बाटो रोक्दै यिनले फुकेको नरसिंहले टाढासम्मको नेटो थर्काउँथ्यो । बाजा फुक्नुअघि उनी तनक्क तन्केर एउटा खुट्टा अलि अघि सार्दै केही ढल्केका हुन्थे । लामो गलबन्दी, पछाडिपट्टि पोको परेको सुरुवाल र ढाकाटोपीमा सजिने हरिलाल जन्तीमध्येका लायक देखिन्थे । गाउँको सिरान आफ्नो पिँढीमा यिनले मेसिन चलाएको हेर्न पनि हामी जान्थ्यौँ ।

'तपैँ'को मीतबाको पनि बिजोग भो,' उनले भने ।

मैले केही प्रतिक्रिया जनाइनँ ।

'जेठो छोरो मरिगो,' उनले भने- 'उसका भाइबैनी जङ्गल पसेको, क्यै' खोजखबर छैन । दैनिक अनेक थरी रङ्ग-बिरङ्गको खबर आइर'न्छ, बूढा आँगनको आँगन बसिर'न्छन्, बूढीमाउ घरभित्रको भित्रै ।'

'खाना पकाइदिनुहुन्छ होला नि ?' मैले सोधेँ ।

'सुत्ने खाट छैन,' उनले भने- 'अगेनाछेउ बिस्तराले चल्ला ?'

'त्यही काफी हुन्छ,' मैले भनेँ- 'मेरो स्लिपिङ ब्याग छ ।'

'म पनि मधेश झरूँ भनेको, पुर्पुरोमा रै'नछ,' उनले आगो झोस्दै भने- 'गाउँ रित्तो भैसक्यो, माथि हेरूँ तिनै बूढाबूढी छन् । कैले रो'को रोयै गर्छन्, कैले खुस्केजस्तो चाहिँदो-नचाहिँदो गरेर बस्छन्, बरबराइर'न्छन्, कैले बोल्दैबोल्दैनन्, कैले कति बोलिर'न्छन् क्यै' सुर पाइँदैन ।'

म चुप लागिरहेँ ।

'तपैँ' केरा खानुहुन्छ कि ? मालुवा हो,' उनले भने । म झस्केँ र मुन्टो हल्लाएँ ।

'दही ?' उनले सोधे ।

मैले फेरि नाइँ गरेँ ।

'मीतघरमा त दही-केरा खुबै खानुहुन्थ्यो सानामा,' उनले भने- 'तपैँ' सम्झिनुहुन्छ, हामी जिस्क्याउँथ्यौँ नि ?'

म अनुहार सम्झिन्नँ तर केही छिमेकीहरू मलाई 'मीतकहाँ दही-केरा खान आ'को' भनेर उल्याउँथे । त्यस उमेरमा मलाई खास केही लाग्थेन । 'हो' भन्थेँ म ।

म केही बोलिनँ । आगो बलेको हेर्दै घोत्लिरहेँ । एउटा झिल्को झ्वारर्र भयो, सुकेको खयर परेछ । चिलाउनेको दाउरा चैँ जल्न मानिरहेको थिएन, उनले

लात्तोले हानेर भित्र कोचे । मलाई मीतको सम्झना भयो, लात्तो देखेर । अझै बलेन, उनी झोक्किए- 'तेरीमा सिथर्ने !'

'कहिले पसल खोल्नुभएको ?'

'परार हो,' उनले भने- 'तपैं' बास बस्न आउनुभो', खुसी लाग्यो ।'

'छुवाछूत मेटिएको देखेर राम्रो लाग्यो मलाई,' मैले भनेँ ।

'अझै पनि कतिपय चैं आउँदैनन् क्यारे, आफ्नै जातका मात्रै आउँछन्,' उनले भने- 'तर तपैं'जस्तै सर्ट-पाइन्ट लगाउनेहरू आउन थाले'सि पुरानो भेदभाव कम हुँदै गा'छ ।'

म दङ्ग परेँ, उनी दुई वर्षमै पोख्त पसले भएको देखेर । खिच्रीमिच्री दोकानमा चियानास्ता पनि रहेछ । पसलको कुनामा एउटा कल देखेँ । त्यही पुरानो हुनुपर्छ हामीले सानामा देख्ने गरेको । सके दिउँसोतिर उनी मेसिन घुमाउँदा हुन् ।

'चन्दा दिनुपर्छ होला नि ?' मैले सोधेँ ।

'टैक्स लिन्छन्,' उनले भने- 'यो के भन्छ नि ... जनसर्कार उठाउँदै आउँछ ।'

उनी दाउरा कोचिरहेका थिए । फेरि फू-फू गरे ।

'बूढालाई देखेर टीठ लाग्छ,' उनले भने- 'कैले आउँछन्, सलाई दे भन्दै । सलाई दियो, ए घरमै छ भनेर फर्किन्छन् ।'

मैले उनको अनुहार हेरेँ । फेरि फू-फू गर्दै उनले थपे- 'कैले आउँछन् ढिके नुन छ ? भन्दै । छ भन्यो, त्यसै नबोली फर्किन्छन् ।'

मैले पनि फू-फू गरेँ । तागत सिद्धिएछ । उनले एउटा अगुल्टो तानेर फिल्टर नभएको सानो ठुटो चुरोट सल्काए । बाहिर कसैको कल्याङमल्याङ सुनियो । सदरमुकामदेखिन् एक नेटोयताका गाउँले रहेछन्, हडबडाउँदै हिँडेका । पसलेलाई बाहिर बोलाए । उनीहरू सोध्दै थिए- 'एक जना मान्छे हिजो यता बास बसेको थियो ?'

'किन र ?' पसलेले सोधे ।

'भन न, बास बसेको थियो कि थिएन ?'

'थिएन,' उनले भने ।

'राति कोही हिँडेको सुन्यौ ?'

'सुनिनँ,' उनले भने- 'क्वै' हिँडेन जस्तो लाग्छ । अचेल निद्रा पातलो छ, कुकुर हिँडे पनि झस्केर बिउँझिन्छु । मान्छे हिँडे त था' हुन्थ्यो होला !'

'पक्का हो ?'

'के ढाँटुम् ?' उनले भने- 'किन, के भो र ?'

'मा सिथोर्ने,' एक जनाले भन्यो- 'अस्ति जेल फोर्दा भागेका कैदीमध्ये एउटा मूर्तिचोर पनि परेछ ।'

'हँ ?'

'त्यस्साले त भोलिपल्ट राति बजार फर्केछ ।'

'ए, अनि ?'

'बजारको भगवान्को मूर्ति उप्काएर लगेछ,' उसले भन्यो ।

'ज्या, है ?' पसलेले चुकचुक गरे ।

'बोराले छोपेर भारी बोकाईवरी यही बाटो लागेको छ रे,' अर्को चैँले भन्यो- 'ऊ आफू भने ठिमठिमती हिँड्दै छ रे, कसैलाई भरिया बनाएर ।'

'ओहो, त्यो त शिवजीको पुरानो मूर्ति होइन ?' उनले सोधे- 'अनि त्यै' चोर होइन, पहिला चोरेर पक्राउ खा'को ?'

'ल, यतापुँडो कान टाठा पारेर बस है,' भनेर तिनीहरू हिँडे । कता गए मैले मेसो पाइनँ । अगेनो हुपहुपती दन्किसकेको थियो । उनी फर्के, भन्दै थिए- 'चोरलाई चोर्नकै धन्दा !'

म चुपै रहेँ ।

'लतको कुरो हो,' उनले भने- 'त्यो बज्जियालाई जेल परेर पनि चेत फिरेनछ, त्यै' मूर्ति चोर्ने धीत पुगेको रै'नछ ।'

उनले कोदाको पीठो झिके । सानो कसौँडीमा पानी उम्लेपछि पीठो ओइरिए । आलु काट्न लागे । पिँडालुका डल्लाडल्ली निकाले ।

'तपैँ' क्यै' बोल्नुहुन्न,' उनले भने- 'फतफत गर्दै ढिँडोभन्दा मै छिटो पाकुँला !'

'म भित्रभित्रै उसिनिएको छु,' मैले भनेँ ।

'मीतबालाई सम्झेर ?' उनले सोधे- 'बूढाकाँ' बस्न मन लागेन ?'

'अहँ,' मैले भनें ।

'नबसेकै जाती,' उनले भने- 'बेसुरा भैसकेका छन् । के बोल्छन् ठेगान छैन, के गर्छन् टुङ्गो छैन ।'

'गाउँमा टेको पनि कोही भएन ।'

'तल्लो डिहीमा एकघर त्यस्तै बूढाबूढी छन्, तपाईंको मीतबाभन्दा पनि टीठलाग्दा, आँखा कम्ती देख्छन्, छोराहरू फर्कँदै आउँदैनन् । कसरी आऊन् ? एक भाइ सर्भिसमा छ, अर्को जङ्गल पस्या छ । सर्भिसको छोराले खबर पठाएको रे, मलाई गाउँ आउन डर छ, भेटघाट गर्न तपाईंहरू काठमाण्डू गणमै आउनुहोला,' उनले सुनाए- 'कसरी जाऊन् बेचाराहरू !'

'ए ।'

'पिरोलिएरै सास फाल्लान् जस्तो लाग्छ, यसो सोच्दा,' उनले भने ।

उनले सिलौटको थालमा मलाई ढिँडो हालिदिए । जुग भएछ, कोदो नचाखेको । पिँडालु आलुमा मिसिएर गलत्त परेछ, थालको छेउमा राखें । पहिलो गाँस लिँदै थिएँ, मीतबा हिँडेजस्तो अनुमान भयो । खङ्रङ्ग परें । पाइला यतैतिर बढेजस्तो लाग्यो । गाँस छिटछिटो लिएँ । निल्न सास्ती भएर अम्खोरा उचालें र अलिकति घाँटी भिजाएँ ।

'ए ठूले ?' मीतबाको ठूलो आवाज आइहाल्यो ।

'हजोर,' भन्दै पसले निस्के बाहिर । म ढिँडो मुछ्दै अडिएँ, सास पनि रोक्न खोज्दै ।

'मेरो मीतछोरो देखिस् ?'

'खै देखिनँ त,' उनले ढाँटे । मलाई झ्वाट्ट बोल्न आएन ।

'नढाँट् है बज्जिया,' उहाँले हप्काउनुभयो- 'यतै झरेको हुनुपर्छ । तेरा आँखा के बाँदरले कोतरेको थ्यो ?'

'होइन, धरोधर्म,' उनले आफ्नो ढाँटलाई मलजल गरे- 'आँखा चोख्खै छन्, ल हेर्नुस्, ल !'

'तँलाई मैले चिन्या छैन ए बज्जिया ?' मीतबाले झन् ठूलो स्वर गर्नुभयो- 'गाममा बिरालो हिँडेको त चाल पाउँछस्, को पोइल गो भनेर चियोचर्चो गरेर बस्छस्, तँलाई था' हुँदैन ?'

'तपैँ'लाई किन ढाँट्नु बा ?' पसलेले नकचरो पारे- 'बरु एउटा छाया यसो लसक्क बाटो लाग्याजस्तो त भा'थ्यो। अघि नै हो त्यो त। नेटो काटिसक्यो होला। तपैँ'को मीतछोरो म चिन्दिनँ ?'

'होला त्यसो भए त,' मीतबा लत्रिनुभयो- 'हाम्लाई पनि त्यस्तै भा'थ्यो। ए छल रै'छ। ऊ आ'को जस्तो भान पऱ्या रै'छ। ल भैगो।'

'हस्,' पसलेले ढोकाभित्र फर्केर भने।

'ए, सुन् त,' उहाँले भन्नुभयो- 'कसै गरी ऊ आइहाल्यो भने माथि पठाइदे है ? त्यसको पनि मन भाँडिएला।'

'हवस्,' उनले भित्र पसेर चर्को स्वरमा भने।

म हत्तपत्त हात धोएर, कुल्ला गर्दै उकालो लागेँ मीतबालाई पछ्याउँदै। पसले हेरेको हेऱ्यै भए। सयको नोट पिर्कामुनि घुसारिदिएको थिएँ।

'ए पैसा किन दे'को ?' भनेर हप्काउँदै हरिलाल मलाई पछ्याउँदै आए।



# १९

केही बटुवा अगाडि-अगाडि थिए । म एक्लै आफ्नो धुनमा थिएँ । एउटी बालिका बाटाछेउ बसिरहेकी रहिछ । फ्रकमा टाँसिएका काँडा निकालिरहेकी । म हिँडिरहेको थिएँ, ऊ आफैँ जान्ने टोपलेर मलाई रोकी ।

'साथीहरू अघि गइसके, तिमी किन ढिलो ?' उसले सोधी । पहिलो भेटमै, त्यो पनि आफ्नो बाबुको उमेरको एउटा अपरिचितलाई 'तिमी' लगाएकामा म मुसुक्क हाँसैं । ऊ त गम्भीरतासाथ मेरो जवाफ खोजिरहेकी रहिछ, काँडा पनि टिप्न छाडेर !

'तिमीले च्याप्प समातिदिनुपर्थेन त ?' मैले जिस्क्याएँ ।

'म यत्री सानीले त्यत्रा मान्छेलाई समाउन सक्छु त बूढा ?'

उसले 'बूढा' भनेको सुनेर म तीन छक परें । फिस्स हाँसैं । ऊ ढुङ्गामा बसेर फेरि निहुरिन थाली । फ्रकभरि नबिझाउने काँडैकाँडा उल्झेछन् । म उसको ठिक्क अगाडि टुक्रुक्क बसेँ र अनुहार ट्वाल्ल हेरेँ ।

'के हेरेको ?' उसले नहाँसी सोधी ।

'तिमी कस्ती रहिछ्यौ भनेर हेरेको ।'

'कस्ती रै'छु त ?'

'स्याउजस्ती !'

'मान्छे पनि कैँ' स्याउजस्तो हुन्छ त बूढा !' उसले भनी ।

'त्यस्तै राम्रो भनेको क्या ।'

'स्याउ पनि कैँ' राम्रो हुन्छ त ?' उसले भनी- 'जे पायो त्यै' !'

म झसङ्ग भएँ, 'जे पायो त्यही' सुनेर । पल्पसालाई सम्झिएँ, उसकै थेगो । कस्तो ठ्याम्मै उस्तै भाकामा यस फुच्चीले मलाई पल्पसा सम्झाइदिई ! म झन् रोमाञ्चित भएँ ।

'ए होत्त नि, हगि ?' मैले भनेँ- 'स्याउ त मीठो पो हुन्छ ।'

'मेरो नाकबाट सिँगान आउँछ,' उसले भनी । म मरीमरी हाँसेँ तर मनमनै। उसलाई बिथोल्नु भएन । सानो धोबिनी चराजस्ती बालिका फ्रकबाट काँडा झिक्न खोजिरहेकी छ र मलाई अलमल्याइरहेकी छ । म उसको फ्रक सुस्तरी छाम्छु, उसका औँला चुलबुल-चुलबुल गर्छन् ।

'काँडा कसरी लाग्यो नि ?'

'पिसाब फेर्न ग'की,' उसले भनी- 'झाडीमा रै'छ ।'

'ए !'

'कस्तो नजाती काँडा रै'छ, भुसुक्कै सल्क्यो !' उसले गुनासो गरी ।

'तिमीले त कट्टु नै लगाएकी छैनौ जस्तो छ !'

'झ्याउ लाग्छ ।'

'किन ?'

'पिसाब च्याप्यो भने फुकाल्नै भ्याउन्नँ,' उसले भनी । मैले हाँसो रोक्नै सकिनँ ।

'किन हाँसेको ?' उसले हप्काएजस्तो गरी- 'बरु ह्याँ' काँडा टिप्देऊ न !'

मैले हात यसो बढाएँ, एउटा टिपेझैँ गरेँ । सुटुक्क उसलाई हेरेँ, ऊ गहिरिएर काँडा झिकिरहेकी थिई । मलाई हेर्दा पनि नहेरी ।

'तिम्रो नाम के हो ?' मैले सोधेँ ।

'नानु,' उसले भनी तर मेरो नाम मागिन ।

'राम्रो नाम रहेछ ।'

'नाम पनि कैँ राम्रो हुन्छ ?' उसले फेरि भनी- 'कस्तो जे पायो त्यै' !'

'ए, होत्त नि हगि ?' मैले भनेँ- 'फूल पो राम्रो हुन्छ ।'

'हो,' उसले भनी ।

'तिमी फूलभन्दा राम्री छ्यौ ।'

'कैं' नपा'र होस् !' उसले फ्याट्ट मलाई फेरि पल्पसा सम्झाइदिई ।

'साँच्चै भनेको,' मैले भनें- 'तिमी लालीगुराँसभन्दा राम्री, सयपत्रीभन्दा राम्री, मखमलीभन्दा राम्री, जुहीभन्दा राम्री ... ।'

'मलाई त सयपत्री मन पर्छ ।'

'हो, तिमी सयपत्रीभन्दा पनि राम्री !'

'हा, तिमी त मेरो आमाजस्तै गन्थन गर्दारै'छौ !' उसले मलाई फेरि हप्काई- 'ह्याँ' काँडा टिप्दिनु छैन !'

मैले फेरि औंला बढाएँ । यसो झिक्न खोजेको, त्यो सानो जैरे त दोब्रियो । अर्को झिक्न आँटें, त्यो पनि मानेन ।

'तिम्लाई त काँडा झिक्न पनि आउँदैन ।'

'मैले अहिलेसम्म झिकेकै छैन ।'

'कसले झिकिदिन्छ त ?'

'मेरो पाइन्टमा त काँडै लाग्या छैन अहिलेसम्म ।'

'के तिमी पिसाब फेर्न जाँदैनौ ?' उसले सोधी, मेरो मुख हेर्दै । म फेरि भुतुक्क भएँ, हाँसो थाम्न सकिनँ ।

'जान्छु तर काँडा बिझ्दैन ।'

'ए, तिमी पाइन्ट लाउने भ'र होला,' उसले भनी अनि निहुरिई । म फेरि सानोतिनो विस्फोट भएँ ।

अरू दुई-चारवटा टिपेर उसले मिल्क्याई ।

'काँडा कस्तो नजाती,' मैले भनें- 'यस्ता केटाकेटीलाई पनि लाग्ने !'

'काँडाको'नि आँखा हुन्छ त बूढा !'

'मान्छेको त हुन्छ नि,' मैले भनें- 'हेर्नुपर्दैन ?'

'मेरो आँखा सानो छ नि त ।'

'तिमी सानो मान्छे भएर ?'

'म काँ' सानी छु त ?' भनेर ऊ ढुङ्गामाथि ठिङ्ग उभिई ।

लगत्तै ऊ बुद्रुक्क हामफाली । म दुई पाइला सरेँ । उसले भेटी अनि तिघ्रामा लाग्ने गरी ठटाई । मलाई च्वास्स भयो, औँलामा उसले एउटा काँडा पनि च्यापेकी रहिछ । सुई लगाएजस्तो भयो ।

'ल फच्चे भो,' उसले मलाई सजाय पुगेको ठानिछ । शान्त भई ।

'तिमी कहाँ जाने ?'

'मितिनीकाँ',' उसले भनी । मलाई चसक्क बिझ्यो । उसले अर्को काँडा छातीमै घोचेजस्तो भयो ।

'मितिनीलाई के ल्याइदिएकी छ्यौ त ?'

'ई, केरा,' उसले अर्को हातमा एउटा सानो कोसो लुकाएकी रहिछ, देखाई ।

म ट्वाल्ल परेँ ।

'तिमी पनि मीतकाँ' हिँड्या हो ?'

'म त मीतघरबाट फर्केको,' मैले भनेँ ।

'के ल्यायौ त ?'

'मीतबाले एक हाता केरा दिनुभा'छ,' मैले भनेँ- 'झोलाभित्र राखेको छु ।'

'किन ? अरूले माग्छन् भनेर ?'

'तिमी खान्छ्यौ ?'

'नाइँ, म त दिनको एक कोसो मात्र खान्छु,' उसले भनी- 'बिहानै आफ्नो भाग खाइसकेँ ।'

'आज एउटा थप खाऊ न त,' मैले भनेँ र रुक्स्याक झिक्न लागेँ ।

'फेरि तिमी पनि मेरो केरा खाइदिने हो कि ?' उसले सोधी ।

'म माग्दिनँ,' मैले भनेँ- 'तिम्री मितिनीलाई चाहिन्छ नि, हगि ?'

मैले एउटा निकालेर दिएँ । उसले बोक्रा निकाली अनि कप्पाकप खाई ।

'गुलियो रहेछ,' उसले भनी ।

'चिनी हालेको छ ।'

'हुन्छ बूढा !' उसले मलाई हप्काई- 'जे पायो त्यै' !'

'अनि कसरी गुलियो हुन्छ त ?'

'ए होत्त नि हगि ?' ऊ दोब्रिई ।

'घारीभित्रै चिनी फिटेर हाल्छ क्या !'

'हुन्छ बूढा !'

'होइन, होइन, तिमीलाई त्यस्सै भनिदिएको,' मैले कान समात्दै भनेँ ।

'अनि गुलियो कसरी पस्छ त ?' उसले सोधी ।

'तिमी स्कुल जानुपर्छ, पढ्नुपर्छ, धेरै कुरा थाहा हुन्छ,' मैले भनेँ ।

'तिम्ले पढेनौ ?' उसले सोधी ।

'पढेँ ।'

'भन्न सकेनौ नि त !' उसले मलाई लपेटी ।

'कुनै फल गुलियो, कुनै अमिलो, कुनै टर्रो, कुनै बेस्वादको हुन्छ, हगि ?' मैले भनेँ- 'फेरि गुलियो पनि अनेक थरी हुन्छन् । यो सबै बुझ्न पढ्नुपर्छ क्या !'

'हाम्रो त स्कुलै बन्द छ,' उसले भनी- 'तिम्रो नि ?'

हामी हिँडिरहेका थियौँ । ऊ मेरो औँला समात्दै मभन्दा छिटछिटो हिँड्न थाली । अर्को हातमा त उसले केरा लुकाएकी थिई ।

'तिम्लाई था' छ ?' उसले भनी- 'म आजै जन्मेको नि ।'

'आज ?' मैले उसलाई हेरेँ । ऊ अघिअघि बढ्न आँट्दै थिई ।

'हो,' उसले भनी- 'आमाले भन्नुभा'को म आज जन्मेको रे ।'

'अनि तिमी कति वर्ष भयौ त ?'

'आजदेखिन् पाँच लागेँ रे,' उसले भनी ।

'अनि तिम्रो जन्मदिनमा त मितिनीले पो कोसेली ल्याउनुपर्ने, होइन ?'

'मितिनीको बारीमा केरै छैन,' उसले भनी ।

म फेरि हाँसेँ । गड्याम्म ठूलो आवाज आयो । म रोकिएँ ।

'के होला ?'

'डाँडाबाट ढुङ्गा झर्‍या होला,' उसले भनी ।

'त्यस्तरी त आवाज आउन नपर्ने !'

'जति तल खस्यो,' उसले सम्झाई- 'उति आवाज ठूलो हुन्छ भन्ने थाहा छैन ?' म केही नबोली हिँडे । उसले मलाई हेर्दै सोधी- 'तिम्रा साथीहरू काँ' पुगिसके होलान्, है ?'

'म त एक्लै हिँडेको ।'

'ए मज्जा भो,' उसले भनी- 'त्यसो भए मेरी मितिनीको घर जाने है ?'

'टाढा छ कि ?'

'आज त्यैँ' बस्ने नि !' उसले भनी ।

म छक्क परेँ । उसको तालमा पाइला सारिरहेँ । उसको औँला पसिनाले चिप्लो भइरहेको थियो ।

'अर्काको घरमा ...,' मैले गाऱ्हो मान्दै भनेँ ।

'म मीतबासँग भन्छु नि,' उसले भनी । मलाई झन्झन् बिझ्दै गयो ।

'के भन्छ्यौ ?'

'तिमी पनि मसँग आ'को भनेर ।'

'म को हो भनेर मीतबाले सोध्नुभयो भने ?'

'बाटामा भेटेको भन्छु ।'

'मान्नुभएन भने ?'

'तिमीसँग केरा छ नि,' उसले भनी- 'त्यै' देऊ न !'

म फेरि हाँसेँ । हिजो रातभरि मीतघरमा आँखा निदाएनन्, बूढाबूढीलाई ढाडस दिँदादिँदै । फुल्याउँदा-फुल्याउँदै । बूढाबूढी त केटाकेटी भइसकेका थिए । आफूलाई पनि मन थाम्न सकस भयो । पटक्कै निद्रा लागेन । मीतकै खाटमा सुतेँ । झन् आँखा जोर्न सकिनँ ।

'केरा दिएर'नि मान्नुभएन भने ?'

'मान्नुहुन्छ ।'

'केही गरी मान्नुभएन भने ?'

'म मितिनीलाई कानमा भन्छु,' उसले भनी- 'ऊ रोइदिन्छे अनि उल्लाई फकाउन मीतबाले तिम्लाई पनि बस भन्नुहुन्छ ।'

म फेरि मरीमरी हाँसेँ । उसले औँलो फेरी, चिप्लो भइसकेकाले ।

'तिमी मसँग काठमाण्डू जान्छ्यौ ?'

'जान्नँ,' उसले भनी- 'डर लाग्छ ।'

'किन ?'

'राजालाई त मार्ने ठाउँ !' उसले ठाडै भनी ।

'तिमीलाई यहाँ डर लाग्दैन ?'

'अचेल त अलिअलि लाग्छ ।'

'किन ?'

'बा रेडियो खोलिर'नुहुन्छ अनि भन्नुहुन्छ- मान्छे भसक्कै मारेछन् ।'

'ए ।'

'मान्छे मरेर काँ' जान्छ तिम्लाई था' छ ?'

'छैन,' मैले भनें ।

'त्यत्ति पनि था' छैन ?'

'तिमीलाई थाहा छ ?'

'म यति सानीलाई पनि था' हुन्छ त बूढा ?' उसले भनी ।

'खै तिम्रो मितिनीघर त आएन ?'

'आउँछ,' उसले भनी- 'तिमी थाक्यौ ?'

'छैन,' मैले भनें- 'के उः त्यो खोलापारि हो ?'

'खोलापारि त मामाघर !'

'मामाघर ?'

'अँ,' उसले भनी- 'खोलाको पुल बम पड्केर भत्क्यो । त्यहाँ गए त सिलटिमुर खाइन्छ । अनि मामाघर पुगिँदैन त ?'

म फेरि हाँसें । घत मानीमानी ।

'तिमी धेरै हाँस्दारै'छौ,' उसले फेरि हप्काउने स्वरमा भनी ।

'तिम्ले हँसायौ ।'

'मैले हाँस भनें ?'

'तिमीसँग कुरा गर्दा क्वै' हाँस्दैन ?'

'गन्थन नगर् भन्नुहुन्छ आमा जत्तिखेर पनि,' उसले भनी- 'अनि आफैं गन्थन गर्नुहुन्छ । मलाई बोल्नै दिनुहुन्न । म त मितिनीसँग मात्रै कुरा गर्छु ।'

ऊ टक्क अडिई । बाटो छुट्टिने रहेछ । उसले मेरो औँला समातेको समात्यै गरी, चिप्लो भइसके पनि । बाटोतल हेरेँ– धेरै गाउँले झुम्म थिए । एउटा घरको आँगनभरि । वरिपरिका घरका आँगन र पिँढीबाट मान्छेहरू तल्लो घर हेरिरहेका थिए । केही घटना भएको हुनुपर्छ । एउटा मान्छे अँध्यारो अनुहार लाउँदै आयो र नानुलाई समात्यो । ऊ नानुलाई फकाउन खोजिरहेको थियो ।

'तिम्री मितिनी रहिन नानु,' त्यो मान्छे भनिरहेको थियो- 'अघि खेल्दाखेल्दै बम समाउन पुगिछ । गाउँ नै थरररर हुने गरी पड्क्यो ।'

हत्तेरी, म पनि थरररर काँपेँ । किङ्कर्तव्यविमूढ भएँ । उभिरहेँ । अघि सुनेको आवाज यही बम पड्केको रहेछ । नानु मेरो औँला छाडेर दौडेकी थिई त्यही घरतिर । उसले थाहा पनि पाइन, अर्को हातको केरा झरेको । चङ्गा हत्तपत्त कसैले तानेझैँ ऊ तलतिर बत्तिई । हावामा चङ्गा बत्तिएझैँ देखियो ।



# २०

यो यस्तो उकालो कहिल्यै थिएन । मेरा कलिला गोडाले सयौँपल्ट नापेको पहाड आज गाऱ्हो भइरहेछ । म फेरि उभिन्छु, पसिना पुछ्छु, लामो सास फेर्छु । दुई जना यात्री मलाई हेर्छन् । चियापसलछेउ उनीहरू विश्राम गरिरहेछन् । बाटो छुट्टिनु छ । तर म आज पहिलोपल्ट यस बाटामा बिरानिन्छु, अलमलिएर । ती यात्रीका आँखा सिरुपाते बनेर घोच्न आइपुग्छन् । चियापसलकी बहिनी बूढी भइछन् । पछ्यौराको सप्कोले अनुहार छोपेकी थिइन् । उनले चिया फिटेको सुनेँ, गिलासमा चम्चा टिङटिङ बज्यो ।

'बिचरीको लोग्नेलाई अनाहकमा मारे,' ती यात्रु कुरा गरिरहेका थिए- 'झुक्याएर मारेको रै'छ ।'

म कान थापी उभिएँ ।

'पसलबाट बोलाएर ऊ त्यो भीरमा पुऱ्याएर हानेको भन्दै थिए, आँखा छोपेर,' उनीहरू भन्दै थिए- 'आतङ्ककारी भनेर रेडियोले फुक्यो ।'

'आतङ्ककारीकी श्रीमती' ले मलाई हेरिन् । मैले चिया पिउने विचार त्यागेँ । किनकिन पाइला अडिन मानेनन् । घाम नलागेको भए हुने । तर यो यस्तोविधि थकाउने पहाड होइन । खासै उकालो पनि छैन । तर्पायाँ, तर्पायाँ छ । नजानिँदो उकालो । तर आज म गलिरहेको छु । मलामी बनेर हिँडेजस्तै भइरहेछ । जुत्ता लगाइरहेको छु तर सीधै तातो ढुङ्गा छोएझैँ भइरहेछ । खुइय्य गर्छु, भरियाझैँ । हलुङ्गो झोला छ तर तालिमे सैनिकले ढुङ्गा बोकेजस्तो भइरहेछ ।

'कतापट्टिको होला त्यो मान्छे ?' ती यात्रुले सोधीखोजी गरेझैँ सुन्छु- 'अब त नचिनिने भैसक्यो, वेश बदलेर हिँड्छन्, अर्काको भाषा नक्कल गर्छन् ।'

म उक्लिँदै छु तर कान थाप्न छाड्दिनँ । 'यो त सैनिक होला भनेर बास दियो, राति कुन बेला उडाइदिन्छ !' उनीहरू भन्दै थिए- 'जङ्गलको हो भनेर व्यवहार गऱ्यो, फेरि पनि उडाइदिन्छ !'

कतै मेरो कुरा त काटिरहेका छैनन् भनेर फर्किन्छु, उनीहरू मैतिर हेरिरहेका छन् ।

झन् पाइला गऱ्हुङ्गा हुन्छन् । आज त बास पनि नपाइएला, त्यसो भए । म केही पनि होइन भनेर पत्याउनेवाला कोही छैन । आज आफ्नै मातृथलो नौलो भइरहेछ । आज आफ्नै पितृथलो बिरानो भइरहेछ । म चित्रकार हुँ भनेर पनि यहाँ कुनै मनितो छैन । म के हुँ ? म के हुँ भन्ने प्रश्न मैले के गर्छु भन्ने जवाफसँग जोडिएको छ । म चित्रकार हुँ भन्यो भने कस्तो चित्र बनाउँछु भन्ने जवाफ दिनुपर्छ । म के बनाउँछु त ? गहिरिएर सोच्छु, म चित्र त बनाउँछु तर त्यसले यो पहाडलाई के दिएको छ भन्ने प्रश्न उठ्न सक्छ । मेरो पेन्टिङले यस पहाडलाई प्रत्यक्ष केही योगदान गर्न सक्दैन । यो सम्भव छैन । त्यसो भए म चित्रकार हुँ भनेर जोगिन सक्ने अवस्था छैन ।

सिद्धार्थले मलाई राम्रै गरेछ, कम्तीमा मैले यो माटो फेरि टेक्न पाएँ । उसले मलाई तान्यो, मैले यो बाटो फेरि हिँड्न पाएँ । म फेरि यहाँ उभिन पाएँ र यहाँ उभिएर आत्तिन पाएँ ।

हावा अर्कै छ, फूलको बान्की बेग्लै छ । रूप उही छ तर गति फेरिएको छ । पहाड उस्तै शान्त छ तर यसभित्र अशान्ति चम्किएको छ । ढुङ्गा उही छ तर त्यसभित्र अर्कै मर्म कुँदिएको छ । आकार उही छ तर स्वभाव उही छैन । सिद्धार्थले मलाई प्रेरित गऱ्यो, चुनौती दियो गाउँ डुल्न । र आफू भने कुलेलम ठोक्यो । उसले मलाई ठाउँ त फर्कायो तर ऊ आफैँ टाढा भयो । काठमाण्डूबाट आँखामा पट्टी बाँधेर अपहरण गरेझैँ उसले मलाई यहाँ ल्यायो तर पट्टी खोल्दा ऊ थिएन । म थिएँ त आफ्नै गाउँ । आफ्नै क्षेत्र । आफ्नै भेग, आफ्नै माटो । आफैँ पहिला उभिएको ढुङ्गा । आफैँले पहिला सुसेली हालेको वन । यो रनवनमा पहिला म निस्फिक्री डुल्थेँ, अहिले फिक्री धेरै छ । 'आहुम् !' कोही खोकेको सुन्छु, होइन रहेछ ।

सिद्धार्थले मलाई सोच्न बाध्य पारेको छ । ऊ के चाहन्छ भन्ने मलाई बुझाउन खोजेको छ । शान्त तलाउमा ढुङ्गा हानेको छ उसले । म यिनै तरङ्गहरू हेर्न विवश छु । ढुङ्गा हानेर पेस्तोल बोकी ऊ फरार छ । ऊकहाँ छ, म खोज्न सक्दिनँ ।

उकालो हिँडिरहेको छु तर ओरालो गइरहेजस्तो लाग्छ । म खुट्टा उचाल्छु तर तल हिँड्न खोजेजस्तो लाग्छ । एक पाइला अघि बढाउँछु तर पाइला पछि सरेजस्तो हुन्छ । आत्तिन्छु र फेरि उभिन्छु । माथिबाट एउटा मान्छे आउँछ तर तलबाट आएजस्तो लाग्छ । दक्षिण फर्किएको छु तर हिमाल देखिएका छन् । म आँखा पुछ्छु, त्यो मान्छे देखेर झस्किन्छु । किनभने ऊ मजस्तै छ । मजत्रै छ । मेरै कपडा लगाएको छ । उस्तै रुक्स्याक भिरेको छ । रुक्स्याकको पींधमा उसले पनि स्लिपिङ ब्याग बाँधेको छ । मेरो जस्तै केही दिनदेखि खौरिन नभ्याएको दाह्री झुस्स छ । म अडिन्छु, ऊ पनि टक्क अडिन्छ । म उसलाई हेर्छु, ऊ पनि मैलाई हेरिरहेको छ । म बढ्छु, ऊ पनि खुट्टा लम्काउँछ । फेरि रोकिन्छु, ऊ पनि रोकिन्छ । हा, जे पर्लापर्ला भनेर पाइला उचाल्छु, ऊ मसँग ठोक्किन्छ ।

'म दश वर्षपछि गाउँ फर्केको,' ऊ भन्छ, चिनेजस्तो गरी ।

म बोल्न सक्दिनँ । उसलाई हेरिरहन्छु ।

'आज बास नपाइएलाजस्तो छ,' ऊ भन्छ- 'कोही पनि म चित्रकार हुँ भन्ने पत्याउँदैनन् ।'

म फेरि झस्किन्छु र ट्वाल्ल उसलाई हेर्छु ।

'गाउँ पुगेर आएको, बस्न सक्दिनँ,' ऊ भन्छ । ऊ त्यसो किन भन्छ ? कि ऊ मलाई तर्साउन खोजिरहेछ । मेरो नक्कल गरेर, मेरै वेश धारण गरेर के ऊ मलाई गिज्याउन चाहन्छ ? के ऊ मेरो सेखी झार्न चाहन्छ ?

'सदरमुकाम झरेको दिन आक्रमण भयो,' ऊ भन्छ । म जहाँबाट आएको छु, ऊ त्यही सुनाइरहेछ । आखिर किन ? मलाई हेरिरहेको छ । म उसलाई हेर्छु, ऐना हेरेजस्तो लाग्छ । आफूलाई छाम्छु, अझै विश्वास लाग्दैन, चिमोट्छु ।

'मलाई कस्तो नरमाइलो भयो भने मेरो मीत पनि खसेछ,' ऊ आफैँ भन्छ । मैले केही सोधेकै छैन । 'मीतबाकहाँ बस्न त बसेँ,' ऊ मेरो सातो लिँदै भन्छ- 'तर रातभरि निद्रा परेन ।'

'अनि के तपाईंले बाटामा सानी नानी पनि भेट्नुभयो ?'

'हो,' उसले भन्यो- 'तपाईंले कसरी थाहा पाउनुभयो ?'

'मैले यसै कल्पना गरेको,' म भन्छु ।

'हो, ऊ मितिनीकहाँ हिँडेकी थिई तर मितिनी मरेको उसलाई थाहा थिएन,' ऊ भन्छ ।

'के उसले हातमा केरा लिएकी थिई ?'

'हो,' उसले सोध्यो- 'तर तपाईंले यो पनि कसरी चाल पाउनुभयो ?'

'त्यसै लख काटेको,' म भन्छु ।

ऊ हत्तपत्त पेस्तोल निकाल्छ र मतिर तेर्स्याउँछ । म थरररर काम्छु ।

'ल भन्, तँ को होस् ?' ऊ 'तँ' को भाषामा उत्रेर ममाथि एक्कासि जाइलाग्छ । म उसलाई हेर्छु, ऊ दाह्रा किटिरहेको छ ।

'म चित्रकार हुँ ।'

'ढाँट्छस् ?' ऊ चर्किन्छ । म नाजवाफ बन्छु । ऊ मेरो शिरनेरि पेस्तोल छुँला-छुँलाझैँ गर्छ ।

'के फुर्ती लाएको ?' म बम्किन्छु- 'यो पेस्तोलमा गोली त छैन !'

ऊ झस्किन्छ । हो कि क्या हो भन्ठानेर ऊ लत्रिन्छ । अनि पेस्तोल खिच्छ । न्वारानदेखिको बलले एक लात दिएर लडाएपछि म उसको हातबाट पेस्तोल लुटेर उकालो लाग्छु । अनि माथि पुगेर हेर्छु, ऊ जऱ्याकजुरुक उठेर मतिर हेरिरहेको छ । माया लाग्छ, बेवकुफ रहेछ । बच्चाले झैँ वाल्ल परेर मलाई हेरिरहेको छ । उसलाई लखेट्न म पेस्तोल तेर्स्याउँछु । ऊ यसो निहुरिन्छ । अनि गोली छैन भन्ठानेजसरी सीधा पर्छ । म आकाशतिर ताक्छु, मज्जाले पड्किन्छ । ऊ झस्किन्छ । म उसलाई हातको इसाराले बोलाउँछु, ऊ झुक्न खोज्छ । अनि म त्यो हतियार उसले समातोस् भनेर ऊतिरै हुऱ्याइदिन्छु । पेस्तोल टिपेर ऊ ओरालो लाग्छ ।

'धन्यवाद,' उसले भनेको सुन्छु । ऊ ओरालो झरिरहेको छ । पछाडिबाट हेर्दा पनि मैजस्तो लाग्छ । म हाँस्दै हिँड्छु । माथिल्लो चियापसल आइपुगेपछि रोकिन्छु र ओठ टम्म बन्द गर्छु । तर मनमनै हाँसो चलिरहन्छ । कहिलेकाहीँ त म पनि उमेर स्वाट्टै घटाएर केटाकेटी बन्छु, हाँसो रोक्न नसकेर । पेटभरि हाँसो मडारिन्छ, पेट फुलेजस्तो हुन्छ र निकासका लागि एकमुस्ट मुख खोल्छु ।

'के, चिया भन्नुभा'को ?' पसल्नी सोध्छिन् ।

'होइन, धन्यवाद ।'

म फेरि हाँस्दै उक्लिन्छु ।

'के जातको मान्छे रै'छ,' ती महिला बोलेको सुन्छु- 'एक्लै खितखित-खितखित गर्दै हिँडेको छ !'

'फुस्क्यो होला !' अर्को मान्छेको बोली सुन्छु ।

देउराली पुग्छु त फेरि झस्किन्छु । गोआबाट मुम्बई हुँदै फर्किंदा रेलमा भेटेको लाहुरे गुन्टा कसेर मलाई पर्खिरहेको झैँ देख्छु । ऊ मलाई नमस्कार गर्छ तर अनुहार हँसिलो छैन । 'रम पिउने ?' भनेर सोधिहाल्छ कि भन्ठान्यो, तर ऊ मुख अमिलो पार्छ । नमस्कार फर्काउँदै म सोध्छु- 'कहाँ हिँड्नुभएको ?'

'इन्डिया फर्किन लागेको,' ऊ भन्छ- 'तिमीलाई देखेर रोकिएको ।'

बाटोलाई साथी भेटेर म दङ्ग पर्छु । ऊ भने पछिपछि लाग्छ, बोल्दैन । म अघिको घटना सम्झेर हाँसिरहेको छु ।

'केको खितखित हो भाइ ?' ऊ सोध्छ ।

'तपाईंलाई यहाँ भेट्न पाएर,' म कुरा बनाउँछु ।

उसलाई हेर्छु, रुमालले आँसु पुछ्दै मेरो पछिपछि हिँडिरहेको छ । हुक्कहुक्क गरिरहेको छ ।

'छोरो फर्काउन सकिनँ,' ऊ भन्छ ।

'भेट्नुभयो त ?'

'भेटेँ' ऊ भन्छ- 'मसँग राजनीतिक बातचित गर्न थाल्यो । मैले सम्झाउन सकिनँ ।'

पछाडिबाट उसको कान्छो छोरो दौडिँदै आउँछ । ऊ रोकिन्छ । 'आउँदै गर्नोस् है,' भनेर म बाटो तताउँछु । अगाडि एउटा भीर देखिन्छ । अघिको घटना सम्झेर फेरि हाँस्न थाल्छु, कस्तो उल्लू रहेछ त्यो भन्दै । पेस्तोल निकाल्छ तर गोली छैन भन्दैमा फस्ल्याङफुस्लुङ पर्छ । म आफूसँग गर्व गर्छु, जुक्ति निकालेकामा । त्यति नगरेको भए सके म बच्ने थिइनँ । अनि फेरि हाँस्छु, कस्तरी लात्तो रन्काएको सम्झेर । ड्याम्म पेटैमा लागेछ । रन्थनियो । पाडोझैँ पछारियो । ऊ पछारिएको सम्झेर फेरि हाँस्छु । अनि मैले उसको हातबाट फ्याट्ट पेस्तोल लिएँ । उसले आफैँले खुरुक्क दिएजस्तो गऱ्यो । ठ्याक्कै बच्चाजस्तो । उसको हात कमलो थियो, बच्चाले बाबुलाई चकलेट दिएजसरी उसले पेस्तोल दियो । म फेरि हाँस्छु । मूर्ख रहेछ । गोली छ कि छैन भन्ने हेक्का पनि नराख्ने जैरेले किन पेस्तोल भिर्नु ? त्यस्तो जाबोले फेरि किन पेस्तोल तेर्स्याउनु ? कसैले गोली छैन भन्दैमा किन स्याट्टै पत्याउनु ? अनि फेरि आफूलाई लात्तो हान्नेकै हातमा किन खुरुक्क दिनु ? अनि त्यही पेस्तोल पाएर 'धन्यवाद' किन भन्नु ? म फेरि हाँस्छु, मूर्खै रहेछ त्यो ।

होइन, त्यसले किन पेस्तोल निकालेको भन्ने सोच्दै फेरि हाँस्छु । साले मसँग डराएको रहेछ, मैले पहिला पेस्तोल निकाल्छु कि भन्ने परेको होला । मै अगाडि निकाल्छु भनेर निकाल्यो तर गोली छैन भनेर के भन्देको थिएँ, लुत्रुक्कै पऱ्यो । फेरि हाँसो थाम्न सक्दिनँ । अहिले त एक्लै छु, किन ओठ टम्म पारेर हाँसो रोक्ने भनेर मुख खोल्छु, अटेसमटेस भइसकेको हाँसो पूरै खोलिदिन्छु । पेट हलुङ्गो हुन्छ । तर हाँसो के विधि आइरहेछ ? त्यसलाई सम्झेर फेरि खितखिताउँछु । होइन, त्यसले एक्कासि पेस्तोल किन निकाल्यो ? अनि गोली छैन भनिदिँदैमा किन पत्यायो ? फेरि खितखित-खितखित गर्छु ।

'ओइ !' कसैले मलाई गाली गरेको सुन्छु । फर्किन्छु त उसैलाई देख्छु । ऊ त पेस्तोल त्यसरी नै मतिर तेर्स्याउँदै आइरहेको छ ।

'के मलाई सम्झेर हाँसेको ?' ऊ कडा प्रश्न गर्छ ।

'होइन,' म लत्रिन्छु । ऊ नजिकै आइपुग्छ । अनि मेरो शिरमा फेरि त्यसरी नै पेस्तोल तेर्स्याउँछ । अहिले म धेरै काँप्छु । जीउ लगलगलग भइसकेको छ ।

'के तैँले आफूलाई बहादुर ठानेको ?' ऊ सोध्छ ।

'होइन,' म रुन्चे स्वरमा भन्छु ।

'अनि किन हाँसेको त ?'

'त्यस्सै ।'

'ल गोली थाप्, म तँलाई हान्छु, ल ऊता हेर् त,' ऊ निर्देशन दिन्छ । म उसले भनेझैँ गर्छु । थररर काँपिरहेको छु, जीउ झन्झन् हल्लिरहेको छ ।

'तँ धेरै नकाम् त,' ऊ भन्छ ।

'किन र ?' म नम्र भएर सोध्छु ।

'निसाना चुक्ला,' ऊ भन्छ ।

खितखिताउँछु, म काँप्दा उसको निसाना चुक्ला भनेको सुनेर ।

'फेरि किन हाँसिस् ?'

'अब कहिल्यै हाँस्न पाउन्नँ,' म भन्छु- 'त्यही भएर ।'

'ल हाँस्,' ऊ पेस्तोल खिचेर भन्छ- 'एक मिनेट तँलाई लास्ट चान्स !'

मेरो पालो उसलाई फेरि पेटमा लात्तो हान्छु । ऊ त्यसरी नै ढल्छ । म फेरि उसको हातबाट पेस्तोल खिच्छु । ऊ सुटुक्क दिन्छ । केही अगाडि बढेर अघि जसरी नै हावामा ताकेर पड्काउँछु । ऊ झस्केर उठ्छ । अनि मलाई हेर्न थाल्छ । म उसै गरी पेस्तोल हुर्‍याइदिन्छु । ऊ फेरि 'धन्यवाद' भनेर ओरालो लाग्छ । म फेरि हाँस्दै उकालो घटाउन थाल्छु । फर्केर हेर्छु, माया लाग्छ । ऊ लुरुलुरु हिँडिरहेको छ । त्यस्तो मान्छेले किन पेस्तोल बोक्नु ? किन धाक लगाउनु ? किन ताक्नु ? किन यता फर्की र उता फर्की भन्नु ? काँप्दैमा निसाना चुक्ला भनेर किन डराउनु ? अनि हाँस्न भनेर किन अर्कालाई मौका दिनु ? फेरि 'धन्यवाद' भनेर किन लुरुलुरु ओरालो लाग्नु ? म फेरि हाँसो थाम्न सक्दिनँ ।

'आज त तिमी बेस्करी नै हाँसेका छौ नि ?' लाहुर आइपुगेको छ ।

'त्यस्सै, त्यस्सै हुँडलिरहेको छु,' म भन्छु ।

'कहिलेकाहीँ हाँस्नु पनि पर्छ,' ऊ भन्छ ।

'रुनु त छँदै छ, हगि ?'

'संसारमा कति मान्छे होलान् र हाँसीहाँसी बाँच्ने !' ऊ भन्छ ।

'होलान् र ?'

'राजालाई त अकालमा मर्नुपर्‍यो,' ऊ भन्छ- 'रोएरै !'

'यतिका मान्छे मरिरहेका छन्, मारिरहेका छन् ।'

'म पनि हाँस्दै आएको थिएँ घर,' ऊ भन्छ- 'ई अहिले रुमाल भिजाउँदै हिँडेको छु ।'

'यस्तै रहेछ,' म के भन्न खोज्छु, दोबाटामा ऊ छुट्टिन्छ र भन्छ- 'रेलमा फेरि भेट होला, टीटीका आँखा छलेर रम पिउँला दाजुभाइ बसेर ।'

उसलाई अर्कै बाटो पर्खिरहेको छ । ह्वारर्र केही मान्छे आइपुग्छन् । तिनीहरू कताबाट आए मेसो पाउँदिनँ । तिनीहरू लाहुरेलाई घेर्छन् । लाहुरे बरा आत्तियो- 'के गर्नुभा' तपाईंहरूले ?'

'तपाईं इन्डिया फर्किन पाउनुहुन्न,' एक जनाले कड्केर भन्यो- 'हामीसँगै हिँड्नोस् । लाहुर अब यतै भो । गोलीगट्ठा भिरेर यतै हिँड्ने । आफ्नै देशका लागि मर्ने, मर्नुपरे ।'

लाहुरे फुत्किन खोजिरहेको थियो, सकेन । तिनीहरूमध्ये केहीले मलाई बाटो लाग्न हात हल्लाए । म नटेरी उभिएको थिएँ । फेरि हात हल्लाए । तिनीहरू लाहुरेलाई फकाइरहेका थिए- 'तपाईं युद्धमा अनुभवी भइसक्नुभएको छ । यहीँ तपाईं एकै चोटि कम्पनी हाँक्न सक्नुहुन्छ ।'

तिनीहरूको आवाज म मधुरो सुन्दै जान्छु । फेरि एक्लै परेको छु । फेरि आत्तिन्छु, कतै त्यही मान्छे आइपुग्ने हो कि ? उसलाई सम्झेर फेरि हाँस्न थाल्छु । अब त के आउला ? पेस्तोल बोक्छ, गोली छैन भन्दा झुक्किन्छ, कहिले हाँस्ने अवसर दिन्छ । त्यसलाई मैले जान्या छु । हिँड्छु, बाटाभरि फेरि खितखितखित गर्दै । अब धेरै उकालो छैन ।



# २१

बिहे गरेको भोलिपल्टै सिउँदो पुछेर हिँडेकी युवती थिई, मेरो अघिअघि उकालामा । उसका आँसु कुल्ची हिँडेको छु म । बायाँपट्टि हाँगाबाट फुत्रुक्क झरेको थियो एउटा चरो, पखेटा काट्टिएर । उसको एउटा पखेटा हाँगामै अल्झेको थियो । पखेटाको आवाजले बिथोलिँदै हिँडेको छु म । विधवाले फेरेको सास र पखेटा छटपटाइरहेको चराको आवाजमिश्रित उकालो ढाक्दै हुइँकिरहेको छ तुवाँलो, यो आखिरी उकालो छिचोल्न सकिरहेको छैन ।

काठमाण्डू धेरै टाढा छ तुवाँलाले ढाकेको यो पहाडबाट । म यत्तिकै फर्किन सक्दिनँ मेरो देशको राजधानी, रगतका छिटा लागेको कमिज टल्काउँदै । त्यहाँ मेरो सुरक्षा हुनेछैन । म धेरै प्रश्नहरूको घेरामा हुनेछु । म गाउँको रगत यतै पखाल्न चाहन्छु । धोएर सुकाईवरी ताजा आँखा लिएर बल्ल फर्किन चाहन्छु काठमाण्डू जहाँ नत्र म भिडन्तमा मारिएको खबर बनेर पुग्नेछु ।

विधवाको पछिपछि एउटा बूढा छन्, छोराको लास बुझ्न हिँडेका । उनको खुइखुइ आवाज यो पहाडको सुस्केरा बनेको छ । उनले लट्ठी टेकेका छन् तर घरीघरी लाग्छ, लट्ठीले उनलाई टेक्दै हिँड्न खोजेको छ । तैपनि उनी उक्लिरहेका छन् पहाड जहाँ मेरो तन्नेरी शरीर पनि लखतरान छ । छेउमा छ बुकीफूल । त्यसको बास आउँदैन । किनभने त्यो लतारिएको छ, टेकिएको छ र चुँडिएको छ । बुकीफूलको सानो झाडी मात्र छ जहाँ जनावरले गोब्र्याएको छ । बूढाको कुप्री परेको शरीरलाई चुनौती दिँदै पहाड झन्झन् अग्लिरहेको छ । अभिशाप बनिरहेको छ यही पहाड जहाँ उनले आजीवन पाखुरा खर्चेका छन् । उनलाई हतार छ, छोराको लास बुझ्न ।

'म एउटा छोरालाई गाडेर आ'को छु,' उनी बोलेको सुन्छु- 'अर्को छोराको लास खै कता छ, खोज्न हिँडेको छु ।' उनको हतारको सासमा कुनै आस बाँकी छैन । म त्यही हावा तान्दै बढिरहेको छु ।

मेरो पछिपछि छिन्, एउटी बूढीआमा । उनी आफ्नी छोरीको खोजीमा छिन् । उनकी हुर्केकी छोरी पहाडको पल्लोपट्टि खोलाकिनारमा डोकाभित्र मृत अवस्थामा छे । उनले चिन्नुपरेको छ आफ्नो रगत । त्यो रगत नआउने भैसकेको शरीरलाई उनले अनुहार हेर्दै चिन्नुपर्नेछ । त्यही अनुहार उनले दूध चुसाएको बाल्यकालभरि । अन्माएर पराईघर पठाइदिन बाँकी थियो । चुरा र पोते लगाएको हेर्नु थियो, सिउँदो भरिएको देख्न बाँकी थियो । अक्षर फुटाल्न त भ्याएकी थिई उसले तर राम्ररी आँखा देख्ने बनाउन सकिएन । बूढीमाउ उक्लिरहेकी छन् म हिँडेको पहाड, हाँप र झाँप गर्दै । उनको अनुहार पनि म हेर्न सक्दिनँ, आँसु रित्तिसकेका अथवा रसाउन नसकिरहेका अभागी पहरा । त्यस्तै एउटा पहरो छ परतिर जहाँ कुनै झरना खसेको सुनिँदैन । पछ्यौराले मुख छोपेकी छन् उनले तुवाँलो ढाकिएको पहाडमा ।

लोग्ने र छोराछोरी गुमाएर बेसहारा भइरहेका मानिससँगै म उकालामा छु । ओरालामा त म उनीहरूलाई भेट्नेछैन ।

काठमाण्डू फर्किनुअघि अब म सिद्धार्थलाई भेट्न चाहन्छु । कति समय भयो उसले मलाई तानेर ल्याएको ? केही दिन आफूसँगै हिँडाएर उसले मलाई छाड्यो । भनेको थियो- 'तपाईं स्वतन्त्र हिँड्दैमा सुरक्षित हुनुहोला ।'

'म सबै जना सुरक्षित बाँच्ने अधिकारका पक्षमा छु ।'

'तपाईं अस्थायी र कृत्रिम सुरक्षाको वकालत गर्दै हुनुहुन्छ,' उसले भनेको थियो- 'सुरक्षा किनेर पाइँदैन । देशले स्थायी सुरक्षाका लागि अब जनतासँग सम्झौता गर्नुपर्छ ।'

'देशलाई झुकाउन, वा सरकारलाई सम्झौतामा ल्याउन,' मैले भनेको थिएँ- 'फेरि पनि तिमी यिनै गाउँका जनता किन मार्दै छौ ?'

'कसले मार्दै छ, कहाँ को कसरी मारिँदै छन् ?' उसले छुट्टिने बेला भनेको थियो- 'तपाईं आफैँ चित्रकारका आँखाले हेर्दै जानुहोस् । तपाईंलाई शुभकामना छ । म त्यही चाहन्छु, तपाईं आफैँ मूल्याङ्कन गर्नुहोस् ।'

अहिले सिद्धार्थ कहाँ छ ? के गरिरहेछ ? सिङ्गो पहाडको सिउँदो पुछिएको ऊ के गरी बेहोर्दै छ ? यी आबाल-वनितालाई विधवा, टुहुरा र निःसन्तान बनाउने वातावरण ऊ के गरी टुलुटुलु हेरिरहेछ ? कि ऊ अर्को कतै सदरमुकाम हान्न खोज्दै छ ? के गर्दै छ ऊ ? म कसरी भेट्न सक्छु उसलाई ? कहाँ, कुन बाटो, कसरी, कहिले म भेट्न सक्छु ?

भन्ज्याङ पुगेर रोकिन्छु, रेडियोमा कान थापेर बसिरहेका गाउँले मलाई देखेर तर्सिन्छन् । मसँग पेस्तोल छैन, केही ड्रइङ कागज र ब्रस मात्र छन् । मसँग किन डराउनु ? म भन्छु– चित्रकार हुँ र भेट्न चाहन्छु सिद्धार्थलाई । कि ऊ यहाँ कतै भूमिगत बसेको छ ? एउटा तन्नेरी ठिङ्ग उभिन्छ र मलाई तान्दै अलि पर झाडीमा लैजान्छ । आकाश मात्र देखिन्छ, बादल लम्किरहेको छ उत्तरतिर ।

'के तपाईंको असली परिचय यही हो ?' ऊ सोध्छ, अविश्वासका तीखा आँखाले मलाई कोर्दै । अनि मेरो शरीर जाँच गर्छ । जुत्तासमेत खोल्न लगाउँछ । रुक्स्याक खोलेर पूरै जाँच-पडताल गर्छ, स्लिपिङ ब्यागसमेत फुकाल्न लगाउँछ । एउटा हेलिकप्टर फुत्त पहाड पर्तिर ओर्लिन्छ । ऊ मलाई टुसुक्क बसाउँछ, पाखुरा बलियोसँग समाउँदै । 'ल आउनोस् मेरो पछि,' ऊ मलाई झाडीबाहिर ल्याउँछ ।

म अर्को मान्छेको पछि लाग्छु । 'तपाईं मसँग केही पनि प्रश्न नगर्नोस्,' ऊ मलाई सतर्क गराउँछ ।

'कतै भिडन्त भैहाल्यो भने तपाईं आफ्नो सुरक्षा आफैँ गर्नुहोला,' ऊ मलाई सजग गराउँछ ।

काँडा पन्छाउँदै, हाँगा बङ्ग्याउँदै, कहीँ निहुरी परेर र कतै खाल्डो उफ्रेर ऊ मलाई एउटा अज्ञात दिशातर्फ डोऱ्याउँछ । एउटा एक्लो घरमा पुगेपछि ऊ पनि मलाई अर्कै मान्छेको जिम्मा लगाउँछ । नयाँ मान्छे मलाई राम्ररी नियाल्छ, हाँस्दैन । ऊ अघि लाग्छ, म उसको पछिपछि हिँड्नुपर्ने होला । सानो बाटो छ, सिसाकलमले खाली कागजमा कोरेजस्तो । अनि सानो भेलले सजिलै मेट्न सक्ने, इरेजर बनेर । बाटो हो कि होइन पनि ठम्याउन मुस्किल पर्ने एकधरे पाइलो राख्न मात्र पुग्ने ।

'तपाईंले अन्यथा व्यवहार गर्नुभयो भने म गोली चलाउन बाध्य हुनेछु' ऊ भन्छ ।

'मलाई ?'

'हजुर, तपाईंलाई,' ऊ पछाडि नफर्की सोझो उत्तर दिन्छ- 'सुस्तरी बोल्नोस् ।'

'किन र ?'

'रूखबिरुवाको पनि कान हुन्छ,' ऊ मलाई थप होसियार बनाउँछ ।

'मैले त देखेको छैन,' म भन्छु । सके मलाई त्यो चर्को अनुशासनले केटाकेटी बनाउँदै छ ।

'तपाईंलाई आफ्नो उमेरको ख्याल छैन ?' ऊ एउटा हाँगा पन्छाउँदै सोध्छ ।

'बत्तीस वर्ष लागेँ ।'

'मैले तपाईंको उमेर सोधेको होइन,' ऊ हिँड्दै भन्छ- 'सम्झाएको हुँ ।'

'सम्झिएँ ।'

'जाती भयो,' ऊ बोलेजस्तो लाग्छ ।

भीरमा पुगेर ऊ टक्क रोकिन्छ । म पनि रोकिन्छु । कतै हामफाल्नुपर्ने त होइन ? पारि पनि ठ्याम्मै उस्तै भीर छ र त्यसलाई आड दिने अजङ्गको पहाड । जङ्गलले चारैतिर ढाकेको छ र कताकति खोरिया र कताकति ससाना घर छन्, खरले छाएका । टाढा ढुङ्गाले छाएको एउटा घर छ तर आँखा खान्छ, त्यस परको स्कुलले । टिनले छाएको, पहाडको स्वरूप र प्रकाश नै बिगार्ने गरी । ऊ सिटी बजाउँछ र कान थाप्छ । पारिबाट पनि उस्तै आवाज आउँछ, उसको सिटीको प्रतिध्वनि पछ्याउँदै । उताबाट बजेको सिटीको प्रतिध्वनि सुनिँदैन ।

'के हामी हामफाल्नुपर्ने हो ?'

'मन छ ?' ऊ मलाई नहेरी सोध्छ ।

'हो कि भनेर सोधेको ।'

'सवाल नगर्नोस् !' ऊ निर्देशन दिन्छ । अरू केही भन्दैन । बायाँ तेर्सिन्छ र एउटा मुढो नाघेर हुत्तिन्छ । खासमा मैले उसलाई राम्ररी देख्नै पाएको छैन । पछाडिबाट त्यही तेइस-चौबीस वर्षको लाग्छ । उसलाई दोस्रोपल्ट भेटेँ भने पनि म चिन्न सक्नेछैन । उसको हुलिया नै ठम्याउन सकेको छैन । आवाज पनि प्रस्ट गर्दैन, फटाफट तर सुस्तरी बोल्छ, त्यो पनि गोली चलाएझैँ । फेरि अर्को हेलिकप्टर सुनिन्छ, तर देखिँदैन कता उडेको हो । गस्तीको गतिविधि बढेको हुन सक्छ ।

'तपाईंको हाड पनि चीलले नभेट्न सक्छ,' उसले मलाई धम्क्याउँदै भन्यो ।

अन्त हेरेको स्वाङ पार्दै उभिरहेकी एउटी केटी देखिन्छे, अलि पर्तिर । म उसको पिछा गर्दै त्यही केटीछेउ पुग्छु । अब मैले उसलाई पछ्याउनुपर्ने रहेछ । त्यो केटो गयो, कता गयो मैले चाल पाइनँ । केटीले त एकपल्ट पनि नहेरी मलाई

आफ्नो पछाडि लगाई । उनीहरू दुई जनाबीच केही कुरा भएको पनि मैले थाहा पाउन सकिनँ ।

'बहिनीको बिहा भयो ?' म उसलाई सोध्छु ।

'त्यसको केही अर्थ छ ?' ऊ मलाई नहेरी प्रतिप्रश्न गर्छे । अलिबेर ओरालो लाग्नुपर्ने रहेछ । ऊ छिटछिटो हिँडिरहेकी थिई मलाई सकस पार्ने गरी ।

'बहिनीलाई यो पाइन्ट सुहाएको छ,' म फेरि भन्छु । किनकिन मुख चिलाइरहेको छ ।

'तपाईंले गोली देख्नुभएको छैन जस्तो छ,' ऊ भन्छे, सुस्तरी ।

'किन र ?'

'देखेको भए मनमा यस्तो कुरा आउँथेन,' ऊ भन्छे । उसरी नै हिँडिरहेकी, उसरी नै बोलिरहेकी छ । यसो हेर्छु, उसले पाइन्टभित्र घुसारेको हतियार देख्छु । त्यसलाई पछ्यौराले सपक्क ढाकेकी छ । खोला तर्नुपर्ने रहेछ । एउटा बूढो मुढो तेस्याईएको थियो, उसले त टकटक कपडाको खेलाडी जुत्ता चम्काई ।

'फिल्ममा हिरोनी हुनुपर्ने मान्छे,' मेरो मुख त्यसैत्यसै छुच्चो हुन्छ ।

'तपाईंलाई मेरा साथीहरूले नबोल्नु भन्नुभएन ?' ऊ अगाडि बढ्दै मेरो झाँको झार्न खोज्छे ।

'सवाल नगर्नोस् भनिएको थियो ।'

'अनि किन त ?'

'के ?'

'मसँग किन बोल्दै हुनुहुन्छ ?' ऊ सोध्छे ।

'मन थाम्न सकिनँ,' म भन्छु- 'क्षमा पाऊँ ।'

'तपाईंको सुरक्षा मेरो हातमा छैन,' ऊ मलाई तर्साउन खोज्छे ।

'असुरक्षा त छैन होला ?'

'तपाईंमा भर पर्छ,' ऊ सतर्क गराउँछे ।

गहुँबारीको डिलडिलै एउटा थुम्को काटेर ऊ जङ्गल पस्छे । खोरिया फाँड्न उक्लेजस्तो वा कतै घाँस-दाउरा गर्न निस्केजस्तो । तर उसले पाइन्टभित्र आधुनिक हतियार लुकाएकी छ । मानवहत्या गर्ने हतियार उसको शरीरमा लिपिक्क टाँसिएको छ । सुन्दर फूललाई सर्पले बेरेजस्तो । सोझो गाउँले केटी हो तर ऊ आन्दोलनमा छे । ऊसँग परी पुऱ्याएर बोल्नुपर्छ । उसलाई पछ्याउन पनि सजिलो छैन । ऊ यस्तो हलुङ्गो हिँड्छे, मान्छे हो कि मृग, छुट्टयाउन गाऱ्हो हुन्छ । उसले

भुइँ टेकेकै देखिँदैन, तर फटाफट पाइला चाल्दै छे । मलाई कहाँ पुऱ्याउने होला ? म पछ्याइरहेको छु कि छैन भन्ने पनि उसलाई चासो छैन । म हिँडिरहेकामा ऊ विश्वस्त छे जस्तो छ । सास रोकेरै म लम्किन्छु उसलाई भेट्न । एउटा छेस्को फालेर ऊ सानो उकालो तत्काल काट्छे, मेरी बास्सै !

'तपाईंलाई पाउने केटो भाग्यमानी होला,' म भन्छु ।

ऊ टक्क अडिन्छे । पाइन्टभित्रको हतियार छाम्रेजस्तो गर्छे, बोल्दिन ।

'साँच्चै तपाईंको लभ त परेको छैन ?' म सोध्छु तर किन सोधेँ भन्ने सोचेर थरथरी काम्छु । प्याच्च निस्किहालेछ, छुच्चो मुख । उसले हत्तपत्त बन्दुक निकाली । मलाई हेरी ।

'क्षमा पाऊँ,' म भन्छु अनि लुरुलुरु उसको पछि लाग्छु, बोल्न नपाउँदा विपश्यना गरेजस्तो हुन्छ । विडम्बनै लाग्छ, गाउँका गाउँ मान्छेको रुवाबासी छ, कैयौं घरमा ताल्चा लागेको छ, कैयौंको बिचल्ली भएको छ, आँखा ओभाएका छैनन् कैयौंका, यता यो केटी मलाई बन्दुकले तर्साउन खोज्दै छे । के ठानेकी छ उसले ? उसले के देशभरि बिथोलिएको शान्तिको निकास सम्पन्नतामा दिने आँट र ल्याकत बोकेकी छ ? ऊसँग बन्दुक छ र मलाई अहिले त्यसैको इसारामा बन्दीजस्तो गरेर लगिरहेकी छ ।

'बोलीले पनि हुन्छ नि बहिनी,' म भन्छु- 'बन्दुक देखाउनुपर्छ र ?'

'बोली नलागेपछि गोली,' ऊ भन्छे ।

'के बोलीले नलागेर आज देशमा गोली चलाउनुपरेको हो ?'

'हामीसँग के विकल्प थियो ?' ऊ प्रतिप्रश्न गर्छे र फेरि सम्झाउँछे- 'म चाहन्छु, तपाईंलाई बोलीले नै लागोस् ।'

'गोली त मैले पनि देखेको छु,' म आफ्नो पाइन्टको प्वालतिर सङ्केत गर्दै भन्छु- 'म पनि बचेर आएको मान्छे हुँ ।'

'सधैं बचिँदैन,' ऊ झस्काउन खोज्छे ।

'एउटा कुरा भनूँ बहिनी ? नरिसाउनुहोला,' म भन्छु- 'तपाईंको हातमा बन्दुक सुहाउँदैन ।'

'के हाम्रो हातले चुरा मात्र बजाउनुपर्छ ?' ऊ उसरी नै सुस्तरी मलाई मुक्काभन्दा दऱ्हो प्रश्न हान्छे ।

'चुराले अरूलाई मार्दैन ।'

'बन्दुक आफ्नो सुरक्षाका लागि हो,' ऊ भन्छे- 'आज म बलियो छु त यसैले गर्दा ।'

'कति दिनसम्म ?'

'जति दिन बाँचिन्छ, निडर बाँचिन्छ ।'

'जीवनलाई किन छोटो बनाउनु, जान्दाजान्दै ?'

'औचित्यहीन लामो जीवन बोझ हो ।'

'बन्दुकको जीवन पनि औचित्यपूर्ण ?'

'चुरा बजाएर अर्काकी कमारी बन्नुभन्दा,' ऊ भन्छे ।

'साँच्चै बहिनी, फेरि नरिसाउनुहोला, है ?' म सोध्छु ।

ऊ रोकिन्न ।

तर मेरो चिलाएको मुख किन रोकिन्थ्यो ? सोधिहालेँ- 'के तपाईं कुमारी हुनुहुन्छ ?'

ऊ हत्तपत्त बन्दुक निकाल्छे र मलाई ताक्छे, के सम्झेर हो म खितखित हाँस्छु । ऊ ड्याम्म गोली चलाउँछे, हावामा । मेरो हाँसो उड्छ, बेलुन फुटेझैँ तत्काल सुक्छ । मेरो होस उड्छ र आत्मसमर्पणको शैलीमा दुवै हात उचाल्छु । आँखा चिम्लिन्छु ।

ह्वाररर्र केही मान्छे आइपुग्छन् । आँखामा पट्टी बाँधेर कसैले मलाई लैजान्छ । केहीबेर अझै उकालो लाग्नुपर्ने रहेछ । तिनीहरू फेरि मेरो जीउ खानतलासी गर्छन्, रुक्स्याक खोतलखातल पार्छन् ।

एउटा सानो रमणीय उपत्यकाको छेउमा मेरा आँखा खोलिएका छन् । म छक्क पर्छु, त्यस केटीको त मुखै बाँधिएको छ । उसले विराम गरी भनेर साथीहरूले सजाय दिएका होलान् भन्ठान्छु । अलि पर सुन्तलाबारीमा एउटा मान्छे लम्किरहेको देख्छु । लौ, सिद्धार्थ त्यहीँ रहेछ । उसका बडीगार्डहरू भने देखिनँ । कतै होलान् ।

'ऊ सिद्धार्थ !' म खुसीले उचालिँदै आफूलाई छोपेर ल्याउनेहरूलाई देखाउँछु । केटी उफ्रिन्छे, केही बोल्न खोजेजस्तो गर्छे तर उसको मुखको पट्टी खोलिएको छैन । बिचरीलाई किन अझै बन्द गरिरहेको होला भन्ने सोच्छु तर बोल्न सक्दिनँ । पहिला सिद्धार्थलाई भेट्न चाहन्छु ।

'ए सिद्धार्थ !' भनेर के शब्द निकाल्दै थिएँ, ती मानिसले मलाई अचानक हप्काए- 'चुप लाग् !'

तिनीहरूले हतियार निकाले ।

सुन्तला टिप्न लागिरहेको सिद्धार्थले हामीलाई देख्यो। मैले हात हल्लाएँ। तर अचम्म, ऊ त एक्कासि भाग्न थाल्यो। मनेरि उभिएका केटाहरू हतियार लिएर सिद्धार्थतिर दौडिए। मैले बुझिनँ, के भएको हो। म उभिरहेँ, मुख बन्द गरिएकी केटीछेउ।

तिनीहरू दौडिरहेका थिए। उता सिद्धार्थ हातको सुन्तला फालेर भागिरहेको थियो। केटीले मलाई लात्तो हानी। अनि केही हाउभाउ गर्न खोजी। उसको हातको रस्सी खोलिदिएँ, ऊ आफैँले मुख बेर्ने रुमाल फुकाई। उता हेरेँ, सिद्धार्थ त ती केटाहरूबाट सुन्तलाबोटछेउ पूरै घेरियो।

ड्याम, ड्याम, ड्याम गोली चल्यो। सिद्धार्थ ढल्यो।

म चित परेँ। यता केटी मुख छोपेर भुइँमा बसी। उसको हतियार तिनीहरूले झिकिसकेका रहेछन्। मैले हरेस खाएँ। एउटा हेलिकप्टर कताकताबाट बत्तिँदै आइपुग्यो। उत्तिन्खेरै पखेटा ननिभाईकन रोकियो। ती केटाहरू सबै त्यसमा चढे। हेलिकप्टरको बतासले म पनि उभिरहन सकिनँ। हेलिकप्टर डाँडा कटेपछि केटीतिर हेरेँ, ऊ आफलविफल हुँदै लडीबुडी गरिरहेकी थिई, माटामै। अनि सिद्धार्थतिर दौडिएँ।

आखिरी सास बाँकी थियो सिद्धार्थको। रगतैरगत लतपतिएको उसले मेरो हात अलक्क समात्यो, केही भन्न मुख बायो।

'सरी सिद्धार्थ,' मैले रसिला आँखाले भनेँ- 'मेरो निहुँमा तिम्रो आज यो अवस्था भयो। मलाई थाहा थिएन, तिनीहरू को हुन्।'

उसले मुख मात्र चलायो। मैले बुझिनँ। उसका आँखा देखेर मेरो मन भाँडियो। कस्तो निर्मल, सम्मोहनकारी, आशाको रस भरिएका आँखा ! पिलपिल-पिलपिल गरिरहे, निभ्ने बेलाको दियोझैँ। रगत पोतिएको मुख ऊ चलाइरह्यो तर आँखा सद्दे, तन्दुरुस्त थिए। चलबलाइरहे। एकटक आखिरी दृष्टि दिए मलाई। मेरो भक्कानो छुट्यो। ऊ निभ्यो।

तोरीबारी लछ्रप्प पार्दै ऊ लम्पसार परेको छ र अब त आँखा पनि बाँकी रहेनन्। म उसका परेला छोपिदिन्छु। सुन्तलाको बोटमुनि म उसको मृत शरीरछेउ बसिरहेको छु। मेरो आँसु बरररर उसैमाथि पर्छ। म आज मेरै साथीको रगतले रँगिएको छु। ऊछेउ बसिरहन्छु।



# २२

बमले ध्वस्त पारिएको झोलुङ्गे पुल रहेन । कसरी पारि जाने ? ठिङ्ग उभिन्छु, यताउता कोही छैन । तल नदीकिनारमा एउटा डुङ्गा छ, सीधा पारि । त्यसमा कोही छैन, तैपनि यात्रु देखेर आइपुग्लान् । तल झर्छु, म सिद्धार्थको रगतको टाटा बोकेर हिँडिरहेको छु । उसको रगत लतपतिएको हात भर्खर छोएजस्तो लाग्छ । उसका पिलपिल आँखाले अझै हेरिरहेजस्तो लाग्छ । ऊ गइसक्यो तर विश्वास लाग्दैन । जति ओरालो झर्छु, उति ऊ मनजिक भइरहेजस्तो लाग्छ । किनारको बालुवा टेक्दा भास्सिएजस्तो हुन्छ । जुत्ता धस्सिएको छ ।

हात धुन्छु, कमिज र पाइन्टमा लागेका टाटा पखाल्न खोज्छु । म टोलाउँछु, बेग्लै छ नदीको पानी र आइरहेको छैन कोही डुङ्गा लिएर ।

'हेलो !' म चर्किन्छु ।

नदीको स्याँठ मात्र सुन्छु । चारैतिर हेर्छु, कतै केही निधो छैन । कोही पनि कतैबाट झरिरहेको छैन । 'ओहो !' म चिच्च्याउँछु । कोही आउँदैन । त्यो डुङ्गा उसरी नै निर्मोही तालले किनारमा उत्तानो परिरहेछ ।

'हेलो !' म फेरि बहुलाउँछु । स्याँठ मात्र हुइँकिन्छ ।

म यो नदीकिनारमा किन उभिरहनुपरेको छ ? कहाँकहाँबाट म आज यो अवस्थामा आइपुगेको छु ! सिद्धार्थले किन मलाई गाउँ ल्यायो ? फेरि उसले किन मलाई यही भेग ल्यायो जहाँ म जन्मेको थिएँ, हुर्केको थिएँ, मीत लाएको थिएँ, यही वनपाखा, भीरपहरामा ?

'हेलो-हेलो !' म फेरि बतासिन्छु ।

'होऽहोऽ ऊऽ,' फेरि कराउँछु । बालुवामा झन्झन् धस्सिँदै जान्छु ।

सिटी हाल्छु, तैपनि कोही आउँदैन ।

'ओहो !' फेरि चिच्च्याउँछु । पानीमा उत्तिन्खेरै त्यो बिलाउँछ । पारि पहरामा प्रतिध्वनि मात्र गुन्जिन्छ । साँझ पर्न लागेको छ ।

डुङ्गावाल आइपुग्छन् । म उनलाई हातको पार लगाउँछु । उनी सकी-नसकी डुङ्गालाई पानीमा धकेल्छन् । मेरो फुर्ती बढ्छ, अब म छिट्टै काठमाण्डू पुग्न पाउनेछु । सिद्धार्थ मारिएको छ जसले मलाई यता ल्याएको थियो । ऊ छल गरेर मारिएको छ । अर्कै वेश गरेर आएकाहरूबाट । माया लाग्छ किनभने मैले 'ऊ सिद्धार्थ !' भनेर देखाएँ र ती व्यक्तिहरूले घेरामा पारे । ऊ सुन्तला टिप्न गइरहेको थियो र ऊसँग त्यति बेला पेस्तोल पनि थिएन । उसका अङ्गरक्षकहरू पनि मैले देख्न पाइनँ । एकदमै एक्ल्याइएको थियो ऊ जहाँ ब्वाँसाहरूले मृगलाई झैँ घेरेर तत्काल समाप्त गरिदिए । म यसो सोच्छु– के ऊ मेरै कारण मारियो ? म त्यसरी नबहुलाएको भए त्यस केटीले हावामा गोली चलाउने थिइन र ती केटाहरू आइपुग्ने थिएनन् । अनि मैले 'ऊ सिद्धार्थ !' नभनेको भए तिनीहरूले सके चिन्ने पनि थिएनन् । के म उसको हत्याको मतियार भएँ ? हत्यारा भएँ ?

'किन टोलाउनुभयो ?' डुङ्गावाल वारि आइपुगेका रहेछन्, बोलाउँदै छन्- 'आउनोस् !'

डुङ्गासँगै स्मृतिले मलाई खियाइरहेको छ । के मैले त्यसरी भेट्न नखोजेको भए ऊ मारिने थिएन ? मलाई त्यस्तो लाग्दैन । उसले भनेकै थियो- 'म खुकुरीको धारमा हिँडेको छु ।' हो, उसले त्यस्तै जीवन रोजेको थियो । उसले डरभर सम्पूर्णतः परित्याग गरेको थियो । आफू पनि होमिएको थियो र अरूलाई पनि त्यसरी नै होमेको थियो । म उसलाई भेट्न नगएको भए पनि ऊ मारिने थियो । हेलिकप्टर उडिरहेकै थियो । त्यतिखेरै नमारिएला तर अकाल मृत्यु त उसले रोजेकै थियो । ऊ डराएको थिएन । तर ओह, म फेरि सम्झिन्छु त्यो क्षण, ऊ मृगझैँ भाग्न खोज्दै थियो, तत्काल घेराबन्दीमा पऱ्यो ! उसको पेट र कन्चटमा अनगिन्ती गोली लागेको थियो । ऊ भुक्लुक्कै भयो । मलाई केही भन्न चाहन्थ्यो, केही सुनाउन चाहन्थ्यो तर भ्याएन । एउटै गोली मात्र कम परेको भए पनि कम्तीमा एकै शब्द उसले झार्न पाउने थियो । उसको रगतले अझै मेरो हात तातो भइरहेको छ । पानी गहिरो छ, यतातिर र डुङ्गावाल एकोहोरो पूर्व फर्केर खियाइरहेको छ ।

मैले ऊसँग यात्रा गर्दा आफ्नै भूमिलाई नयाँ आँखाबाट देख्न पाएँ । ऊ आफू त खुकुरीको धारमा हिँडेकै थियो, सँगसँगै यस पहाडलाई पूरै खुकुरीमा

परिणत गरिदिएको थियो। कैयौँ तन्नेरी उसको बहकाउमा परे, भूलभुलैयामै तिनले हतियार समाते। हतियारको माद लागेपछि त ओहो, यो पहाड पूरै बिथोलिएको छ !

'माथि एउटा नेता मारियो भन्छन्,' डुङ्गावालले मलाई पानी छ्याप्दै भने- 'तपाईंले क्यै सुन्नुभो ?'

म भन्न सक्दिनँ। म बोल्न सक्दिनँ। म प्रकट हुन सक्दिनँ। ऊ मेरो कति आत्मीय थियो तर उसैको रगत लिएर आएको छु म, कसरी देखाउन सक्छु ? के कुनै लेखक, उपन्यासकार, कवि, चित्रकार, सङ्गीतकारले यस्तो परिस्थिति सामना गरेको छ ? ऊ भन्थ्यो- 'मैले यो देशको समयलाई थोरै भए पनि नयाँ सङ्गीत दिने आन्दोलनलाई साथ दिएको छु।' ऊ अहिले खरानी बनेको छ, खरानी बनेको छैन, कतै गाडिएको छ, केही समयमा एउटा अस्थिपञ्जर बन्नेछ ऊ। तर उसको जीवन, आस र प्राण मेरो अनुभवमा सङ्ग्रह भएको छ। समयको स्वाभाविक प्रवाहप्रति निराश बनेपछिको व्यवहारबाट ऊ आफैँ बिदा भएको छ, म उसको आखिरी नाडी छामेर हिँडेको छु।

पानीमा सुकेका पात तैरिँदै बगिरहेका छन्। सुकेको पातको विगत एउटा जीवन हो। रूख अझै उभिरहेको छ कतै माथि डाँडामा वा खोल्सामा, जहाँ नयाँ ऋतुले अर्कै पातहरूलाई जन्म दिनेछ। भेल काट्न डुङ्गावाल अझै जोड लगाइरहेका छन्।

'आफ्नै देशमा, आफ्नै आँखाअगाडि युद्ध देख्नुपरिरै'छ,' डुङ्गावाल भन्दै छन्- 'र यो धेरै कठिन छ, आफ्नैहरूको मरण देख्नु, हगि भाइ ?'

उनी मलाई झस्काउँछन्। म आफैँ घटनाको नजिक, घटनालाई छुँदै हिँडेको मान्छे। आफैँले भोगेर भाग्दै फर्केको मान्छे। उनी मलाई तिनै दृश्यमा रिँगाइरहेका छन्।

सुन्तला टिपिरहेकी केटी, मितिनी भेट्न केरा लिएर हिँडिरहेकी बालिका, छोरा गुमाएर उदास भइरहेका बूढाबूढी, रातभरि आक्रमणको खैलाबैलाले रन्थनिएका लजकी साहुनी र उनको सानो छोरो, बम पड्केको देख्ने छिमेकी, स्कुल जान छाडेका बच्चाबच्ची, बिस्तारै हिँड्नोस् भनेर अर्ती दिने गाउँले, दाउराको भारीझैँ भित्तामा अडेसिएका घाइते प्रहरी। म रिँगिरहेको छु, म आफैँ अलमलिरहेको छु। कतै म एउटा सपनाको यात्राबाट त फर्किरहेको छैन ?

मैले कसरी आफ्नै रूपधारण गरेर पेस्तोल ताक्दै आएको र मेरै नाम बताएर आक्रमण गर्न खोज्नेको छाया देखें ? म कति भयभीत थिएँ ! आफ्नै सोचाइले मलाई डसेको थियो पूरा उकालोभरि । जहाँ पनि म देख्थेँ विधवा, टुहुरा र निःसन्तान बनाइएका मानिसको आकृति । म भित्रभित्रै कति सडिरहेको थिएँ, गलिरहेको थिएँ, सकल अनुहार देख्दा पनि आफ्नै त्रास पोतेर म विधवाको रूप आफ्नो अगाडि देख्थेँ । म साँच्चै सन्तुलन गुमाएर खितखित गर्दै हिँडिरहेको थिएँ। सिद्धार्थ भेट्न लैजाने त्यस केटीसँग मैले त्यस्तो कुराकानी गर्नु हुन्थ्यो ? म हदै असन्तुलित भइसकेको थिएँ, म ठाउँमा थिइनँ । अहँ, फिटिक्कै थिइनँ । हावा फुस्किरहेको थियो । सिद्धार्थको रगतको तातोले मलाई ठेगानमा फर्काएको छ, यसो सम्झिन्छु, कस्तो भीषण क्षेत्र म पार गरिरहेको रहेछु !

'नबोलूँ, तर्कना आइरहन्छ,' डुङ्गावाल भनिरहेका छन्- 'बोलूँ, बेग्लै अर्थ लाग्ला !'

'हजुर ?' म सोध्छु ।

'तपाईं को हो मलाई भेउ छैन,' उनी भन्दै छन्- 'एउटा कुरा गरूँ, तपाईं बन्दुक निकाल्न सक्नुहुन्छ, अर्को कुरा गरूँ, तैपनि मलाई बन्दुक तेर्स्याउन सक्नुहुन्छ ।'

उनी कस्तोविधि चिन्तित छन् ! मलाई नदी तारिरहेका छन् तर मैबाट आफूलाई असुरक्षित ठानिरहेका छन् । मेरै सुरक्षा दिइरहेका छन् तर मैबाट आफ्नो ज्यानको खतरा देखिरहेका छन् । मैले परिचय हराएको छु । म बाहिर एउटा देखिन्छु तर मभित्रको व्यक्तिबारे अरूमा भ्रम फैलिएको छ । आशङ्का बढेको छ । अनुहार मेरो पेटबोली हुन छाडेको छ । तैपनि उनी कस्तो प्रेमपूर्वक मलाई सुरक्षित गन्तव्यको प्रत्याभूति दिइरहेका छन् !

'यै डुङ्गाले मेरो पेट पालेको छ, जहान परिवारको गुजारा चला'को छ,' उनी भन्दै छन्- 'यसैले मेरो ज्यान पनि लेलाजस्तो छ ।'

'हजुर ?' मैले नबुझी सोधेँ ।

'फलानालाई किन तारिस् ? किन रिपोट दिइनस् ? किन हाम्लाई खबर गरिनस् ? भन्ने जवाफ दिनुपर्छ भाइ,' उनी रहस्य खोल्छन् ।

म टोलाउँछु, लोलाइबस्छु । पानी काटिरहेका छन् उनी । त्यो पानी एकै खेप काटिन्छ तर तत्काल मिलिहाल्छ, गाँसिइहाल्छ । उनी छुट्ट्याएजस्तो गर्छन् तर कहाँ छुट्टिन्छ र पानी ? उनी पानीलाई हानिरहन्छन् तर पानीको अविरल र अविच्छिन्न गति उनी कसै गरे पनि बिथोल्न सक्दैनन् ।

सिद्धार्थले यो भेगमा बिथोलेको थियो पानी, ऊ भन्थ्यो- 'हामी तरङ्ग नयाँ सिर्जना गर्दै छौं ।' ऊ आफैं एउटा भुल्का बनेर बिलाएको छ । त्यसै गरी ऊ प्रवेश गरेको थियो मेरो जीवनमा । मलाई तरङ्गित पारेर ऊ आफूचाहिँ सानो भुमरीमा हराएको छ । एउटा चरण पार भएको छ, यो नदीसँगै । म किनारमा उत्रिसकेको छु र सोच्दै छु– मैले सिद्धार्थलाई नदीपारि नै त्यागेको छु । उसको सम्झना मात्र मसँग यात्रारत छ । उसको झझल्को मात्र मसँगै ठडिरहेको छ । तर मैले उसलाई नदीपारि नै बिसाएको छु ।

म नौलो परिवेशबाट गुज्रेर काठमाण्डू फर्किंदै छु जहाँ मलाई सुनाउनु छ– मेरो आफ्नै साथी एउटा विद्रोही नेता बनेर मारिएको छ । ऊ पानीझैं कल्पना बन्न पुगेको छ । त्यसको आकार र आवाज म समाजसमक्ष प्रस्तुत गर्न सक्दिनँ । के म यो पानीको स्वरूप बोकेर लैजान सक्छु ? सपनाजस्तो महिनौं लामो यात्रा समापन भएको विन्दुमा उभिएर म नयाँ समयतर्फ प्रस्थान गर्न खोज्दै छु ।

अब हिँड्नु छ काठमाण्डूका लागि । तर त्यसअघि मैले डुङ्गावालको चित्त बुझाउनुपर्नेछ । उनले सङ्केत गरेको ठाउँमा मैले आफ्नो परिचय दिनुपर्नेछ । मलाई थाहा छैन त्यहाँ कसको, कुन पक्षको चौकी छ ? मैले आफूलाई चिनाइनँ भने डुङ्गावाललाई दोष लाग्नेछ । म आफ्नो परिचय त दिनेछु तर सिद्धार्थसँगको सम्बन्ध म अहिले यहाँ यति बेला खुलासा गर्नेछैन ।

किनभने म दुवैतर्फबाट असुरक्षित छु ।



# २३

नदी फराक बन्दै गएको आखिरी उपत्यका पुगेको छु। सिमलको रूखमा अडेसिएर आकाश हेर्छु। इन्द्रधनुष टाढा कतै टाँगिएको छ। सिमसिम वर्षा भइरहेको होला आकाशको कुनै कुनातिर। बादल छिचोल्न नसक्ने किरणले आकाशको एउटा टालोलाई कालो बनाएको छ। पश्चिमपट्टि क्षितिजमा भने सुन्तला रङ्ग बसेको छ। पानी बोकेका पातला बादलका झुन्ड हुनुपर्छ यात्रारत। जात्रातिर लम्केकी कुनै महिलाजस्तो आकृति आकाशमा कुँदिएको छ। कालो धोतीवरिपरि रातो रङ्ग बसेकाले हाकुपटासीको चित्र बनेको छ। प्रकृतिजति महान् कलाकार कोही छैन। हामी उनकै छायामा यिनै जीवनचक्रको नियति र नियमितता खिचिबस्छौँ। आकाश व्यस्त छ। त्यो आकृति अस्थिर हो जसरी म यहाँ मुन्तिर विचित्रको समय पार गरिरहेको छु। काँसको झाडी कति सेताम्मे हो ! बगरले जुत्ता पोल्न थाले पनि नदीको नीलो प्रवाह र सिरसिर बतासले कुतकुत्याइरहेको छ।

'सुनको दिन एक उदाउँछ रे ...' गुनगुनाउँदै छु। लामो अँगालो हाल्न मन लाग्ने फराकिलो बाटो एक्लै तय गर्दा मनमा उठ्ने नानाभाँति विचारले चञ्चल बनाइरहेको छ। सिमल फुल्ने याम कुन हो ? सेतो काँसझाडीतिरबाट चरो फुत्त उडेको छ। बस स्टेसन पुग्न पूरा एक दिन हिँडुनपर्नेछ मैले नदीसँगै बगर हुँदै। टाढा पुग्नुपर्नेछ एक्लै। एक्लो यात्राका सहयात्री छन् कुतकुत्याउने सिरसिरे बतास, नीलो रङ्गको अविरल यात्राका कताकति सेता छालहरूको आवाज, बगरमाथि आफ्नै जुत्ताको घर्षण र मनको कन्तरासम्म पसेको डरको चिसो। बेलाबेला त्यो चिसो स्याँठ बनेर घोचिरहन्छ सिन्कोझैँ। अगाडि एउटा मूर्ति देख्छु, ए मूर्ति होइन, त्यो एउटा रूखको ठुटो हो। सकल आकार बोकेको ठुटो के भन्ठानीकन मलाई अत्याउन उभिएको छ ? मछेउ भर्खरै एउटा ह्वेलमाछाझैँ

सेतो छाल उफ्रेर नदीमा बजारिएको छ । लौ है म हिँड्दै छु ए ह्वेलमाछारूपी छाल ! म यसरी एकोहोरो हिँड्दै छु मलाई धर्तीमा आश्वस्त पार्न तिमी बेलाबेला आइरहू है भन्दै छु म आफैँलाई ।

मपछाडि कसैले खोकेको छ । एक जना तन्नेरी देखेँ, ढाडमा पोको बोकेर हिँडिरहेको । म अलमलिएँ । उभिएजस्तो भयो । उसले आँखामा सीधै हेर्‍यो । केही भनेन । मेरा ओठ पनि खुलेनन् । ऊ अगाडि बढ्यो । काँसभ्काडीको सेतो पछ्यौरा हावामा फरफराइरहेको थियो । कति रमणीय छ यो काँसे उपत्यका ! काँसले सेतै रङ्ग दिएको यो नदीकिनार ! मैले उसलाई पछ्याएँ । उसको गति तीव्र छ । पोकामा के होला ? चामल वा हतियार ? वा दुवै ?

'केही भन्नुभएको हो ?' उसले टक्क अडिँदै मतिर फर्केर सोध्यो ।

'होइन त,' मैले भनेँ । ऊ अघि बढ्यो ।

म फेरि 'सुनको दिन एक उदाउँछ रे ...' गुनगुनाउन थालेँ । मपछाडि फेरि अर्को खोकी आयो । अर्को उस्तै तन्नेरी देखेँ, ऊ पनि ढाडमा पोको बोकेर हिँडिरहेको छ । म फेरि अलमलिएँ । उभिएजस्तो भयो । उसले पनि आँखामा सीधै हेर्‍यो । केही भनेन । अगाडि बढ्यो । मैले पछ्याएँ । उसको पनि गति तीव्र छ । पोकामा के होला ? चामल वा हतियार ? वा दुवै ? उसले भने 'केही भन्नुभएको हो ?' भनेर सोधेन । अघि बढिरह्यो । मैले केही भन्नुपरेन । त्यो अगाडिको मूर्तिरूपी ठुटाछेउबाट ऊ पार भएपछि म फेरि गुनगुनाउन थालेँ ।

'तपाईंको परिचय ?' चियापसल पुगेपछि कसैले प्रश्न गर्‍यो ।

'मेरो ?' मैले सोधेँ ।

'हजुर,' त्यही अघि मैले बाटामा देखेका दुई पोकाधारी तन्नेरीमध्येको एकले सोधेको रहेछ । तिनीहरू मैले रुक्स्याक बिसाएको मेचसामु अर्को मेचमा बसिरहेका रहेछन् । मेच ताजा हो जस्तो छ किनभने सल्लाको गन्ध आउँदै छ । स्लिपिङ ब्याग बाँधेको मिलेनछ । रुक्स्याकलाई ढलपल पारिरहेको ब्यागलाई सन्तुलित बनाएँ । तिनीहरू मलाई हेरिबसे ।

'म एक यात्री हुँ,' मैले भनेँ- 'अहिलेलाई यात्री नै हुँ भनूँ ।'

'कुरो प्रस्ट गर्नुस् न,' अर्कोचाहिँले कर गर्‍यो ।

'गाउँ घुम्न आएको,' मैले भनेँ- 'काठमाण्डू फर्किंदै छु ।'

'के गर्नुहुन्छ ?'

'चित्र बनाउँछु ।'

'कस्तो ?'

'कस्तो भन्ने खै ?' मैले भनें- 'आधुनिक कला हो मैले गर्ने ।'

'यहाँ बनाएर देखाउन सक्नुहुन्छ ?' सुरुमा मेरो सोधीखोजी गर्नेले सोध्यो ।

'थाकेको छु ।'

'पहिला चिया लिनोस् न त !'

'हवस्,' म आज्ञाकारी बनें । बिस्कुट चोबलेर खाएको, ओहो कति दिनको भोको रहेछु, त्यतिसारो स्वाद त अहिलेसम्म केहीमा पनि बसेको थिएन !

'बिस्कुट थप्नुहुन्छ ?' अर्कोचाहिँले सोध्यो ।

मैले केही भन्न नभ्याउँदै उनीहरूले आँखा एकै चोटि एकातिर केन्द्रित गरे । म पनि त्यतै दृष्टि दिन बाध्य हुने गरी । अरू पोकाधारी तन्नेरीहरू आउँदै रहेछन् । तीन-चार जना केटी पनि मिसिएका थिए । ती ह्वारह्वारी आए । नबोलीकन मेचहरूतिर बसे । मैले अर्को पुरिया बिस्कुट सक्न अर्को खेप चिया पनि मगाएँ । तिनीहरू आपसमा कोही बोलिरहेका थिएनन् ।

'अब बनाउन सक्नुहुन्छ ?' उसले सोध्यो ।

मैले चियापसलकी साहुनीतिर हेरें । तिनी मलाई हेरिरहेकी रहिछन् । पोकाधारीमध्येका तीन जना पसलभित्र पसेका थिए । उनी तिनीहरूसँग व्यस्त हुन थालिन्, केमा ? मलाई थाहा छैन । गुन्द्रुङगुन्द्रुङ स्वर आयो । निको चाल लागेन । दुई-तीन बच्चाबच्ची खेल्दै आए । मैले रुक्स्याकबाट स्केच सामग्री झिकेको तिनले हेरे । ड्रइङ पेपर र कलर पेनहरू निकालेको थिएँ । एउटा सानो बच्चाले मेरो पेन छुन खोज्यो । अरू पनि झुम्मिए । टेबलमाथि म घोप्तिएँ ।

'के बनाऊँ ?'

पोकाधारीहरू वाल्ल परे । केहीले मुखामुख गरे । मैले तिनै बच्चामध्येको सबैभन्दा सानोचाहिँको स्केच गर्ने विचार गरें ।

खारखुर-खुरखार पुतलीझैँ पेन्सिल चलाउन थालें । बच्चाबच्ची रमाए । यात्रामा हिँड्दा बनाउने आकृति म सङ्ग्रह गर्ने गर्छु जसले पछि ग्यालरी वा स्टुडियोमा बस्दा आकार र मनोभाव सम्झना दिलाउँछ, रङ्गहरू सम्झाउँछ । एक हिसाबले यो स्केच डायरीजस्तो हो, पछि क्यानभासमा उतार्न यो नोट हुनेछ । यी सम्झना-रेखा म गुज्रेका समय-चाप हुन्छन् ।

बालक हाँस्न थाल्यो जसको खाका म निकाल्दै थिएँ । उसले आफ्नो चित्र बन्दै गरेको बुझेको होइन, पेन्सिल नाचेको देखेर हुनुपर्छ । अरू दुई जना पनि खितखित गर्न थाले । पोकाधारीहरू टेबलको चारैतिर उभिएर उत्सुक आँखा कागजमा सोहोरिरहेका थिए ।

जुन बालकको चित्र बनेको थियो उसको गाला रातो भयो किनभने अरूले उसलाई जिस्क्याउन थाले । ऊ त्यहाँबाट भाग्यो । पोकाधारीहरूले आँखा हटाएनन् ।

'अब यसो गरौँ न,' एक जना बुज्रुकले टेबलमा पेस्तोल राख्दै भन्यो- 'अध्यक्ष कमरेडको बनाउन सक्नुहुन्छ ?'

'मैले देखेकै छैन ।'

'के ?'

'तपाईंहरूको अध्यक्ष कमरेडलाई ।'

'फोटो देख्नुभएको छैन ?'

'आक्कलझुक्कल मात्रै,' मैले भनेँ- 'जुँगा याद छ, कपाल पनि अलिअलि याद छ, अरू छैन ।'

'केके चाहिन्छ ?'

'कम्तीमा एकपटक देख्न पाए,' मैले भनेँ ।

तिनीहरू मुखामुख गरे । एउटाले कमिजको खल्तीबाट पत्रिका निकाल्यो र 'अध्यक्ष कमरेड' देखायो ।

'यो धमिलो छ,' मैले भनेँ ।

'तपाईंको चित्र सफा त हुँदैन नि ।'

'हो, मैले गर्ने स्केच योभन्दा धमिलो हुन्छ,' मैले भनेँ- 'तर आकृति निकाल्नुपर्ने व्यक्तिको फोटो अलि क्लियर हुनुपर्छ ।'

'जस्तो सक्नुहुन्छ,' अर्को चैँले जोड गर्‍यो- 'बनाउनोस् ।'

'मैले बिगारेँ भने ?'

'केही हुँदैन ।'

'मलाई डर छ,' मैले भनेँ- 'अनुहार बिग्रो भने तपाईंहरूले मलाई छोड्नुहुनेछैन ।'

तिनीहरूले फेरि मुखामुख गरे । मैले त्यो पत्रिका फर्काएँ । बालकको स्केच भने केहीबेरमा उसकी आमा लिन आइपुगिन् । केही पर रहेछ उनको घर । 'खोइ बाबू,' उनी भन्दै आइन्- 'मेरो छोराको फुटो उतारेको छ अरे ।'

'फोटो होइन आमै,' एक पोकाधारीले भन्यो- 'चित्र हो ।'

आमाको धोतीको फेर समात्दै उही साने पनि आइपुगेको रहेछ । औँला मुखमा घुसार्दै गाला उत्तिकै रातो पार्दै मलाई हेर्दै थियो । मैले त्यो कागज उनलाई दिएँ । तिनले हेरिन् र मस्त हाँसिन् । 'नाक किन बाङ्गिएको यसको ?' उनले सोधिन् । म हाँसिबसेँ, पछि भनेँ- 'दुरुस्तै बनाएको होइन नि त !'

'दुरुस्तै त छ,' उनले भनिन्- 'नाक मात्रै अलि टेढो रै'छ ।'

उनी गएपछि अर्का एक गाउँले आइपुगे । उनको औँला समात्दै अघिका बालकहरूमध्येको अर्को आइरहेको रहेछ । ती गाउँलेले भने- 'लौ न, यसको पनि फुटो उतार्दिनुपऱ्यो ।'

मैले तिनको छोरालाई हेरेँ । उनले थपे- 'मरिहत्ते गर्दै छ ।'

मैले फेरि खारखुर-खुरखार पारेँ । उसलाई अगाडि राखेर पुलुकपुलुक हेर्दै कोरेको केहीबेरमै अर्की बच्चीले पनि आफ्नो अभिभावक ल्याएकी थिई । उसलाई पनि किन नबनाइदिने ? उसकी फुपू दिदी हुनुहुँदोरहेछ, सोध्नुभयो- 'कति रुपैयाँ दिनुपर्ला, बाबू ?'

'यो तपाईंकी भदैलाई उपहार हो,' मैले भनेँ र ती 'भदै' को गाला समात्दै भनेँ- 'पढ्न जान्छ्यौ भने मात्रै म यो चित्र तिमीलाई दिन्छु, हुन्छ ?'

'हुन्थ,' उसले भनी । चित्र लिएपछि दौडिँदै गई । उसकी फुपूले पनि धन्यवाद भनिनन् तर अनुहारले कृतज्ञता जनाइसकेको थियो ।

'तपाईं काठमाण्डूमा यसरी स्केच गरेको कति रुपैयाँ लिनुहुन्छ ?' सुरुको पोकाधारीले सोध्यो ।

म हाँसेँ । मैले आफ्नो पेसा बुझाउन उसलाई केही भन्नैपर्थ्यो । केही अर्थ्याउनैपर्थ्यो । त्यही गरेँ । तिनले धेरैजसो बुझेको आभास दिए ।

'तपाईं कुन विचारधारा मान्नुहुन्छ ?' अर्कोले सोध्यो ।

'भन्नाले ?'

'राजनीतिक रूपमा तपाईं कुन खेमामा हुनुहुन्छ ?'

'मलाई राजनीतिमा चासो मात्र छ,' मैले भनेँ- 'मेरो जे धारा वा वाद भने पनि चित्र नै हो ।'

'हामीले लडेको युद्धलाई कसरी मूल्याङ्कन गर्नुहुन्छ ?'

'तपाईंहरूले राखेका राजनीतिक मागप्रति मेरो विमति छैन, केही निकै उपयुक्त पनि छन्,' मैले भनैं- 'तर ...,'

'के तर ?'

'गोलीगट्ठाको सहारा लिएको भने मलाई पटक्कै चित्त बुझेको छैन,' मैले भनैं- 'किन भनेर मैले बुझाइरहनुपर्दैन । तपाईंहरू आफैं बुझ्न समर्थ हुनुहुन्छ । यो ठीक भएन ।'

साहुनी आइन् बाहिर । मतिर हेरिन् । 'के खानुहुन्छ ?' उनले सोधिन् । 'दालभात,' मैले भनैं- 'साग छ भने गज्जब हुन्छ ।'

उनी फर्किइन् । पोकाधारीहरूमध्ये केहीले भित्रै भान्छामा गएर आफैं खाना बनाउन थालेको मैले चाल पाएको थिएँ । साँझ तिनले रेडियोछेउ कान थापे । 'बीबीसीले देला,' एउटाले भन्यो । के विषय हो भन्ने मैले बुझ्न सकिनँ ।

टेबलमा लाल्टिन आइसकेको रहेछ । तिनले अपुङ्गेका पोका पिँढीमा राखिसकेका रहेछन् । एक जना भने पत्रिका पढिबसेको थियो । अरू पनि रहेछन् पत्रिका पढ्ने । बासी पत्रिका हुनुपर्छ ती । उतापट्टि बसेका दुई जनाको धमिलो कुराकानीबाट मैले सिद्धार्थको चर्चा भइरहेको अनुमान गरें । मुटु ढक्क भयो, तर नहुन पनि सक्छ ।

'तपाईंहरू कता नि ?' मैले सोधें ।

'अर्को भेग जाँदै छौं ।'

'हेलो ... !,' एउटाले फोनमा बोलेको देखेर म झस्किएँ । ए, यिनीहरूसँग त फोन पनि रहेछ ! लामो सुइरो तानेर उसले दुई-तीनपल्ट 'हेलो' भनेपछि बल्ल सम्पर्क हुन सकेको देखियो । कोड भाषा म के बुझुँ ? सेटेलाइट फोन लिएर हिँड्ने भनेपछि यिनीहरू शक्तिशाली होलान् भन्ने अनुमान गरें ।

म टेबलमा स्केच गरिरहेको थिएँ । आफैंलाई मेसो रहेनछ म के बनाइरहेको छु भनेर । झ्वाट्ट सम्झिएँ, त्यसमा सिद्धार्थको खाका आउन आँटिरहेको थियो । तत्कालै त्यसलाई रोकेर केरमेट गरें । बित्यास पर्न सक्थ्यो । अर्को कागज निकालेर कोर्न थालें ।

त्यो फुच्ची जो मितिनीकहाँ हिँडिरहेकी थिई, म उसलाई उतार्न थालें । तर सकिनँ । किनकिन अड्किएँ । फेरि तान्न खोजें तर पनि सकिनँ । उसको सम्झनाले म लपेटिएको थिएँ । मीतबा र मितिनी आमाको गरूँ ? सक्दिनँ । नदीको सिरेटो

बढ्न थालेको थियो । स्वाइँस्वाइँस्वाइँ ... कालो बगिरहेको रात्रिकालीन नदीको अँध्यारो आकृतिको ध्वनि मीठो लाग्दै गयो । नदी आफैँमा अटुट यात्रा जसको सङ्गीत फरक सुनिन्छ जबकि उसको बोल फरक हुँदैन । हाम्रो ध्यान मात्र भिन्न हुने हो । दिउँसो सुनिने नदी यो चराचरका यावत् क्रियाकलाप र तिनको घर्षण र द्वन्द्वबीच अर्कै सुनिने मात्र हो । नदी सुन्ने हो भने रात पर्खिनुपर्छ । खासमा नदीको आफ्नै धुन हुँदैन, किनारा र चट्टान वा पहरा र छालबाट उसको धुन निस्कन्छ । यस्तै हुन् यी पोकाधारीहरू जो विद्यालय, महाविद्यालय वा विश्वविद्यालय धाउने उमेरमा यसरी पोको बोकेर हिँडिरहेका छन्, आफैँलाई दाउमा राखेर ।

मैले अघि भर्खर स्केच गरेका बच्चाहरू यस्तै हुनेछन् भोलि जब तिनको अगाडि किनारा र चट्टान वा पहरा र समयको छालले जीवन-प्रवाहमा घर्षण दिनेछन् ।

'सल,' एउटी सानी बालिकाको आवाज सुनेँ, आवाजतिर फर्केर हेर्दा मेरो कमिजमा सानो औँला चलाउन आएकी त्यही बच्ची रहिछ जसको अघि मैले चित्र कोरेको थिएँ । भनी- 'हाम्लो घल आउनु ले !'

'किन नानु ?'

'आउनु ले,' उसले भनी- 'बाले भन्नुभा'को हाम्लो घल आउनु ले ।'

'मेरो खाना पाक्दै छ,' मैले भनेँ ।

'हाम्लो घलमा खाने,' उसले तिनै औँला चलाएर भनी ।

'दुःख नमान ल,' मैले भनेँ- 'मेरो खाना यहीँ पाकिसक्यो । म भोलि बिहान चिया खान आउँछु, हुन्छ ?'

'हुन्थ,' ऊ दौडेर गई । त्यो अँध्यारामा पनि उसले आफ्नो बाटो ठम्याएकी थिई । ऊ तुरुन्त हराई हावाको वेगझैँ वा नदीको छालझैँ । उसले काटेको अँध्यारो हावा मतिर बढ्यो ।

पिँढीको लाल्टिनवरिपरि झुम्मिएका तिनीहरूमध्ये एउटाले मादल निकालेको मैले देखेँ । पाकुम ... घुम्घुम ... । बज्न थाल्यो त्यो बाजा जसलाई उसले क्रान्तिकारी ताल दिन आँटेको जसले पनि ठम्याउन सक्छ । अर्कोचाहिँले बाँसुरी निकाल्यो र फुक्न थाल्यो । नदीको सङ्गीत बन्द भयो, स्याँठ मात्र आइरह्यो ।

चियापसलको दायाँपट्टिका केराका थामका पात हल्लिँदै थिए । पछाडिपट्टि मेवा अलि बाङ्गो गरेर उसै गरी उभिरहेको थियो । भुइँकटहर ताछेर ल्याएकी रहिछन् साहुनीले, प्लेटभरि दिइन् । चाना पारिएका भुइँकटहर मैले सिन्काले घोच्दै लिन थाल्दा तिनको गीत घन्किसकेको थियो । तरुना-तन्नेरी दुवै थरी मिलेर केही गाउन थाले, केही त त्यहाँ देखिएनन् । मलाई थाहा थियो, बाँकी जति सबै पछाडि गाउँमा अन्नपात बटुल्न गएका थिए । भोलि तिनीहरू 'अर्कै भेग' ताक्दै छन् जहाँ उनीहरूलाई कतै जङ्गल वा एकान्तका गाउँ बस्दा सामलतुमल चाहिनेछ । नभन्दै केही थप पुष्ट पोकाहरू आए, केहीबेरमा ।

रायोको सागको बास्ना आइहाल्यो, तोरीको तेलमा परपर पारेको । धनियाँको अचार । मासको दाल । सिमी र बोडीको लतक्क परेको तरकारी । आम्मै, भात जति गाँस भने पनि निल्न सकिने ! तिनको मादलको रन्कोसँग लय मिलाएर मैले त्यही टेबलमा यति छिटो खाएँ मानौँ चराहरू किसानका घरमा सुकाइरहेको धान टिप्न आएका छन् । 'थपूँ कि ?' साहुनी आइन् ।

मैले लाज मानेको हुँ ? त्यस्तै लाग्छ । थपिनँ । अलिअलि भोक बाँकी राख्नुपर्छ भन्ने खाद्य-दर्शन परिपालन मैले गरेँ । मपछि खान थालेका ती पोकाधारीलाई भने त्यो सिद्धान्त लागेन । हपाहप कति हसुरे भने म चित खाँदै हेरेको हेर्‍यै भएँ । मलाई होस थिएन, कुन ताकमा साहुनीले मेरो जुठो थाल टिपिसकेकी थिइन् । स्लिपिङ ब्याग ओछ्याउन उनले मलाई बार्दलीमा गुन्द्री राखिदिएकी थिइन् । तल उनीहरू भने नाच्न थाल्दै थिए । खुब कम्मर हल्लाउने तन्नेरीले बुरुकबुरुक उफ्रिँदै नाचेको हेर्न उनीहरूबाहेक साहुनी र म मात्रै थियौँ ।

एक्कासि मादल रोकिएपछि मैले मुन्टो घुमाएर तल आँगनमा हेरेँ । एउटा रेडियो बटार्दै थियो । आयो, बीबीसी नेपाली सेवाको चिरपरिचित समाचार धुन । म भने पल्टिएँ ।

तिनीहरू किन यस्तरी ध्यानमग्न भई समाचार सुन्छन् ? जो आफ्नै ज्यान हत्केलामा राखेर हिँडिरहेका छन् तिनलाई किन यतिविघ्न कहाँ के भइरहेछ भन्ने चाख छ ? त्यस बेला फोनधारी व्यक्ति, सके टोलीनेता हुनुपर्छ, ऊ अलि पर गएर सुइरो हल्लाउँदै हेलो-हेलो भन्न थालेको सानो सुनिन्थ्यो । मलाई बरु उसकै स्केच गर्न लगाएको भए हुन्थेन ? तिनीहरू आफ्नो अनुहार खिच्न लालायित देखिएनन् । मैले ब्यागको टोपीमा टाउको घुसार्नुअघि खल्तीबाट कफीको ट्याब्लेट निकालेर जिब्रोमा राखेँ ।

'सुनको दिन एक उदाउँछ रे ...' ओठमा आयो । फुसफुस-फुसफुस गीत र कफीको चक्कीसँगसँगै म चल्न थालेँ । यिनीहरू के मलाई गोली हान्लान् ? म सुतेका बेला के यिनीहरू मलाई बलजफ्ती केही गराउलान् ? नानाथरी सोचाइ आउन कसरी रोक्ने ? मैले सफासँग अस्वीकार गरिदिएको छु, तिमीहरूको ताल ठीक छैन पनि भनिदिएको छु र 'अध्यक्ष कमरेड' को चित्र बनाउन पनि मानिनँ। त्यति जाबो खारखार-खुरखुर उत्तिन्खेरै गर्न सक्थेँ तर मैले आफूलाई नियन्त्रण गरेँ । यिनीहरूले हदै भए एक गोली हान्नेछन् । कतिखेर ? म सुतेका बेला पक्का पनि हान्नेछैनन् । फेरि मलाई हानेर के पाउलान् ? आजकाल गोली सस्तो पनि छैन ।

एक गोलीको कति सय पर्ला ? त्यो पनि हतियार हेरी छ क्यार । भरुवा बन्दुकको गोलीको एक भाउ, एके-फोर्टी सेभेनको अर्को भाउ ।

हो त, मैले देखिहालेँ नि तिनका पोकाभित्र चामल पनि रहेछ, बन्दुक पनि रहेछ । एउटाले निकालेका बेला देखिहालेँ । अन्न पनि पेस्तोल पनि । अन्न सराबर गोली । गोली पनि चामलको गेडोभन्दा धेरै ठूलो हुँदैन क्यार । कुनैकुनै फुलेको मकैको गेडोभन्दा ठूलो हुन्छ । मलाई सदरमुकाममा लागेको गोली त लाम्चो खालको छ । ए खै त त्यो ? छामछाम-छुमछुम पारेँ । यहीँ रहेछ, धत् लाटा !

'सुनको दिन एक उदाउँछ रे ...' भनी फुसफुसाउँदै फेरि कोल्टो फेरेँ । नदीले सुसेली सङ्गीत फुकेको सुन्न थालेपछि बल्ल चैन भयो । स्याँठको सुसेली दिने काँसको रङ्ग पनि अहिले अँध्याराले छोपिरहेको छ ।



# २४

लामो यात्रामा गुड्न लागेको नाइट बसको हर्न बज्यो। मैले झ्यालबाहिरको सानो बजार हेरेँ। हुस्सुले परको डाँडागाउँ ढाकेको थियो। भोलि बिहानै म पल्पसालाई भेट्न पुग्नेछु। म फर्केको गाउँ, गुराँस-जङ्गल, तोरीबारी, सुन्तला रसाएका कान्ला, मितिनी भेट्न हिँडेकी बालिका, स्कुल जान छाडेको किशोर। महिनौँ बिताएका पहाडका बारेमा म एक-एक घटना सुनाउनेछु। बसको आखिरी हर्न बजेको छ र खलासी पसेको छ मच्छेउको पछिल्लो ढोकाबाट।

यात्रु भरेर यो बस जाँदै छ काठमाण्डू जहाँ पुगेर म पल्पसाका कान भर्नेछु। मेरा शब्दमार्फत ऊ देख्नेछे मेरो पहाडको चित्र। उसले सुन्नेछे मेरो गाउँठाउँको आफन्ती चीत्कार र चराहरूको कमजोर हुँदै गएको चिरबिर। ऊ चिच्च्याउनेछे मलाई सुनेर। ऊ आफूलाई छाम्नेछे अनि आफैँ पहिल्याउनेछे देशको आत्मा। ऊ सोच्नेछे आफ्नो भविष्य र चुनौती। अनि ऊ आफैँ निर्दिष्ट गर्नेछे आफ्नो बाटो। उसलाई सम्झाउनु-बुझाउनुपर्छ मैले मेरो देश र समय। उसले आफैँ रोज्नुपर्छ आफ्नो यात्रा। त्यस यात्रामा म उसलाई साथ दिनेछु, बलियो आड दिनेछु, रचनात्मक भरोसा दिनेछु। म चित्र लेख्नेछु आफ्नो भोगाइको भूगोल। अनि ऊ दृश्यमा उतार्नेछे यो भोगाइ अनि यो भूगोल। म चित्र दिनेछु, ऊ दिनेछे गति। म वाणी दिनेछु, उसले दिनेछे भाका। म रङ्ग दिनेछु अनि ऊ दिनेछे लय। म र मेरी प्रिय मिलेर यो देशलाई दिनेछौँ आकार अनि त्यसमा भर्नेछौँ आवाज। हामी मिलेर दुनियाँलाई सुनाउनेछौँ हाम्रो देशको काल र कथा।

बस स्टार्ट भएको छ र म ह्वात्त मुन्टिन्छु।

यति बेला म पल्पसाभन्दा टाढा छु तर लाग्छ ऊ मेरो सबैभन्दा नजिक छे। उसले मेरो पुस्तक बुझेकी छ र सबैभन्दा घनिष्ठ भएर सम्झेकी छ मलाई।

उसले गहिरिएर हेरेकी छ मेरा चित्रहरू, मेरा पानाहरू– उसका कल्पना र अनुभूति गाँसिएका छन् मेरो पुस्तकमा जहाँ म आशैआशाको मुहान देख्छु । ऊ हाँसेकी छ कैयौँपल्ट मेरा चित्रहरूमा जहाँ म उसको हाँसोको भाषामा समाजप्रति प्रेमको भावना पाउँछु । उसले मेरो पुस्तकलाई प्रेम गरेकी छ र मलाई स्पर्श गरेकी छ । उसले बुझ्नेछे मलाई र म गुज्रेको समयलाई ।

मैले टेकेको भूगोललाई उसले प्रेम गर्नेछे । मेरो कलालाई उसले उत्तिकै स्नेह गरेकी छ भने मेरा चित्रहरूका रेखा उसले ठम्याउनेछे । त्यस रेखाले यहाँको शान्ति बिथोलेको छ र त्यसका तरङ्गहरू ऊ समाउन सक्नेछे । यहाँ ती तरङ्ग त्यसै पैदा भएका छैनन् भने ऊ पनि यात्रा गर्नेछे, त्यसैमार्फत । नदीमा बाढी आएजत्तिकै भइरहेको छ र ऊ देख्नेछे– भेलहरू, तिनका स्रोत र सङ्गीत ।

मैले चिनेकी पल्पसा अब मसँग सहयात्रा गर्नेछे यो लहरमा जहाँ गाउँका गाउँ बहकिरहेका छन् । मैले आफ्नो चित्रपुस्तकबाट आर्जन गरेको छु एउटी पारखी जसले मेरो रचनाको अन्तस्करण चियाएकी छ र मलाई आफूमा आकर्षित गरेकी छ । हामी अब अगाडि साथै हिँड्नेछौँ जहाँ म आफ्नो घनिष्ठ साथीलाई सेलाएर फर्केको छु । अब म त्यस मित्रताबाट मुक्त भएको छु र त्यसलाई शून्यमा राखेर फर्केको छु । म कहाँबाट आएको हुँ भन्ने बुझ्ने साथी छ भने यात्रा त्यसै प्रियकर हुनेछ । म बादलैबादलको बाटो अपत्यारिला दृश्य भोगेर फर्केको छु र चाहन्छु ती बादलमा भरिएका बुट्टा आफ्नी प्रियलाई देखाउन । ऊ मेरो मनमा प्रवेश गरेकी छ र मैले तय गरेको बादलयात्रा उसैले राम्ररी बुझ्न सक्नेछे ।

कुइनेटो ठेल्दै कोही बसेको छ मसँग यो बसमा तर स्नेह र परिचयको न्यानो आड दिएर मलाई पर्खिरहेकी छ मेरी पाठक ।

'नमस्कार,' मेरो आडकी यात्रुको अनुहार अँध्यारामा म ठम्याउन सक्दिनँ तर परिचित आवाज सुन्छु- 'चिन्नुभएन ?'

'चिनिनँ त,' भन्छु र आफ्नो छिमेकी शरीर हेर्छु । एउटा आकृति मन्द मुस्कानले मसँग बोल्न थालेको छ । को हो भन्ने सोच्दा-नसोच्दै मेरा ओठ चिप्लिन्छन्- 'पल्पसा !'

'बाफरे !' ऊ भन्छे- 'तपाईसँग यहाँ यतिका महिनापछि भेट हुन लेखेको रहेछ ! म चित खाएँ । कस्तो छ तपाईंलाई ?'

'म आफैँलाई पत्यार छैन कहाँबाट, के देख्दै यहाँ आइपुगेको छु,' म भन्छु- 'तर तिमीलाई यहाँ भेटेर पत्याउनै सकिरहेको छैन ।'

'अचानक हराउनुभयो तपाईं,' उसले गुनासो गरी- 'चित्रकारहरू यस्तै हुन्छन् जस्तो लाग्न थाल्यो बिस्तारै । म तपाईंलाई बिर्सँदै जान सजिलो मान्दै गएँ । सम्झिन थाल्यो भने तनाव हुन्थ्यो । म धेरै सकसमा परेकी थिएँ ।'

'के गर्ने पल्पसा !' मैले भनेँ- 'म जुन साथीको लहैलहैमा घुम्न आएँ उसैको रगत लतपतिएको हातमा बिदाइ गरेर आएको छु ।'

'के भयो ?' ऊ झस्किँदै सोध्छे ।

'कलेजकालको मेरो एउटा साथी थियो, धेरै वर्षपछि भेट भयो,' मैले भनेँ- 'ऊसँगै पहाड घुम्न आएँ । अन्तिममा ऊ आफैँ मृगझैँ घेरियो र मारियो ।'

'कसरी ?'

'उसले त्यो रोजेकै थियो,' मैले भनेँ- 'म चकित भइनँ तर जुन तरिकाले ऊ मारियो र त्यसमा आफू पनि कारक भएकामा म स्तब्ध छु ।'

उसको अँध्यारो अनुहार मतिर फर्केको थियो, जिज्ञासाले ।

'म उसलाई खोज्दै गएको थिएँ, मेरै कारण मलाई लैजाने उसकी साथीले बन्दुक पड्काई र सुराकीहरूले चलाखीपूर्वक हामीलाई त्यहाँ पुर्‍याएर सिद्धार्थ चिनाउन बाध्य तुल्याए,' म भन्छु- 'मेरै काखमा उसको आखिरी सास गयो ।'

ऊ केही बोलिरहेकी थिइन । फगत मतिर हेरिरहेकी थिई । बस गुडिरहेको थियो । एउटा घुम्ती काट्न लाग्दा अर्कातिरबाट आएको एउटा ट्रकको प्रकाशबाट मैले उसलाई अलि खुलस्त देख्न पाएँ । उसलाई त्यत्ति एक टुक्रा क्षण देख्न पाएँ।

'सबैभन्दा ठूलो कुरा जीवन हो,' ऊ भन्छे- 'बन्दुक भिरेर हिँड्ने मान्छे मारिन्छ भने धेरै सन्ताप मान्नु हुँदैन । किनभने ऊ आफैँ कसैलाई मार्न हिँडेको हुन्छ ।'

'त्याग पनि त ...,'

'आफूलाई मेटेर, आफूलाई सिध्याएर अरूलाई कसरी जीवन दिन सकिन्छ ?'

'तैपनि म दोषी अनुभव गरिरहेको छु ।'

'तपाईंको के दोष ?' ऊ भन्छे- 'एउटा चरण थियो, पार भयो । एउटा समय गुज्रियो । बतासझैँ तपाईंको साथी आयो र गयो । समयले उसलाई बुझेन वा उसले समयलाई बुझेन ।'

'म त अहिले केही सोच्न सकिरहेको छैन,' म भन्छु- 'सिद्धार्थको घटनाले मलाई प्रभावित गरेको छ। ऊ आफैँले मलाई काठमाण्डूबाट तान्यो र यस्तो भेगमा पुऱ्यायो जहाँ मैले बिथोलिएको आफ्नो देश भोगेँ।'

'चित्रकारका रूपमा तपाईंलाई त राम्रै अनुभव भयो नि !' ऊ भन्छे।

'बचेर आएँ।'

'धन्य छ।'

'तिमी यहाँ कसरी ?' म सोध्छु।

'मैले तपाईंलाई भनेकै थिएँ,' ऊ भन्छे- 'म डकुमेन्ट्री फिल्म बनाउन चाहन्छु।'

'अनि ?'

'खिच्दै हिँडेकी थिएँ।'

'के ?'

'जान पाइनँ।'

'कहाँ ?'

'सदरमुकाममा सुरक्षाकर्मीले गाउँ नजान सुझाव दिए,' उसले भनी- 'तैपनि मैले ढिपी कसेँ तर केहीबेर हिँड्नासाथ झ्याप्प मान्छेहरू आए।'

'अनि ?'

'तिनले ओहो मलाई तीनपुस्ते सोधपुछ गरेर हैरान पारे, झोला खानतलासी लिए, अनुमति नलिई किन आएको भनेर हप्काए।'

'ए !'

'मैले आफ्नो बेलीबिस्तार लगाएपछि कसैलाई सोध्नुपर्छ भनेर मेरो नाम र हुलिया लिएर गए, मलाई त्यहाँभन्दा केही पर दुई दिनसम्म एउटा घरमा बन्दीजस्तै बनाए,' उसले भनी- 'गर्न त केही गरेनन् तर मैले आफ्नो स्वतन्त्रता गुमाएँ।'

'भन्नाले ?'

'अन्त्यमा तपाईं जान पाउनुहुन्न भनेर फर्काइदिए,' उसले भनी- 'म तिनीहरूको प्रवृत्तिप्रति क्रुद्ध छु, मैले यस्तो सोचेकी पनि थिइनँ।'

'अचम्म !'

'तिनले सारा गाउँलेलाई बन्धकजस्तै बनाएका छन्, कसैलाई आफ्नो अनुमतिबेगर हिँडडुल गर्न दिँदैनन्, दिस इज सिम्प्ली डिक्टेटरसिप। यस्तो खटनपटन उनीहरूले भोलि ल्याउन खोजेको व्यवस्थाको सङ्केत हो। बन्दुकको तुजुकमा मात्र त्यो आउन सक्छ। जनताको मतले होइन।'

मैले उसलाई फेरि गडेर हेरेँ । उसको मुन्द्री हल्लेको हुनुपर्छ । घरी मलाई हेर्थी, घरी मलाई नहेरेको म अनुभव गर्थें । ऊ तनावमा थिई तर मलाई भेटेर न्यानो अनुभव गर्दै होली । अँध्यारो राजमार्ग-यात्राका रात्रिबसहरू तीव्र आवाजले गुड्छन् । मानौँ यो ओलम्पिक म्याराथुन हो । चालकहरू आजकाल एम्बुसमा परिएला भनेर थर्कमान हुन्छन्, नभए कहिले कुन बेलादेखि कता बन्द वा नाकाबन्दी सुरु हुन्छ भन्ने चिन्ताले तर्सिरहेका पनि हुन्छन् । त्यसैले उनीहरू जहिल्यै हतारमा हुन्छन् । लामो दूरीको रात्रिबस, त्यसमाथि नानाथरी अवरोधको सम्भावना। बसको एकोहोरो गुडाइले मलाई पल्पसासँग झ्याम्मिएर गफ गर्न दिएको छैन । घरीघरी बस घुम्दा वा उफ्रँदा ऊ मसँग टाँसिन्छे । घरी म ऊतिर घचेटिन्छु । कहिले उफ्रिन्छु, कहिले बाङ्गिन्छु । ऊ पनि त्यसै गर्छे । हामीबीच एउटा शिष्ट दूरी छ तर बसको गुडाइले हाम्रो मर्यादित दूरीलाई मेटिदिन्छ । म उसका औँला छुन चाहन्छु । बदलामा ऊ के गर्ली ?

ऊ भन्दै थिई- 'मैले सबैका आँखामा त्रास देखेँ । आफैँ त्रसितहरूले के गर्न सक्छन् ? म क्यामरा भिरेर हिँडेकी केटीसँग डराउने लाछीहरू !'

'लाछीहरू !' मैले उसको शब्द सापटी लिएर भनेँ ।

ऊ रौँकिएकी थिई- 'क्यामरासँग डराउनु भनेको तपाईं आफैँ भन्नुस् न के हो ?'

'कायरता ।'

'मैले सम्झाउन सकिनँ,' उसले भनी- 'तिनीहरू सम्झिन तयार छैनन् ।'

'एक्लै आएकी ?'

'क्यामरा मेरो साथी,' उसले भनी ।

'कहाँ-कहाँ प्रयास गर्‍यौ ?'

'कहाँ पाउनु ?'

'कता जान खोजेकी थियौ ?'

'जहाँ क्यामराले डोर्‍याउँछ,' उसले भनी ।

'तिमी उस्तै रहिछ्यौ ।'

'तपाईं मात्र फेरिनुभयो ।'

'मैले तिमीलाई बिर्सेको छैन,' मैले भनेँ ।

'फूल फुलेझैँ तपाईं आउनुभयो,' उसले भनी- 'र अर्को सिजनमा तपाईं हराउनुभयो ।'

'सिजन फेरिएपछि म फेरि आएँ नि,' मैले वातावरण अलि खुकुलो बनाउन भनें।

बसको गति मत्थर भयो। घ्याचघ्याच गर्दै किनारा लाग्यो र घ्याच्च रोकियो। खलासी करायो हाम्रै छेउबाट- 'लौ पिसाब फेरौँ है !'

म उठ्न खोजें। 'कोही छैन अरू जाने ?' खलासीले फेरि चर्को बोल्यो।

'म तिमीलाई कति मिस गर्थें, साँधी छैन,' म भन्छु र निस्कन्छु। उसको घुँडा ठेल्दै। ऊ निस्कन्न। केही यात्रु अझै छन् बसभित्र। उसले भनेको सुन्छु- 'म झन् तपाईंलाई कसरी बिर्सन सकूँ ? हजुरआमा सधैं तपाईंको कुरा गर्नुहुन्छ।'

'मेरो सबै सन्ताप मेटिएको छ तिमीलाई यहाँ भेटेर,' भन्दै झर्छु। मेरो बोली सकिएको छैन- 'म तिमीलाई कति चाहन्छु भन्ने सायदै तिमीलाई थाहा होला।'

नजिकको झाडीतिर अरू यात्रु रहेछन्, उठी-उठी पिसाब फेरिरहेका। म अलि टाढा जान्छु। बसको हर्न बज्छ। कस्तो हतारिएको ! ए होइन, एउटा जिप उताबाट आइरहेको रहेछ। त्यसको आवाज रहेछ त्यो। त्यो जिप हाम्रो बसनेर आइपुगेको रहेछ। हाम्रो बस बिस्तारै गुड्न थाल्छ।

छिटछिटो फर्किन के खोजेको हुन्छु, सपना देखेजस्तो हुन्छ। एउटा भयानक आवाजले भुइँमा पछारिन्छु। मुन्टो सडकमा दोब्रिन्छ। मानिसको चीत्कार कतिविधि छ भने म आफूलाई छाम्छु। विश्वास लाग्दैन, फेरि छाम्छु। सडक पूरै बलेको छ उज्यालाले। भर्खर भएको विस्फोटनले म छल्याङछुलुङ हुन्छु। आफूलाई कुल्चेर अरू भाग्न थालेपछि म पनि जुरुक्क उठ्छु– बस त ह्वारह्वारी बलिरहेको छ।

'पल्पसा !' म चिच्च्याउँछु।

बसभित्र रहेका यात्रुको नमीठो चीत्कारले मलाई लगभग पागल बनाउँछ। त्यसमा पल्पसाको स्वर पनि मिसिएको हुनुपर्छ। त्यो सोचेर म भिमल हुन्छु। केही पनि गर्न नसकी, पात झरेको रूखजस्तो म उभिरहन्छु– अरू केही सोच्न सक्दिनँ। अरू भागिरहेका छन् तर म भाग्न पनि सक्दिनँ। डाँडातिर मसालको मुस्लो देखिन्छ, र त्यो क्रमशः माथिमाथि उक्लँदै जान्छ। माथिबाट ती मसालधारीले बिछ्याएको धरापमा हाम्रै बस परेछ। जिप सुरक्षित भयो जसबाट निस्केका हतियारधारी प्रहरीले तत्काल डाँडातिर फायरिङ गर्न थाले। हामी जो-जो बचेका थियौँ, सबै जहाँ पुगेको हो त्यहीँ तत्काल रोकिन उर्दी सुरु भयो। मनेरि दुई जना यात्रु होस गुमाएर उत्ताना टाङ लगाइरहेका थिए।

'पल्पसा !' म फेरि चिच्च्याउँछु ।

बसभित्र रहेका कोही पनि बचेनन् । कसरी बचून् ! चट्याङ परेको रूखझैं त्यो बस हेर्दाहेर्दै खुम्चिन थाल्यो । आगो बलिरहेको थियो । त्यसको अस्थिपञ्जर कालो हुँदै गयो । मानिसको चीत्कार बिलायो । बाहिर परेर बाँचेका सबै जना उँधोमुन्टो गर्दै झोक्राउन थाले । भुरुर्र उडेको चराझैं मेरो सोचाइ, कल्पना, कामना सबै भङ्ग भएर गयो । म थरथरी काँपिरहेको थिएँ । म बाँचेको थिएँ किनभने म बसबाट निस्कें । पल्पसा बिती किनभने ऊ बसबाट निस्किन । निस्कनु र ननिस्कनुको झीनो भेदले मेरो जीवन बचेको छ र उसको जीवन गएको छ । कुनै कारण छैन मेरो बचाइ र उसको मराइमा । म जीवन पाइरहेको छु र ऊ बिनाकारण मृत्युवरण गर्न बाध्य भएकी छ । म न पुरुषार्थ गरेर बाँचेको हुँ न ऊ कुनै कमजोरीवश । यो अपराध हो । कायरता हो । यहाँ तर्क र विवेक हराएको छ । म किन बाँच्दै छु र पल्पसा किन मरेकी छ ?

'एक सेकेन्डले बचियो,' माथि फायरिङ गरिरहेको एउटा सुरक्षाकर्मीले अर्कोसँग भनेको सुनें- 'बसले हेडलाइट नबालेको भए हामी पर्ने रै'छौं ।'

'हाम्रो ड्राइभरले तत्काल बायाँ मोड्यो,' ऊ भन्दै थियो- 'नत्र एम्बुसमा हामी पर्ने रै'छौं ।'

हाम्रो बसमा अघि भर्खर बत्ती बल्दा मैले एक झमक देख्न पाएको थिएँ पल्पसालाई । एक निमेष पनि राम्ररी खुट्टयाएर हेर्न पाइनँ । झरिहालें । त्यो आखिरी भेट रहेछ ।

उसका ती चम्किला आँखा, गोरो अनुहार, ओहो ... ! म सम्झिरहन्छु । आँखा पुछ्छु । आखिर किन म यही बस चढ्न पुगें जसमा पल्पसा पनि यात्रा गर्दै थिई ? कसरी ऊ आइपुगी म चढेकै बसमा जसले उसको जिन्दगीको पूर्णविराम लेखेको थियो ? कसरी ? कसरी ? म आजित हुन्छु सोच्दासोच्दै ।

बिहान भरररर पत्रकारहरू आइपुग्छन् अनगिन्ती क्यामरासहित । खोलाछेउ बिहानी सिरेटो चल्न थाले पनि मलाई हनहनी ज्वरो आएझैं भइरहेको छ । काँप्न छाडेको छैन । घाम उदाउँदा रातिको घटना सपना बनेर पुछिए हुन्थ्यो भन्ने लागिरहन्छ ।

'तपाईं कसरी बच्नुभयो ?' एउटा प्रश्न गर्छ ।

'पिसाब फेर्न झरेको थिएँ,' म काँप्दै भन्छु ।

'के देख्नुभयो ?'

'बस बलेको देखें ।'

'कसरी विस्फोट भयो ? कसरी प्रहरी भ्यान जोगियो ?' अनगिन्ती प्रश्न ती गर्न थाल्छन् ।

'बसमा तपाईं एक्लै हुनुहुन्थ्यो ?' भीडको पछाडि उभिएको अर्को रिपोर्टरले सोध्दा म फेरि झस्किन्छु । तर के उसलाई यसको जवाफ दिऊँ ? किन दिऊँ ? मसँग सिटमा को थियो र ऊ मेरो को थिई भन्ने सार्वजनिक गर्नुको तुक छैन । म चुप लाग्छु । क्यामराहरू मतिर तेर्सिरहेका छन्, म आँसु पुछिरहेको छु ।

'आक्रमणकारीले कहाँबाट स्विच थिचेका होलान् ?' अर्को रिपोर्टर प्रश्न गर्छ । म बोल्दिनँ । केही भन्न सक्दिनँ । किनभने रातको अँध्यारामा माथि मसाल बलेको मात्र मैले देखेको थिएँ । केहीबेर प्रहरी र आक्रमणकारीबीच फायरिङ चलेको थियो । सामसुम भइहाल्यो ।

'तपाईंको कोही त थिएन बसमा ?' फेरि अर्कोले त्यही प्रश्न गर्छ ।

म चुप लाग्छु ।

'बसभित्रका कसैलाई बचाउन सक्नुभएन ?' अर्को प्रश्न झटारो हान्न आइपुग्छ ।

'तपाईं के भन्नुहुन्छ ? केही प्रतिक्रिया दिन चाहनुहुन्छ ?' प्रश्नहरू घेराबन्दीमा पारिरहन्छन् ।

म उभिरहेको छु निरुत्तर । जो मेरो जीवनमा उज्यालो छर्न आइरहेकी थिई उही बिलाएकी छ । ओहो, म विश्वासै गर्न सक्दिनँ ! पल्पसा मेरो जीवनको सबैभन्दा मीठो चित्र हुँदै थिई, उसका कल्पना मेरा सबैभन्दा प्रिय भावना हुँदै थिए, ऊसँगको यात्रा मेरो सुखद लक्ष्य हुँदै थियो उही ई यहाँ मेरैसामु आगाको बाहुपाशमा डढेकी छ ।

त्यो बिचरी जो आफ्नो रोजाइको जीवनका लागि परिवार र परम्परासँग सङ्घर्ष गरिरहेकी थिई उही समयको लप्कामा विलीन हुन पुगेकी छ । म उभिरहेको छु जहाँ भर्खरै समयले घाइते पारेको दृश्य आफ्ना अगाडि ठूलो परीक्षा लिन तैनाथ छ । म बस्छु केहीबेर, उठ्छु फेरि । उठिरहन्छु केहीबेर, बस्छु फेरि । उफ्, म मेरी प्रियले अँगारको रूप लिएको मुचुल्काको साक्षी कसरी बन्न सक्छु !



# २५

काठमाण्डू फर्केर सबैभन्दा पहिला पल्पसाको घर डोरिएँ। हजुरआमा अलापिनुभएको होला, उहाँको चित्त फाटेको होला, एउटै प्रिय नातिनी गुमाउनुपरेको रन्कोले उहाँ बेहोस हुनुहोला। मलाई गाऱ्हो हुनेछ उहाँको सामु पर्न। तर मेरो कर्तव्य हो। उहाँलाई मेसो मिलाईकन भन्नुपर्नेछ मैले। सम्झाउनुपर्नेछ मैले यस्तै रीति रहेछ भनेर। यो युद्धको ऋतु हो हजुरआमा ! हामी केवल संयोगले बाँचेका छौँ भन्नुपर्नेछ मैले।

म घर पुग्दा उहाँ साबिकझैँ बत्ती कातिरहनुभएको थियो। युद्धग्रस्त देशको राजधानीमा हजुरआमा बुद्धको मूर्तिछेउ बगैँचामा बसिरहनुभएको थियो। मूर्ति हेरेँ, उस्तै साउती मार्ने आँखा। मसँग जवाफ थिएन। बुद्धका आँखासामु म सजिलै झुकेँ। यी आँखा नेपालका लागि ठूलो विडम्बना भएका छन्। ओम् मणि पद्मे ... जप्न मन लागेन। जपेर शान्ति हुँदैन। अहिले जन्मेका भए बुद्धले पनि बन्दुक बोक्थे रे !

हजुरआमा हाँस्नुभयो। मैले जङ्गलमा सुनेको 'अहिले जन्मेका भए बुद्धले पनि बन्दुक बोक्ने थिए' सम्झेकै बेला उहाँ हाँसेको देखेँ। यो भयानक व्यङ्ग्य हो। मैले बलजफ्ती ओठ तन्काएँ। उहाँको अनुहार झन्झन् उज्यालो भयो। यसको अर्थ हो, आफ्नी नातिनीबारे उहाँले केही थाहा पाउनुभएको छैन। मारिनेहरू सबैको नाम प्रस्ट आइसकेको छैन। कतिको नाम कहिल्यै खुल्ने पनि छैन। तिनीहरू सधैँका लागि बेपत्ता ठहरिनेछन्।

मेरा आँखा रुझिरहेको उहाँले पावरवाला चस्माबाट देख्न सक्नुभएन।

हामी भित्र पस्यौँ। उहाँ केके भन्दै हुनुहुन्थ्यो, मेरो ध्यान भने भित्ताको नयाँ पेन्टिङले खिच्यो। अहो, पल्पसाले यस्तो गर्न भ्याइसकिछ ! उसले मन पराएको

त्यही 'झरी' चित्र भित्तामा झुन्डिएको थियो । ग्यालरीबाट फुलनसँग किनेर उसले कहिले ल्याएकी होली ? म थप चिसिएँ । केही बोल्न सकिनँ ।

'बस न,' हजुरआमा भन्दै हुनुहन्थ्यो- 'किन उभिरा'को ?'

'काँ हरा'का थ्यौ ?'

म बोल्न सकिनँ ।

'पल्पसाले तिम्लाई चिठी छाडेर गा'की छ,' उहाँले भन्नुभयो ।

'क्यामरा लिएर निस्केकी मान्छे, उसको पनि खबर आ'को छैन,' उहाँले भन्नुभयो- 'भन्दै थिई, झट्टै फर्किन्नँ ।'

'कपडा थुप्रै कोचेकी छ, जुत्ता चैँ आफ्नो साइजको बलियो पाइएन भन्दै थिई ।'

म अझै बोलिनँ ।

'तिमीसँग रिसाइरा'की थिई । तिम्रो चिठीले म दङ्ग परेँ । ऊ भने त्यैँदेखिन् गम्भीर बनी,' उहाँले भन्नुभयो- 'सधैँ तिम्रोबारेमा सोध्थी, आउनुभएन ? फोन पनि गर्नुभएन ? भनेर ।'

'मिलेन हेर्नुस् न,' मैले भनेँ- 'पहाड गएको थिएँ, स्थिति कहीँ राम्रो थिएन । टेलिफोनका टावर सबै ध्वस्त थिए । बम, गोलाबारी जता पनि ।'

'ज्या, तर तिम्ले भनेर गा'को भए हुन्थ्यो,' उहाँले भन्नुभयो- 'उल्ले चाख मानेकी छ तिम्रोबारेमा ।'

म फेरि बोलिनँ ।

'तिम्ले प्रेम गर्ने केटी ऊजस्तै छ भनेका होइनौ ?' उहाँले फेरि भन्नुभयो- 'के ऊ पल्पसाजस्तै छे ? मलाई हेर्न मन छ । बानीबेहोरा पनि उस्तै छ ? अचम्म !'

'तिम्ले मलाई कस्तो राम्रो चिठी लेखेका थ्यौ ! म त रोएँ सुनेर । ऊ पनि पढ्दापढ्दै रोई ।'

'मैले दुःख पोखेको थिएँ र ?'

'दुःख नै हुनुपर्छ र रुन ?' उहाँले भन्नुभयो- 'मन छोएपछि ।'

'मन छुने कुरा थियो र ?'

'ऊ किन रोइहोली भन्ने मैले बुझेकी छु,' उहाँले भन्नुभयो- 'तिम्ले यो घरलाई कति स्नेह गरेका रै'छौ भने ऊ पढ्दापढ्दै हिक्कहिक्क गर्न थाली । किनभने यो उसैले बना'को घर हो । पुरानो घर भत्का'र आफैँले डिजाइन गरीवरी बनाउन लगा'की ।'

उहाँ केहीबेर छट्किनुभयो । मैले फेरि भित्तामा त्यही पेन्टिङ हेरेँ । त्यसको केटी आकृति मजस्तै लाग्छ भनेर पल्पसाले भनेकी थिई । उहाँले चिया ल्याउनुभयो ।

'उसलाई केबाट प्रेरणा आएछ यस्तो घर बनाउन ?'

'तिम्रो एउटा चित्रमा यस्तै घरको वर्णन छ रे !' उहाँले भन्नुभयो- 'हो ?'

'म पनि चित खाइरहेको छु हजुरआमा,' मैले भनेँ ।

'ऊ तिम्लाई प्रेम गर्छे कि जस्तो लाग्छ ।'

'किन त्यस्तो सोच्नुभा' ?'

'तिमी ऊजस्तै केटीलाई प्रेम गर्छौ भन्ने था' पा'र हो कि ?' उहाँले भन्नुभयो- 'यो घरको वर्णन र प्रेमको प्रसङ्ग पढेपछि उसले आँसु चुहा'की थिई । मैले उसलाई दुईपल्ट रो'को देखेँ ।'

उहाँले पल्पसाको चिठी दिनुभयो । त्यहाँ टाँगिएको 'झरी' फेरि हेरेँ र रुझेको मन लिएर निस्किएँ । त्यो एउटै चित्रले घरलाई नयाँ चरित्र दिएको थियो । चिठी पढ्दै निस्कँदा बुद्धमूर्तितिर हेर्न सकिनँ । ती आँखाले मलाई सोध्न सक्छन् । ती शान्त आँखाबाट जोगिएर भागेँ । मलाई कष्ट भयो, ती आँखालाई बेवास्ता गर्न । यस्तो कष्ट बरु बन्दुकबाट भाग्दा भएन । सक्ने भए अहिले मान्छेहरू यी बुद्धलाई बन्दुक भिरेको व्यक्ति बनाइदिन सक्छन् । कुनै दिन मूर्ति बनाएँ भने मैले पनि त्यही गर्न के बेर ?

*प्रिय चित्रकार,*

*तपाईंले मलाई सुटुक्क चोर्नुभयो र आफैँ हराउनुभयो । कति लामो समयसम्म ? तपाईं कहिले आउनुहुन्छ भन्ने पनि मलाई खबर छैन । म कति आत्तिएकी छु भने मकैझैँ काठमाण्डू-हाँडीभित्र भुटभुटिएको भुटभुटियै भएँ, तपाईंले मलाई किन यतिसारो आगो लगाउनुभयो ? तपाईंबिनाको काठमाण्डू एउटा हाँडीभन्दा फरक लागेन मलाई । म त्यसभित्र कोच्चिएँ र तपाईं आगो झोसेर भाग्नुभयो । म यसरी कति समय पोलिन सक्थेँ ? तपाईं मलाई बुझ्न सक्नुहुन्छ भने ठान्नुहोस् म आगो झोसिएको हाँडीभित्र छटपटाउने मकैका गेडाभन्दा फरक भइनँ ।*

(गाडीको हर्न बज्यो । ए हे ! म माझगल्लीमा हिँडिरहेको थिएँ । पन्छिएँ । अगाडि कोही हाँक्किँदै आएको थियो । उसबाट पनि पाखा लागेँ । र फेरि पढ्न थालेँ ।)

*तपाईंले किन त्यसो गर्नुभयो ? त्यसो गर्नै थियो भने मलाई किन चोर्नुभयो, किन चिमोट्नुभयो ? किन सपना देख्न प्रेरित गर्नुभयो ? तपाईंले एउटी बालिकालाई घाममा राख्नुभयो अनि हराउनुभयो, त्यो बिचरी यो बढ्दो तापक्रम कसरी झेलिरहेकी होली भन्ने किन सोच्नुभएन ? तपाईं किन अर्काको भावना कदर गर्नुहुन्न ? के मलाई दुई शब्द सोधेको भए हुन्थेन, तपाईं कहाँ किन कहिले कसरी जानुभयो ? मलाई किन अत्याउनुभयो ? आखिर तपाईं हुनुहुन्छ नै को, जो अर्कालाई थप्पड हानेर हराउँछ ? असलमा तपाईं मेरो त्यही प्रिय चित्रकार हो भन्ने शङ्का लाग्न थालेको छ । मैले एकोहोरो प्रेम गरेको पुस्तक तपाईं आफैंले लेखेको हो भन्नेमा मलाई अर्कै विचार हुन थालेको छ ।*

(गल्ली मुख्य सडकमा मिसिइसकेको रहेछ । किनार लागेँ । केही मान्छे सडक काट्न पर्खिरहेका थिए । म पनि उनीहरूसँगै उभिएँ ।)

*तपाईंले मेरी हजुरआमालाई त्यो चिठी नलेखेको भए म यसरी तड्पिने पनि थिइनँ । म सफा मनले तपाईंसँग प्रस्ट हुँदै थिएँ तर तपाईं आफैं मलाई कोतरेर हिँड्नुभएको छ । यो तपाईंको छल हो र सरासर बदमासी । त्यसो गर्नै थियो भने किन हजुरआमालाई चिठी लेख्नुभयो र प्रेमको आस देखाउनुभयो ? प्रेम भन्ने शब्द नै किन उद्धरण गर्नुभयो जब त्यसमा तपाईं सच्चा हुन सक्नुहुन्न भने ? तपाईंको मनमा अर्कै खेल थियो भने हजुरआमालाई साक्षी राखेर किन त्यसरी मलाई भड्काउनुभयो ? मलाई यसमै उदेक लागेको छ । मैले आफूलाई फरक रूपमा पाउन थालेकी छु । र म क्रमशः उदास भइरहेकी छु ।*

(सडक काट्न अरूको पछि लाग्दा फेरि चिठी पट्याएँ । घाम लागेको दिन पनि किन यति चिसो ? कि यो घाम होइन ? कति ढिलो हिँडेका यी मान्छेहरू ? के यिनलाई हिँड्न पनि आउँदैन ? नेपाली भईकन पनि छिटो पाइला सार्न नसक्ने जैरेहरू ! यिनका पुर्खा त कतै पहाडतिरबाट झरेका होलान् नि !)

*म आकाङ्क्षाहरूले भरिएकी एउटी साधारण केटी हुँ । जीवनमा केही गर्न र केही बन्न चाहन्छु । बस, म खाली कागज बनेर उडिरहेकी थिएँ तपाईंले नै च्याप्प समात्नुभयो र त्यसमा रङ्ग भर्नुभयो । तपाईंले रङ्गीन प्वाँख टाँसिदिनुभयो । म उड्न लागेँ । खासमा म पो तपाईंसँग डराइरहेकी थिएँ । त्यो पुस्तकको लेखक तपाईं आफैं एउटा पाठकलाई बिथोल्न आउनुभयो । यति राम्रा चित्र बनाउनुभयो, म त्यसैबाट उडिरहेकी थिएँ । मैले आफूलाई त्यसैको प्रेरणाले उडाउन लागेकी*

*थिएँ । तर तपाईं आफैं मेरा अघिल्तिर प्रकट हुनुभयो र मलाई साक्षात् नै उडाउन थाल्नुभयो । नदीकिनारको पात उडाउन हुरी आएझैं तपाईं आउनुभयो र म उडेर पारि पुगें ।*

*पातको नियति भोग्नुपर्‍यो मैले । त्यसैले म आफू जमिनमा अडिन तपाईंबाट भाग्न खोज्दै थिएँ । तपाईंबाट टाढा उभिन ताकि म पातबाट एउटा बिरुवाको स्वरूप लिन सकूँ । म तपाईंसँग छुट्टिएकै थिएँ तर तपाईं मलाई मेरो काठमाण्डू मुकाममै धावा बोल्न आउनुभयो र फेरि मलाई उडाउन थाल्नुभयो । मैले तपाईंसँग मेरी हजुरआमालाई निकट देख्नुपर्‍यो, उहाँलाई पनि तपाईंले सान्त्वना दिनुभयो । उहाँको निम्तो लिएर म तपाईंसामु पुगें र मलाई एउटा प्रेमीले झैं व्यवहार गर्नुभयो । के तपाईंले कहिल्यै सोच्नुभयो मैले तपाईंप्रति कस्तो भावना राखेकी छु ?*

(कस्तो बेसोमती रहेछ त्यो मान्छे, मलाई कुमले ठेलेर गयो ! एकबारको जुनीमा किन मरिहत्ते गर्दै छ ? के लानु छ ए बज्जिया ? कता हिँडेको ? किन अरूलाई ठेल्दै हिँड्छस् ?)

*हजुरआमालाई तपाईंको चिठी बाचेको साँझभरि म रन्थनिएँ । अक्षर पढ्दै छु, आफू भित्रभित्रै उसिनिन्छु । भन्न मन लाग्छ केही, सुनाउन मन लाग्छ केही । आफूलाई प्रकट गर्न मन लाग्छ, पोख्न मन लाग्छ छताछुल्ल घरभरि । त्यही चिठी र भावना लिएर हिँड्न मन लाग्छ, टोलभरि, सहरभरि । तर म तपाईंलाई आफ्नो नजिक पाउन सक्दिनँ । टाढाटाढा हुँदै तपाईं समयको दूरी बोकेर हराउनुहुन्छ । कति लामो समय भने म आफूभित्रभित्रै उसिनिएका भावना निकाल्न सक्दिनँ जो शूल बनिरहेका छन् । ती भित्रै बसेर मलाई डस्छन् । मलाई घाइते बनाउँछन् । एकै शब्द तपाईंलाई भन्न पाए पनि, एकै शब्द तपाईंलाई सुनाउन पाए पनि मलाई कति सन्चो हुन्थ्यो ! मलाई घाइते तुल्याएर, बिरामी पारेर तपाईं यति टाढा जानुभयो जहाँ म कुनै सम्पर्क गर्न सक्दिनथें ।*

*तपाईं यति समयलाई दृश्यबाट मेटिनुभयो म आफूलाई तपाईं एउटा भ्रम हो भनेर शान्त पार्न विवश भएँ । तपाईं किन यतिसारो छल गरेर मलाई घाइते पार्न आउनुभयो, एकपल्टले नपुगेर पटक-पटक मलाई अशान्त पार्न फर्किनुभयो अनि आफूले शान्त पानीमा फालेको ढुङ्गाको प्रभाव हेर्न किन डराउनुभयो ? म चाहन्छु मेरो त्यो पुरानो समय फर्कोस्, तपाईंलाई भेट्नुअघिको, जहाँ म आफैं*

एकनास मनको शान्ति भोगिरहेकी थिएँ, जहाँ मेरो त्यति नजिक कोही प्रवेश गरेकै थिएन । आखिर तपाईंको म आत्मीय पाठक हुनुको यो सजाय हो ? यसो सोच्छु, म तपाईंका चित्रप्रति यतिसारो नजिक नै भएँ किन ? कति नजिक भने तिनका चित्रकारलाई भेट्नेबित्तिकै म जीवनप्रति नयाँ दृष्टिकोण पाउँछु । अनि त्यो चित्रकार उपस्थित हुँदैमा म किन त्यतिसारो अनौपचारिक हुन थाल्छु जहाँ तपाईं भर्खर परिचित व्यक्ति हो भन्ने भेद मेटिन्छ । म चाहन्छु, तपाईंलाई भेट्नुअघिको समय फर्कोस् किनभने म यो मनोदशामा साँच्चै विचलित भइरहेकी छु ।

म कति तनावरहित थिएँ ! एउटा सफा कागज थिएँ । मसीको दाग लाग्नुअघिको कागज थिएँ म जहाँ आफूले चाहेअनुसारको चित्र बनाउन सक्थेँ । तर तपाईं यसरी आउनुभयो मलाई होस भएन । बेहोसीमै म पोतिएँ, लतपतिएँ । अब त्यो सफा कागज रहिनँ । मेरो बिहान कसैले चोरिसकेको छ र ऊ भागेको छ । मसँग बिहानरहित दिनहरू मात्र छन् ।

मैले कहिल्यै अमेरिकामा आफूलाई यति तड्पाउनुपरेन । म दुई-तीन प्रेमबाट असफल भएकी केटी हुँ । तिनमा प्रेमभन्दा भोग बढी थियो । तिनमा स्नेहभन्दा वासना बढी थियो । मलाई कुनै पछुतो छैन । ती भोगाइ हुन् जसको सम्झना मात्र छ । त्यस्तो सम्झना भावनामा लुकेको हुँदैन । कहिलेकाहीँ विगत फर्किंदा सम्झिए हुने स्तरका सम्बन्ध मात्र थिए ती । नेपाल फर्केर म धन्य थिएँ र ममा आत्मबल पनि उत्तिकै थियो । मलाई अवरोध दिन तपाईं पैदा हुनुभयो । अवरोध कस्तो दिनुभयो भने म त्यो हटाउन असमर्थ भएँ । त्यो चाहेर पनि हुने होइन । मैले चाहना गरेकी होइन तर मेरो चाह कसैले फुत्कायो र कति पर लग्यो भने अहिले यो घाममा कपडाविहीन शिशुझैँ आत्थुआत्थु भइरहेकी छु । किन तपाईं त्यसरी झोलुङ्गोको बच्चालाई घाममा राखेर जानुभयो ? र जानु नै भयो तपाईं कहाँ ?

तपाईं राम्रो चित्रकार हुनुहुन्छ । तपाईंको म एउटै पाठक वा दर्शक होइन । तपाईंका अनगिन्ती दर्शक-पाठक छन् । प्रिय धेरै होलान् । अहिले म ठान्छु, तपाईं त्यो हुनुहुन्न जुन मैले सोचेकी थिएँ । तपाईं धेरैका प्रिय हुनुहुन्छ र तपाईंका प्रिय पनि धेरै । तपाईं मभन्दा धेरै फरक हुनुहुन्छ र टाढा पनि । म तपाईंकहाँ पुग्न सक्दिनँ । म तपाईंसम्म पुग्न सक्दिनँ भने एक्लै पाकेर, गलेर त म सड्न मात्र सक्छु । र म सड्न चाहन्नँ । तपाईंकै प्रेरणा हो, म फुल्न चाहन्छु । म अब आफ्नो काम सुरु गर्न चाहन्छु ।

(‘ओ दृश्य !’ भनेर कोही बोलाउँदै छ गाडीको हर्नसहित । को हो ? म यसरी एकाग्र भई पढेको किन देखिनसहेको ? के बित्यो ? सडकमा हेर्छु, छिरिङ रहेछ । ‘धत् लाटा !’ भनेर ऊ हप्काउँछ । म हाँस्दिनँ । ट्राफिक लाइट हरियो भइसके पनि ऊ हुत्तिन खोज्दैन । किन मलाई झिजो लगाइरहन्छ ? ल जाऊ-जाऊ भन्ने सन्देश हातैको पारले दिएर म उसलाई पन्छाउँछु । र फेरि पढ्न थाल्छु ।)

*तपाईं जसरी मबाट टाढिनुभयो म पनि त्यसरी नै तपाईंबाट भाग्न चाहन्छु । टाढा पुगेर मात्र आफूलाई शान्त पार्न सक्नेछु । शान्त ठाउँमा जान चाहन्छु जहाँ तपाईंको छलबाट म मुक्त हुनेछु । तपाईं भन्नुहोला, म काममा हिँडेको थिएँ भनेर । म पनि काममै हिँड्छु । तपाईं भन्नुहोला, मलाई मौकै मिलेन । म पनि भन्नेछु, मलाई मौकै जुरेन । म अब क्यामरा भिरेर हिँड्दै छु, टाढा जसरी तपाईं एकाएक ओझेल हुनुभयो ब्रस लिएर । म तपाईंका आँखाको परिवेशभन्दा बाहिर निस्कन चाहन्छु । मेरो काममा तपाईंले दिएको चोट बिर्साउने मलम हुनेछ यो । र तपाईंलाई थाहा छ, म निराश केटी होइन । यो पनि तपाईंलाई थाहा होस्, म बदलाको भावनाले डोरिएकी छैन ।*

*तपाईंले*
*बिर्सिएकी*
*पाठक ।*

चिठी पट्ट्याएर खल्तीमा हाल्दै रेस्टुरेन्टको छततिर मेरो छाया तन्किरहेको थियो । पल्पसासँग कुनै दिन बसेकै टेबल पुगेँ । त्यही कुर्चीमा बसेँ जहाँ ऊ मसँग तात्तिएकी थिई ।

‘म किन नेपाल फर्किएँ तपाईंलाई थाहा छ ?’ उसले सोधेकी थिई ।

‘किन ?’ मैले ‘स्पाइडर म्यान’ र ‘ह्यारी पोटर’ मन पराउने पश्चिमेली समाजको नयाँ चरित्र विश्लेषण गरिएको लामो लेख पढ्दापढ्दै रोकेँ । ह्यारी पोटरले पूर्वेली समाजलाई पनि उत्तिकै आक्रमण गरेको छ । एउटी बच्चीकी एक्ली अभिभावक किताब लेखेर संसारकै धनी लेखक बन्नु उल्का हो । यो साठी भाषामा उल्था भइसकेको छ भने दुई सय देशमा छापिइसकेको छ । कम्तीमा यसले टेलिभिजन, कम्प्युटर र भिडियो गेमको दबदबाबीच बालबालिकालाई किताब पढ्ने लत लगाइदिएको छ भन्ने लेखको सार आउँदै थियो । उसले रोकी ।

‘मलाई बुवामुमाको एटिच्युड ठीक लागेन,’ उसले भनी ।

पत्रिका पन्छ्याएर उसलाई हेरेँ । ऊ मेरा आँखामा सीधा प्रवेश गरिरहेकी थिई । मेरो ध्यानाकर्षण गर्ने उसको नियत नभए त्यसरी एक्कासि त्यस्तो प्रसङ्ग निकाल्ने थिइन । ऊ आफूलाई बुझाउन खोजिरहेकी थिई । म पनि उसलाई गलत बुझ्न सक्थेँ । भिन्न सांस्कृतिक र भौगोलिक हुर्काइका कारण म उसलाई पर्याप्त नबुझिरहेको हुन सक्थेँ । ऊ मलाई किन राम्ररी सम्झाउन चाहन्थी भन्ने मैले ख्याल गरिरहेको थिइनँ । प्रेम गर्नु छ भने समझदारी पहिलो सर्त हो भन्ने उसको सन्देश थियो सायद ।

'कसरी ?' मैले सोधेँ ।

'उहाँहरू मलाई सधैँजसो भन्ने गर्नुहुन्थ्यो,' उसले भनी- 'त्यो केटासँग किन घुम्ने गर्छ्यौ ?'

'कुन केटा ?'

'मैले कुनै केटा भनेकी होइन,' उसले स्पष्ट गर्न खोजी- 'म कुनै साथीसँग छु भने उहाँहरू त्यसको पृष्ठभूमि पहिला बुझ्न खोज्नुहुन्थ्यो । उहाँहरूको एउटै धारणा के भयो भने मैले कम पढेको कोहीसँग पनि सङ्गत गर्नु हुन्न ।'

मैले उसलाई हेरिरहेँ ।

'किन अरे भने,' उसले भनी- 'कम पढ्नेसँगको सङ्गतले म बिग्रन्छु ।'

'तिमी के भन्थ्यौ त ?'

'उहाँहरू मलाई बुझ्न सक्नुहुन्थेन,' उसले भनी ।

'किन ?'

'आफूभन्दा धेरै पढेकासँग सङ्गत गर्न थालूँ भने मेरा सङ्गातीका बाबुआमाले पनि भन्न सक्नेछन्, किन आफूभन्दा थोरै पढेकी केटीसँग हिँडेको भनेर,' उसले भनी- 'होइन ?'

'हो ।'

'त्यो सुनेर मेरा बुवामुमामा के गुज्रेला भन्नोस् त ?'

'तिमी उहाँहरूसँग यस्तो कुरा गर्दिनौ ?'

'हाम्रो भाषा फरक छ,' उसले भनी ।

'के उहाँहरू अङ्ग्रेजी ... ?'

उसले मलाई रोक्दै भनी- 'भाषा भनेको नेपाली, अङ्ग्रेजी भन्न खोजेकी होइन । तपाईं के कुरा भन्न खोज्नुहुन्छ र बुझाउन खोज्नुहुन्छ भन्ने हो । म

नेपाली बोलूँ वा अङ्ग्रेजी, त्यो त माध्यम मात्र हो तर बोल्न खोजेको विषय अर्काले बुझेको छ कि छैन भन्ने महत्त्वपूर्ण हो । पूर्वपट्टि फर्केको झ्यालमा बसेर पश्चिमपट्टिको झ्यालतिर फर्केको मान्छेलाई सूर्य उदायो भनेर चाहे तपाईं नेपालीमा भन्नुस् वा अङ्ग्रेजीमा, उसले बुझ्दैन । किनभने ऊ त्यो झ्यालतिर छैन । भाषा झ्यालजस्तो हो तर तपाईं आफ्नो झ्याल खुला राखेर मात्र बाहिर हेर्न सक्नुहुन्छ ।'

'त्यही कारण तिमी नेपाल फर्केको त ?'

'उहाँहरू पीएचडी गरेको केटासँग मैले बिहे गर्नुपर्छ भन्ने मान्यतामा हुनुहुन्छ,' उसले भनी- 'त्यो कसरी सम्भव छ ? के मैले लभ गर्नुअघि डिग्री हेर्नुपर्ने ?'

'त्यही त !'

'मानिसलाई वर्गीकरण गर्ने उहाँहरूको सोचाइको छहारीमा म हुर्किन सकिनँ,' उसले भनी ।

'जेनरेसन ग्याप भन्न सकिन्छ,' मैले भनें ।

'होइन,' उसले भनी- 'त्यो होइन । मैले काठमाण्डू फर्केपछि आफ्नै उमेरसमूहका साथीमाझ पनि त्यही सोच पाएँ ।'

'कसरी ?'

ऊ एक दिन आफ्नो चोकनेरिको सारीपसल पसेकी रहिछ । ऊ आफूलाई नेपालबारे अपडेट गर्न चाहन्थी । सारीपसलमा मान्छेसँग धेरैबेर कुरा गर्न पाइन्छ। तरकारी-पसलमा त जो पनि हतारमा हुन्छ । त्यहाँ काठमाण्डूबाहिरको एउटा केटासँग कुराकानी गरेको उसकी साथीलाई चित्त बुझेन ।

'अनि ?'

उसकी साथीले कानमा फुसफुस गर्दै हप्काइछ ।

'के भनेर ?'

'यस्तो केटासँग किन छिल्लिरहेको रे ?'

मैले फेरि उसलाई चुपचाप हेरिरहें ।

'अरे बाबा !' उसले भनी । होत्त नि, ऊ कोसँग के कुरा गर्छे अरूलाई छु मतलब ? के उसले व्यक्तिको स्तर हेरेर व्यवहार गर्नुपर्छ ? के ऊ बाहिरको केटा हो वा ऊ गरिब छ भन्दैमा कुरै गर्न नहुने ?

'त्यही त !'

'जेनरेसन ग्याप होइन,' उसले भनी । स्वाभाविक हो, ऊ यस्तो वातावरण बेहोर्न सक्दिनँ जहाँ अरूसँग व्यवहार गर्नेबारेमा कसैले धर्को कोरिदेओस् । 'एटिच्युडको समस्या हो यो,' उसले भनी ।

'हो,' मैले सही थापेँ ।

'काठमाण्डूमा पनि त्यही समस्या छ भनेर,' मैले जिस्क्याएँ- 'अमेरिका त फर्किन्नौ ?'

'तपाईं मलाई बुझ्न चाहनुहुन्न,' उसले हप्काई- 'मैले भन्न खोजेकी के भने मान्छेमा कुनै पनि प्रकारको भिन्नता छैन, मात्र एटिच्युडको भिन्नता छ ।'

'नेपालीहरू दरिद्र छन् भन्न खोजेकी ?'

'होइन,' उसले भनी- 'ल सुन्नुस् ।'

म उसका आँखामा सीधा हेरिरहेको थिएँ ।

'तपाईंलाई उदाहरण दिऊँ,' उसले भनी । 'सेप्टेम्बर ११' को घटनापछि अमेरिकामै पनि विदेशीप्रति कतिपय गोराहरूको भित्री हेराइ छर्लङ्ग भयो । एक दिन ऊ बसमा गइरहेकी रहिछ । ऊअगाडिको सिटमा एउटा एसियाली आयो भनेर एउटा गोरा अर्को सिटमा सरेछ । 'बुझ्नुभयो ?' उसले मलाई सोधी ।

'उदेक छ !'

'योजस्तो भेदभाव के हुन्छ ?'

'हो ।'

कतिपय कन्जरभेटिभ अमेरिकी त एसियाली रोगन देख्नै नहुने, नाक खुम्च्याएजस्तो गर्ने उसलाई निको लागेन । ऊ राँकिएकी थिई- 'ए बाब्बा, ह्वाट डु यु मिन ?'

'है !'

मैले कफी लिएँ । ऊ सास तान्दै थिई । उसको अनुहारमा भुमरी परेजस्तो भयो । आँखीभौँ घरी खुम्च्याउँथी, घरी तन्काउँथी । म बाहिरफेर हेर्न खोज्थेँ, ऊ मलाई ट्वाल्ल हेर्थी । मलाई नियन्त्रण गर्ने उसको मनसुबा प्रस्ट थियो ।

'म अमेरिकाबाट आएकी होइन ।'

मैले अचम्म मान्दै उसलाई हेरेँ । 'हो, म अमेरिकाबाट आएकी होइन, म अमेरिकामा बस्थिनँ ।'

'कहाँबाट आएकी त तिमी ?'

'न्युयोर्कबाट ।'

'भन्नाले ?'

'न्युयोर्क अमेरिका होइन,' उसले भनी- 'अर्को सहरमा बसेकी भए मैले अझ धेरै कट्टरपन्थीहरूसँग सङ्घर्ष गर्नुपर्थ्यो होला ।'

'गजबको कुरा गर्छ्यौ !'

'जस्तो तपाईं उत्तर कोरियामा बस्नुहुन्छ भने तपाईंको सोचाइमा सीमाहरू हुर्किन्छन्,' उसले भनी । त्यो त हो, ठाउँ भनेको सामाजिक, राजनीतिक, आर्थिक र सांस्कृतिक परिवेश हो । परिवेश सबैभन्दा ठूलो शिक्षक हो । जस्तो न्युयोर्क जहाँ संसारभरिका अनेकानेक रङ्गका मानिस बसोबास गर्छन्, त्यहाँका रेष्टुरेन्टहरूमा हरेक दिन संसारभरिका परिकार पाक्छन्, चोक र गल्लीमा संसारमा बोलिने लगभग सबै भाषा बोलिन्छ, त्यहाँ मान्छेहरूको इन्द्रेणी छ भन्न सकिन्छ, देशीय, क्षेत्रीय, जातीय मिश्रण र अन्तरक्रियाले त्यहाँ बस्नेहरूबीच हार्मोनी होला, अर्कासँग व्यवहार गर्ने मामिलामा हम्मेसि कसैले भेदभाव नगर्न सक्छ । गर्नुअघि दुईपटक सोच्ला ।

'तिमी के ठान्छ्यौ ?' मैले सोधेँ- 'जस्तो म नेपालमै बस्छु, यहीँ काम गर्छु । यहीँ रमाइरहेको छु, के मेरो सोचाइमा तिमीसँग व्यवहार गर्ने मामिलामा सीमितताहरू छन् ?'

'मान्छेहरू मलाई बुझ्दैनन् ।'

'ठाउँहरूप्रति तिम्रो पूर्वाग्रह रहेछ ।'

'मेरो भोगाइ हो ।'

'यो पनि एटिच्युडको समस्या हो ।'

'होइन,' उसले भनी- 'सभ्यताले मानिसलाई फरक पार्छ भन्न खोजेकी हुँ ।'

'तिम्रो बुवा पनि त न्युयोर्कमै बस्नुहुन्छ नि ?'

'तपाईंलाई प्रस्ट गरूँ, हो उहाँ न्युयोर्कमै बस्नुहुन्छ, तर भौतिक रूपमा मात्रै । मानसिक रूपमा उहाँ पुरानो समय र ठाउँमा हुनुहुन्छ, न्युयोर्क बस्ने सबै सभ्य भन्न खोजेकी होइन मैले । मेरो तर्क के हो भने ठाउँले सभ्यताको परिचय दिन्छ तर तपाईं काठमाण्डू बसेर न्युयोर्क बस्नेभन्दा सभ्य पनि बन्न सक्नुहुन्छ ।'

'अर्थात् म त्यति सभ्य बन्न सकेको छैन ?'

'म दोष लगाउन्नँ,' उसले भनी- 'तर तपाईंमा पनि मैले समस्या देखेँ ।'

'के ?'

'केही साधारण समस्या छन् तपाईंमा,' उसले भनी- 'जोसँग पनि हुन सक्छ ।'

'जस्तो ?'

'तपाईं पनि मलाई सरल ढङ्गले हेरिरहनुभएको छ,' उसले भनी- 'मेरा दृष्टिकोणहरू तपाईं वास्ता गर्न चाहनुहुन्न भन्ने मलाई लाग्छ ।'

'कसरी ?'

'तपाईंले कहिल्यै यहाँका विषयहरूबारे मसँग गम्भीर छलफल गर्न चाहेको मैले भेटिनँ,' उसले भनी ।

'त्यो त होइन ।'

'म सजिलै पट्टिएँ भन्ने तपाईंलाई लागेको होला,' उसले भनी- 'म तपाईंकी प्रशंसक हुँ । तपाईंका पेन्टिङको ।'

'मैले त्यस्तो ...,'

'तपाईंले आफ्नो जीवनमा मेरो भूमिका खोज्नुभएको आभास मैले पाएकी छैन,' उसले भनी- 'शारीरिक र व्यावहारिकबाहेक पनि धेरै पक्ष हुन्छन् भन्ने तपाईंलाई लागेजस्तो छैन । त्यसैले म यस्तो सोच्न बाध्य छु ।'

'मेरो कम बोल्ने बानीले ।'

'होइन,' उसले भनी- 'अरूको उपेक्षा गर्ने स्वभाव हो ।'

'कसरी भन्न सक्छ्यौ ?'

'जहिले पनि मलाई भेट्दा तपाईं मेरो लुगाको प्रशंसा गर्नुहुन्छ, आजै पनि गर्नुभयो, होइन ?' उसले भनी- 'तपाईं के ठान्नुहुन्छ भने केटीहरू आफ्नो ड्रेस मन पराइदिएको सुन्न चाहन्छन् ।'

'चित्रकार भएकाले मेरो पहिलो ध्यान रङ्ग र पृष्ठभूमिमा जान्छ ।'

'त्यो होइन,' उसले भनी- 'म कसरी खुसी हुन्छु भन्ने तपाईंको सोचाइमा अभिमानी पुरुषत्वको गन्ध आउँछ । तपाईंले मलाई चिन्नै खोज्नुभएको छैन ।'

'म कसरी तिमीलाई विश्वास दिलाऊँ ...' भन्दै थिएँ, ऊ उठेर हिँडी ।

ऊ हिँडेको बाटो हेरिरहेँ । ऊ फर्किनँ ।

मेरो टेबलअगाडि कुर्चीमा आज ऊ छैन । मैले विश्वास दिलाउन नसकी ऊ उठेर हिँडेकी, अब कहिल्यै फर्किनेछैन ।

बिल माग्दा त्यही वेटर आइपुग्यो जो मसँग धेरैबेर कुरा गर्न सधैँ हत्ते गर्छ। हरेक भेटमा नयाँ विषयको जिज्ञासा राख्छ। लम्किँदै आयो। ऊ हाँसेको देखेर आज म बढी रिसाउन सक्छु।

'दाइ, तपाईं धार्मिक हो ?'

'होइन।'

'किन दाइ ?'

मैले पैसा तिरेर उठ्दै भनेँ- 'धर्मले अर्को जुनी सपार्ने वचन दिन्छ। यो जन्ममा सङ्घर्ष गर्न सिकाउँदैन।'

'बुझेँ दाइ।'

'के बुझ्यौ ?' फटाफट हिँड्दै थिएँ, पछाडि फर्केर सोधेँ।

'तपाईंको कुरा।'

'तिमी मलाई बुझ्न सक्दैनौ।'

'बुझिसकेँ।'

'मैले बुझेँ भन्ने मान्छेले कहिल्यै बुझ्न सक्दैन,' मैले भऱ्याङ झर्दै भनेँ।

'किन दाइ ?' ऊ मलाई पछ्याइरहेको रहेछ।

'बुझिसकेपछि बुझ्न के बाँकी रह्यो त ?'

'मैले तपाईंको कुरा बुझिसकेँ।'

'त्यसो भए तिमी बुद्ध भयौ,' मैले भनेँ- 'आँखा चिम्म गरेर बसिराख।'

उसको हाँसो तल भऱ्याङफेदसम्म आइपुगेको थियो। म गल्लीतिर छड्किएँ।



# २६

ग्यालरीतल फूलपसल खुलिसकेछ । आज त झन् साइत परेको होला, बुके किन्नेहरूको ताँती छ । कार पार्क गरेर भऱ्याङ चढ्दा फूलको बास्नाले बेग्लै ग्यालरी प्रवेश गरेजस्तो भइरहेछ । यस्तै फूल म भर्खर फर्केको पहाडतिर बारुदी गन्धभित्र छन् । हामी कति छिटो भुल्छौँ, बारुदी गन्धअघि केही वर्ष कति सुन्दर घाम र बतासको याम थियो । खुलापन र सञ्चारले जताततै नयाँ चेतनाको ऋतु सुरु भएको थियो ।

अखबार टेबलमा अल्झिरहेको रहेछ । कसैले नपढी बसेको पत्रिका चाखलाग्दो हुन्छ । नबिटुलिएको फूलजस्तै । बिहानी अखबार एक-दुएक हातमा पर्नासाथ सागझैँ ओइलाउँछ । मलाई त सर्लक्क परेको सेतो कागजमा सुकिला अक्षरको समाचारले नयाँ दिन प्रकट गरेको आनन्द लाग्छ । त्यसमा नयाँ सम्भावनाका रेखा र स्वर कुँदिएका हुन्छन् । दिन सुरु गर्न सबैभन्दा पवित्र काम त्यही हो जस्तो लाग्छ, अक्षर फुटाउनु । यी अक्षरले देशदेशावरका समस्या खोतल्छन् । पाठकलाई सोच्न बाध्य तुल्याउँछन् । चेतनाको विस्तार गर्छन् । त्यही कारण हातमा पत्रिका राखेपछि भेटिने जोकसैलाई 'गुड मर्निङ' भन्न मन लाग्छ ।

प्रधानमन्त्री हतियार खरिद गर्न बेल्जियम पुगेको पुरानो पत्रिका टेबलमा किन अल्झिरहेको हो ? तलको पसले भने कताबाट हो, भ्यानभरि फूल ल्याउँदै गरेको म झ्यालबाट देख्छु । प्रधानमन्त्री फर्केपछि यी फूलमा पनि बारुदको गन्ध पोतियो । बम पड्केको सुनेर सडकपेटीमा मान्छेहरू दौडिरहेका छन् । बिहान पनि हाम्रो टोलतिर एउटा पड्केको थियो ।

ग्यालरीभन्दा दुई तलामाथि छत उक्लिन्छु । पश्चिमपट्टि टाढा आकाशसम्म चुलिएको एउटा थुम्कामाथि नयाँ आकार देख्छु । त्यो अस्पष्ट खाकाले क्रमशः

सुन्दर रूप प्रकाशित गर्न थाल्छ । त्यो गुम्बा रहेछ । कुनै दिन म गुम्बा पस्न सक्छु भनेकी थिई पल्पसाले । आँखा केहीबेर हटाउन सक्दिनँ, क्रमशः गुम्बाको खाका अस्पष्ट हुँदै जान्छ । धमिलिएका आँखासामु झरी परेको देख्छु । 'फूलको आँखामा फूलै संसार !'

पानी दर्किए पनि परेवाहरू छतमाथिका तार हुँदी चलमलाइरहेका छन् । बादलले आकाशको नीलो छोपेको छ । निन्याउरो दिन भए पनि तल सडकमा गाडीको घुइँचै छ । टाढा कतैबाट क्यासेटपसलको आवाज आउँदै छ । मुन्तिरको एउटा किरानापसलमा एक भद्र एफएम समाचारका लागि रेडियो बटार्दै छ । लौ, हाम्रो भवनअगाडि एउटा साइबर क्याफे खुलेछ ! त्यसमाथि ल्याङ्ग्वेज सेन्टर त चलिरहेकै छ । उतापट्टि एउटा बुटिक र चोक पुग्नुअघि '९९ रुपैयाँ पसल' चलेको छ । गाउँहरू, पहाडहरू सुक्दै गए पनि राजधानी सहर क्रमशः मौलाउँदै गएको छ । एउटा म्यानपावर अफिसअगाडि जुलुसजस्तै भीड देख्छु । त्यतिविधिका मानिस कता जान लागेका हुन् ? खाडी वा मलेसिया वा कोरिया वा अफगानिस्तान वा इराक ?

पानी कतिबेर दर्केला, खै !

फुलनले चिठी छाडेकी रहिछ- 'दाइ, तपाईंको ताल देखेर म छक्क छु । फर्किएपछि मलाई खबर गर्नुहोला । एक्लै ग्यालरी खोल्न मन लागेन । तपाईं बेखबर हराएकाले म यहाँ रत्तिन सकिनँ । मलाई नियास्रो लाग्दै गएको छ ।

'यसबीच मैले एउटै पेन्टिङ बेचेँ, 'झरी' । पल्पसा दिदीले हत्ते गर्नुभयो । पैसा पनि बढी दिनुभयो । मलाई टिप्स भनेर पनि दिनुभयो । उहाँ धेरै दिनसम्म ग्यालरी आउनुभयो । पेन्टिङ हेरेर कहिल्यै थाक्नुभएन । जहिले पनि दाइ आउनुभयो ? भनेर टेलिफोन गर्नुहुन्थ्यो । आउनुभएको छैन भन्दा पनि आफैँ ग्यालरी आइपुग्नुहुन्थ्यो र दिनभरि बस्नुहुन्थ्यो । हामी तपाईंका बारेमा गफ गर्थ्यौं । उहाँले मेराबारेमा पनि सबै सोध्नुभयो । मैले भनेँ- दृश्य दाइ नभएको भए गाउँमै बाख्रा चराइरहेकी हुन्थेँ ।

'तपाईंलाई यस्तरी ध्यान दिने मैले कोही भेटेकी थिइनँ । पल्पसा दिदी धेरै राम्री हुनुहुन्छ र तपाईंलाई माया पनि गर्नुहुन्छ । नरिसाउनुहोला दाइ, म तपाईंकी बहिनी पनि हुँ, त्यही भएर यति भन्ने हक मलाई छ- त्यो दिदीसँग तपाईंको जोडी मिल्छ । उहाँ आफ्नाबारेमा बताउनुहुन्न, खालि तपाईंका बारेमा बोल्न खोज्नुहुन्छ । जान्न पनि खोज्नुहुन्छ । म तपाईंको भलो चिताउँछु । तपाईंको आफन्ती कोही

छैन । तपाईं एक्लै हुनुहुन्छ । बरु मै तपाईंको नजिक छु । तपाईं यस्तै एकलाङ्गे भएकाले यसरी हराउने गर्नुभएको छ । तपाईं अब व्यावहारिक हुनुपर्छ दाइ । मैले अहिलेसम्म तपाईंसँग केही मागेकी छैन । अनुमति दिनुहुन्छ भने म यही माग्छु– पल्पसा दिदीसँग विवाह गर्नुहोस् । तपाईं अन्तर्मुखी मान्छे । भन्न सक्नुहुन्न भने म आफैँ प्रस्ताव गरिदिनेछु । तपाईंले नाइँ भन्नुभयो भने म सहनेछैन । ग्यालरी छोडेर गइदिन्छु । गाउँ नै फर्किदिन्छु । तपाईं मलाई फकाउन आउनुपर्नेछ अनि म त्यही भन्नेछु– जबसम्म तपाईं पल्पसा दिदीलाई विवाह गर्नुहुन्न तबसम्म म फर्किन्नँ ।

'बढी लेखी भनेर माइन्ड नगर्नुहोला । कृपया, आफ्नो ख्याल राख्नुहोला दाइ ! र मैले भनेको यो कुरा मनन गर्नुहोला ।'

'तपाईंकी उही सेक्रेटरी,' भनेर उसले टुङ्ग्याएकी थिई । कहाँ के गर्दै होली ? कतै गाउँ त फर्किन ? ग्यालरीमा बसेर चम्मू भइसकेकी थिई । देशीविदेशी पाहुनासँग व्यवहार गर्न उसलाई रमाइलो लाग्न थालेको थियो । 'यसै गरी अङ्ग्रेजी बलियो हुन्छ मेरो,' भनेर ऊ आफैँ फुर्केकी पनि थिई- 'विदेशी चालचलन सिक्दै पनि छु ।'

पछि कला बुझ्न लालायित हुँदै गएकी थिई । त्यो किशोर गायकको प्रेम प्रस्ताव सुनेर बम्किएकी थिई । जीवनमा केही गर्छे, केही बन्छे भन्ने मलाई लागेको थियो । उसले ग्यालरी हेरिराखे भइहाल्थ्यो ।

फोन गरेँ । छात्रावासमा उसकी साथीले सोधी- 'कहाँ हराउनुभएको थियो तपाईं ?'

'किन ?'

'फुलन त गई ।'

लौ जा ! म चिसो भएँ ।

'कहाँ ?' मैले सोधेँ- 'गाउँ ?'

'होइन,' उसले भनी- 'क्याम्पस ।'

बल्ल हलुको भयो ।

'ए दाइ !' गायक किशोर हुर्रिंदै आइपुग्यो ।

म एउटा पेन्टिङको खाका कोर्दै बसिरहेको थिएँ । पल्पसाको सम्झनामा म केही शृङ्खला बनाउनेछु । र त्यो पहाडमा जुन आर्ट सेन्टर स्थापना गर्दै छु त्यो

उसैका नाममा चढाउनेछु । भोलि पारखीहरू रमणीय पहाडी पदयात्रा गर्दै नेपाली प्रकृतिको आनन्द लिऊन् र दुई-तीन दिनसम्म कलासाधनामा रमाऊन् । त्यसबाहिर संसार आफ्नै यत्न र सङ्घर्षमा चलिरहेको हुन्छ, भित्र म कलाको सानो संसार निर्माण गर्छु जहाँ आगन्तुकहरू फूलपात र ऋतुसँग आफूलाई भुलाएर रचनात्मक ध्यान गर्न सकून् ।

त्यसपछि एउटा पेन्टिङ गर्नेछु, ठूलो एकादशीमा फूलको तोरण वारपार गर्ने नदीको दोभानमाथि । नयाँ पुल बनेर पनि ध्वस्त भइसकेको त्यस ठाउँले मलाई बाल्यस्मृति र कल्पनारेखा दिएको छ । क्रिस्टिनाले भनेकी थिई- 'हाम्रो भूगोलमा यस्तो समय गुज्रिसक्यो । त्यही कारण हामी अगाडि छौँ– पश्चिम अगाडि छ ।'

उनीहरूले निकैअघि गुजारेको समय हामीकहाँ भर्खर आएको छ । यससँगको प्रत्यक्ष संवादमा हामी अभिशप्त छौँ । सफल पार गर्न सक्यौँ भने यो समय-नदीले हामीलाई एउटा असल गन्तव्य दिन सक्छ । कता छ खै त्यो फूलको तोरण टाँग्ने नदीपारिको रूख ? काठमाण्डूबाट हामी हाम्रा आकाङ्क्षाको तोरण आधुनिक सभ्य समयको सुरक्षित विन्दुतिर टाँग्न सक्छौँ ।

'ए दाइ,' किशोरको दोस्रो आवाजले म झस्किएँ । आरामी सोफामा म घना सोचमग्न रहेछु ।

'धेरैपछि आउनुभयो,' उसले भन्यो ।

'के छ तिम्रो हालखबर ?'

'अमेरिकन एम्बेसीमा कसैलाई चिन्नुभा' छ ?'

'किन ?'

'भिसा लिन ।'

'दिँदैनन् र ?'

'पत्याउँदैनन् ।'

'किन ?'

'म फर्किन्छु भन्ने विश्वास नमान्न सक्छन् ।'

'भन न त ।'

'के ?'

'फर्किन्छु भनेर ।'

'माने पो !'

'किन नमान्ने ?'

'नमाने के गर्ने ?'

'नजाने ।'

'हत्तेरी दाइ !' ऊ गर्जियो- 'मेरा साथीहरू सब गइसके ।'

'त्यसो भए तिमीलाई मात्र किन रोक्लान् त ?'

'रोकिहाले भने ?' उसले भन्यो- 'भिसा सेक्सनमा कति केस छ कसैलाई जान दिने, कसैलाई नदिने गरेको । श्रीमान्-श्रीमती छन् भने पनि एक जनालाई दिएर अर्कालाई रोकेको मैले भेट्या छु । कति जना रुँदै फर्क्या छन् ।'

'सबैभन्दा सजिलो के हुन्छ भने तिमी हाँस्दैहाँस्दै जवाफ देऊ,' मैले भनेँ- 'र भन, मलाई अमेरिका बस्नु छैन । नेपाल नै मन पर्छ । यही अमेरिकाजस्तो लाग्छ । म यहीँ काम गर्न फर्किनुपर्छ भन ।'

'त्यही भन्या त हो नि पहिला !'

'रिजेक्ट गरिदियो ?'

'युरोपियन भिसा रिजेक्ट भयो,' उसले भन्यो- 'उनीहरूले के भने भन्दा तिम्रो देशमा यस्तोविधि समस्या छ, कसरी फर्कौला र ? धेरै नेपालीले उता पुगेर पोलिटिकल एसाइलम मागेका छन् ।'

उसलाई क्यै गरी पन्छाइछाडेँ । कसरी जिम्मा लिने त्यस्तो कुरा ?

'अर्को अल्बम निकाल्दैनौ ?'

'प्राक्टिस गर्दै छु,' उसले भन्यो- 'फस्ट अल्बमका दुइटा सङ हिट भए । थाहा छ दाइ ? मलाई स्टेज परफर्मेन्सको निम्ता पनि आइसक्यो, तीनटा गरिसकेँ । एफएमहरूमा इन्टरभ्यु त कतिकति !'

'राम्रो भो ।'

'फ्यान लेटर कति आउँछन् थाहा छ तपाईंलाई ?' ऊ रौसियो- 'बीआईसीसीमा भएको स्टेज सोपछि त कति फ्यानहरूको टी-सर्टमा अटो दिएँ, कतिको हातमा, कतिले त टी-सर्टै फुकालेर ढाडमा पनि लेख्न लगाए ।'

'बाफरे !'

'त्यति मात्र कहाँ दाइ ?' उसले दियोमा तेल थपेझैँ गर्‍यो- 'फोन आएर चौपट छ घरमा । फ्यानहरू मध्यरातमा पनि कल गरेर आई लभ यु भन्दिन्छन् । रगतले लेख्या चिठी पनि पाएको छु । सुसाइड गर्छु भन्ने पनि निस्क्या देखेर त मलाई कत्तिखेर देश छोडूँ भा'छ ।'

'यस्ता फ्यानलाई चट्ट बिर्सेर कहाँ जाने ?' मैले सम्झाएँ- 'यहीँ बस, एक दिन तिमी राम्रो गायक बन्नेछौ ।'

ऊ के मान्थ्यो ? रन्थनिँदै गयो । उसलाई जे गरे पनि जानु छ अमेरिका । उसका साथीहरू बोस्टनदेखि एलएसम्म जहाँ पनि छन् रे ।

ऊ भन्दै गयो- 'अमेरिका नजानेहरूको घर अहिले काठमाण्डूमा थोरै भइसके होलान् ।'

'होला ।'

'अनि मलाई घरमा हेप्दैनन् त ?' भर्‍याङबाट उसको स्वर आयो ।

'हेपून्,' मैले भनेँ । ऊ तल झरिसकेको थियो ।

बल्ल शान्ति भयो ।

झ्यालबाट हेरेँ, म्यानपावर अफिसतिर तन्नेरीहरूको हूल उस्तै थियो । तल निस्कूँ भने कोही न कोही जागिरका लागि भनसुन गर्नेसँग जम्काभेट भइहाल्छ । अघि भर्खर पनि एउटा युवक भेटियो त्यसै गरी, 'फारम भरेको छु दाइ, विदेश जान ।'

'खेत बेचेर आएँ,' उसले भनेको थियो ।

अर्को युवक केहीबेरमा भेटिएको थियो जो जहाँ भए पनि काममा झुन्ड्याइदिनुपर्‍यो भन्न थाल्यो । 'के गर्छौ ?' भन्दा उसले कति सजिलोसँग मेरो टुपी रिँगायो- 'तपाईं भन्नुस् दाइ, म ढोकामै उभिन पनि तयार छु ।'

कुर्चीमा फर्किएँ । मन लागेन । फेरि झ्यालछेउ उभिएँ । आज म त्यस्तो ठाउँ जान चाहन्छु जहाँ छङछङ झरना होस् । त्यसको सङ्गीत सोझै म आफ्नो क्यानभासमा रेकर्ड गर्न सकूँ । चराहरूको आकार र आवाज टिप्न सकूँ । धानखेतको रङ्ग भर्न सकूँ । त्यस्ता दिन पनि थिए जति बेला म रङ्ग किन्ने पैसा नभएर छटपटाउँथेँ । अहिले ई यहाँ नानाथरी रङ्गहरू छन् तर रङ्गबाट भाग्ने बेचैनी छाइरहेको छ ।

कम्प्युटर खोलेपछि भने मेरो सातो गयो । इमेल ठेगाना क्र्यास हुने गरी चिठी आएका रहेछन् । ओहो, त्यो डच केटीका कति चिठी ! के भएछ त्यसलाई ? सबैभन्दा पछिल्लो चिठी लौ हिजोकै रहेछ । चेतावनीसहित लेखेकी रहिछ- 'तिमी जवाफ दिन्नौ भने यो मेरो अन्तिम इमेल हुनेछ ।'

हो पनि, दर्जनौँ इमेलको रेस्पोन्स नपाएपछि ऊ बिचरीले गरोस् के ?

सबै क्लिक गर्दै गएँ, सिलसिलाबद्ध पत्रहरूमा उसले मेरो काम र नेपालको स्थितिप्रति खुबै चासो दिएकी रहिछ । लौ बधाई छ, ऊ त यहाँ रिपोर्टिङ गर्न आउँदै रहिछ ।

उसले सुरुतिरको इमेलमा लेखेकी रहिछ- 'नेपाल मेरो पहिलो अन्तर्राष्ट्रिय एसाइन्मेन्ट हो, वार रिपोर्टिङको ।'

ए मोरी, के गछ्र्यौ यहाँको वार कभरेज ?

म तुरुन्त जवाफ दाखिल गर्छु- 'वेलकम छ नेपालमा तिमीलाई, ए मेरो कलाकी प्रशंसक, दूर देशकी पत्रकार !'

यस्तै भाका गरेर म उसलाई मेल गरिसकेपछि वाइन पिउन थाल्छु । उस्, ढुसी परेको छैन होला त यो ? यत्तिका महिना भयो खाली बोतल किन खोलेको ? धत् भन्दै म त्यसलाई मिल्काउँछु र नयाँ खोज्नपट्टि लाग्छु । कहाँ छन् खै वाइनका बोतलहरू ? शुभकामना कार्डसहितको सानो कागजी झोलाबाट बोतल झिक्दा झस्किन पुग्छु, त्यही बोतल त पल्पसाले पार्टी भएको साँझ ल्याएको !

अहँ, खोल्न सक्दिनँ । वाइन ओपनर पर सार्छु । केहीबेर तिलमिलाउँछु र झ्यालबाहिर सडक हेर्छु– त्यो डच केटी त हस्याङफस्याङ यतै पो आउँदै छे । ए, नेपाल आइपुगिसकेकी रहिछ । कहिले होला ऊ छट्टचाएर यता हान्निएकी ? कति दिन भयो ? अन्तिम चान्समा ग्यालरी हेर्न आएकी हो ?

'सरी क्रिस्टिना,' म ढोकामा उभिएर याचना गर्छु । ऊ त्यसरी नै मेरो छातीमा मुक्का हान्छे जसरी पल्पसाले पुरानो गोआको चर्चअगाडि मलाई हानेकी थिई । पछाडि भिरेको झोला टेबलमा राखी र ग्यालरीका भित्ता हेर्न थाली । छक्क परिहोली, उसले जे भनेकी थिई मैले भित्तालाई त्यही गरेको थिएँ ।

'कतिपल्ट मैले इमेल गरेँ, कतिपल्ट मैले फोन गरेँ र कतिपल्ट म यहाँ ढोका खुलेको छ कि भनेर हेर्न आएँ, थाहा छ ?'

'म अनुमान गर्न सक्छु ।'

'सक्दैनौ तिमी,' ऊ थर्काउँछे र भित्तातिरै आँखा टाँस्छे ।

'कलाकारहरू यस्तै हुन्छन् भन्ने मलाई थाहा छ,' उसले भनी- 'तर यो हदसम्मको सनक मैले युरोपमा भेटिनँ ।'

'कस्तो सनक ?'

'पहिला-पहिला दङ्ग परेर इमेल गर्ने,' उसले भनी- 'पछि त्यत्रोविधि सोधखोजको टेरपुच्छर नलगाउने ।'

'तिमीलाई थाहा छैन म कहाँ थिएँ र के गर्दै थिएँ ।'

'म भोलि फर्किंदै छु,' उसले भनी ।

मैले नपत्याएको हाउभाउमा टार्न खोजें । ऊ किन मान्थी, भित्ताबाट आँखा मतिर सारेर भनिहाली- 'ए चित्रकार महोदय, मैले भनेको सुनेको हो ? काठमाण्डूमा यो मेरो आखिरी दिन हो ?'

'के भो त ?'

'मैले के भनेँ ?' ऊ जङ्गिई- 'मैले के भनेँ भने म भोलि आफ्नो देश फर्किंदै छु ।'

'मैले रोकेँ र ?'

'मैले त्यसो भनेँ ?'

'तिमीलाई त्यस्तो भावना पऱ्यो कि भनेर ।'

'कहीँ नपाएर होस्,' उसले भनी ।

ऊ भित्तातिरै टोलाई । यसो पछि हट्ने अनि त्यही चित्र दोहोऱ्याई-तेहऱ्याई हेर्ने गर्न थाली । यस्ता दर्शक विरलै पाइन्छन् । म उसलाई केले स्वागत गरूँ ? तत्काल गायब भएँ र दुई मिनेटमै त्यहाँ उपस्थित भएँ ।

'एक्सक्युज मी,' मैले भर्खर भेटेझैँ गरी तल फूलपसलबाट ल्याएको मगमग बास्नादार बुके उसका हातमा थमाउँदै भनेँ- 'तिमी आएर मेरो ग्यालरीको शोभा बढेको छ ।'

'थ्याङ्क यु,' उसले मेरा आँखामा हेर्दै भनी- 'मैले यसको अपेक्षा गरेकी थिइनँ ।'

'यो कुनै सरप्राइज होइन ।'

'ठूलो सरप्राइज त यही भयो,' उसले भनी- 'तिमी आज भेटियौ ।'

'तिमीलाई भेट्न पाउनु नै मेरा लागि झन् ठूलो सरप्राइज भयो ।'

'किन ?'

'तिमीजस्ता पारखी मेरा मार्गदर्शक हुन् ।'

'वाह, वाह,' उसले नाक फुलेको अभिनय गर्दै भनी- 'म पुलपुलिएँ !'

'मैले के गरेँ ?'

'केही गरेनौ ।'

'अनि ?'

'तिम्रा शब्दले मलाई बेलुन बनाए, म उड्दै छु ।'

'के मेरा शब्द हावा हुन् ?'

'मैले त्यसो भनेँ ?'

'बेलुन उडाउन त हावा भर्नुपर्छ नि ।'

उसले मेरो छातीमा फेरि मुक्का हानी । मैले उसको हात समातेर भनेँ- 'म वास्तवमै आज खुसी छु तिमीलाई यहाँ पाएर !'

'म त भोलि फर्किने,' उसले भनी । अनि आँखीभौँ उचालेर मेरो प्रतिक्रिया हेर्न खोजी ।

'कस्तो लाग्यो ?'

'के ?'

'भित्ताहरू ?'

'सोच्दै छु,' उसले भनी- 'यति पर्फेक्ट रङ्गरोगन त नगरे हुन्थ्यो !'

'किन ?'

'किनभने,' उसले भनी- 'म यो ग्यालरीको प्रेममा फस्न सक्छु ।'

'ठीकै भयो ।'

'के ?'

'म तिमीसँग फस्नुपर्दैन,' मैले भनेँ- 'तिमीलाई भित्ता भए पुग्ने रहेछ !'

फेरि मेरो छातीमा मुक्का हानी ।

हामी एउटा होटल गयौँ । अपराह्नको सिरसिरे हावा काट्दै मैले एउटा होटलको पार्किङमा गाडी घुमाएँ । बार शून्य थियो । उसले पियानोतिर आँखा लगाई जहाँ एक विदेशी वृद्ध औँला चलाउँदै थिए ।

'पियानो बजाउन सजिलो छ,' उसले भनी- 'मीठो बजाउन उत्तिकै गाऱ्हो छ ।'

'जे पनि त्यही त हो ।'

'जस्तो पेन्टिङ भन्न खोजेको ?'

'तिमी छिटो कुरा बुझ्छ्यौ ।'

'मैले छिटो कुरा बुझेको तिमी छिटो बुझ्छौ,' उसले भनी र पियानोमा झुत्तिरहेका वृद्धतिर हात हल्लाई ।

'अनि के अरे ?' मैले सोधेँ- 'तिमी कहिले फर्किने रे ?'

'भोलि ।'

'समस्या यसैमा छ,' मैले भनेँ ।

'के ?'

'पत्रकारहरूको हतारले नै सब थोक बिगार्छ,' मैले भनेँ- 'बिगारिहाल्छ नभनौँ तर उनीहरू कति हतार गर्छन् भने केही पनि पूर्ण हुन पाउँदैन ।'

'मतलब ?'

'किन तिमीलाई देश फर्किने आतुरी ?' मैले भनेँ- 'पत्रकारहरूले हतार नगरे घटनाहरू यति तीव्र हुन्थेनन् !'

'मैले आफ्नो एसाइन्मेन्ट सकेँ ।'

'कस्तो एसाइन्मेन्ट हो त्यो ?' मैले भनेँ- 'जब यहाँ एकपछि अर्को घटना हुँदै छ, परिस्थिति झन्झन् जटिल भइरहेको छ, तिमी कसरी मेरो एसाइन्मेन्ट सकियो भन्दै भाग्न सक्छ्यौ ?'

'सक्छु,' उसले भनी- 'हेर न !'

'प्यारासुट जर्नालिस्ट त्यसै भनिएको होइन ।'

'अब तत्काल लेख्ने स्टोरी छैन ।'

'म दिन्छु नि त ।'

'के ?'

'मैले बेहोरेको घटना,' मैले भनेँ र वाइन सिनित्त पारेँ । 'मैले भोगेको घटना सायद तिम्रा लागि गतिलो स्टोरी बन्न सक्छ ।'

ऊ ट्वाल्ल परी ।

'म आन्दोलनकारीको लगभग अपहरणमा परी पहाड फर्किएँ, आफ्नै जन्मगाउँ र थातथलोमा नयाँ परिवेश देखेँ, त्यसपछिका घटना अहिले सम्झँदा आङ सिरिङ्ग हुन्छ, मैले आफ्नो साथी गुमाएँ र आफ्नी प्रेमिका पनि ... ।'

त्यसपछि भने म बहकिँदै गएँ । के त्यसरी बढी पिउनु हुन्थ्यो ? पल्पसाका बारेमा सुनाउन खोज्दै थिएँ, ऊ मलाई थुमथुम्याउन थाली । हो, म निकै बहकिँदै छु । हजुरआमासँगको पछिल्लो भेट सम्झाउँदा ऊ पनि भिमल हुन लागी ।

पियानोको आवाज बढ्दै गएको थियो । अग्लो मैनबत्ती हाम्रो टेबलमा बल्यो । मेरो दशा चाल पाएपछि उसले सान्त्वनाका शब्दहरू प्रयोग गर्न थाली । घर फर्किने हतारमा मैले उसलाई के भनेँ, सम्झिन सक्दिनँ । भोलिपल्ट बिहान हेर्दा मेरो कमिजको खल्तीमा उसले राखिदिएको गुलाबको एउटा फूल थियो ।



# २७

'क्रिस्टिना, कफी लिऊ ।'

'म लिन्नँ,' ऊ ग्यालरीमा हल न चल भएर बसिरही।

'तिमी खुरुक्क उता बस, उता रिसेप्सनतिर ।'

'तिम्रो यो पेन्टिङ नसकिएसम्म म जान्नँ,' उसले ढिपी कसी ।

म पल्पसा सिरिज गर्दै छु, यो छैटौँ क्यानभास हो जसमा मलाई धेरै खुलदुली र धपेडी भइरहेको छ । म रङ्ग मिलाउन सकिरहेको छैन । अघि तानेको रेखालाई उचित छाया दिन सकिरहेको छैन । पल्पसाको आकृतिमा एकसरो आशाको रेखा कुँदेको छु र त्यसलाई अबिरको रङ्ग दिन खोज्छु तर रगत लिपेजस्तो भइरहेछ । अबिर र रगतको भेद छुट्ट्याउन सकिरहेको छैन । यो क्यानभासले मसँग बढी नै माग गरेको छ। मलाई झिजो लागिरहेछ क्रिस्टिना र मैले रचना गरिरहेको समयको । म समय र परिवेशमुक्त भएर यसमा घोत्लिन चाहन्छु । ऊ मान्दिन ।

'प्रकाश र छाया पनि कति मिलेर बसेका छन् भने,' ऊ जान्ने टोपलिएर मेरो अघिल्लो क्यानभासको वर्णन गर्छे- 'म कतै पहाडको छहारीमा बसेर यो चराचर जगत् नियाल्दै त छैन ?'

'तिमी मलाई एउटा सहयोग गर्न सक्छ्यौ ?' म विनयी बन्छु ।

'के ?'

'केहीबेर बाहिर टहली आऊ ।'

'म नबोली बसिरहन्छु,' ऊ अड्डी कस्छे- 'तिमी सोच, यहाँ अरू कोही छैन। म पनि छैन ।'

'हेर माई डियर कुइरिनी,' म भन्छु- 'यहाँ म आफैँलाई पनि भुलेर चित्र गर्न खोजिरहेको छु । तिमी किन बुझ्दिनौ ?'

'हवस् चित्रकार महोदय,' ऊ भन्छे- 'म किन अरूको भार भएर बसिरहूँ ?'

ऊ कति बेला निस्किई पत्तो भएन । एकान्तले बल्ल छोप्यो । म पल्पसाको त्यो क्षण उतार्न खोज्दै छु जति बेला उसलाई मैले अन्तिमपटक स्पर्श गरेको थिएँ । म बाहिर निस्कने बेला उसलाई छुन पुगेको थिएँ । त्यही हो ऊसँग मेरो आखिरी भेट । यो सिरिज मेरो सर्वोच्च परीक्षा हो । यसमा उत्तीर्ण हुन सकेँ भने म आफ्नो देशको एउटा कालखण्डको रेखालाई रङ्गबद्ध गर्न सफल हुनेछु । र आफ्नो जीवनको पनि ।

क्रिस्टिनाले अघिल्लो दिन सोधेकी थिई- 'रङ्गको भाषा सर्वव्यापी हुन्छ । तर तिमी नेपालीपन प्रकट गरिरहेका छौ । कसरी ?'

'रङ्गको मौलिक नेपालीपन हाम्रा प्राचीन कलाकारहरूले धेरै सम्पदामा आविष्कार गरिसकेका छन्,' मैले भनेँ- 'म त अनुयायी मात्र हुँ ।'

तैपनि आनन्दानुभूति दिने रङ्ग कताकति रेखाहरूसँग जिस्किएजस्तो लाग्छ । रेखाले वेदना खोल्न चाहिरहेजस्तो लाग्छ । रङ्गसँग द्वन्द्व सुरु भएपछि रेखाहरू बिलाउँछन् र न्यानोपन छाउँछ ।

कताकति खाली ठाउँ छाड्नु भनेको रङ्ग भर्न कन्जुस्याइँ होइन, त्यो त ब्रस-घर्षणको गणित र विज्ञान पनि हो । त्यसमा हामी रहस्य भेट्न सक्छौँ । हाम्रा सामु वास्तविकता खतरनाक छ । यसलाई कस्तो रङ्ग दिएर दर्शकको कस्तो मनोभाव सिर्जना गर्ने भन्ने निकै चुनौतीपूर्ण छ । त्यस्तो चित्रण गर्न सकिनँ भने म असफल हुनेछु ।

कलाकारले आफ्नो मान्यता प्रकट गर्न एउटा शैली विकास गर्छ । त्यो मान्यता आफैँमा एउटा मन्तव्य पनि हो । समकालीन नेपालबारे म आफ्नो दृष्टिकोण दिन चाहिरहेको छु पछाडिपट्टिको चित्रमार्फत जसमा निश्चित राजनीतिक धारणा छ । क्रिस्टिना बुझ्छे । ऊ त्यसैबारे धेरै प्रश्न गर्न खोज्छे ।

मैले लामो यात्रा गरेँ र यी केही चित्रहरू मेरो त्यही भ्रमणका छवि हुन् । तिनमा मेरो विशेष आग्रह झल्किन सक्छ । माफी चाहन्छु, म तटस्थ हुन सकिरहेको छैन । समयको भाषा निर्मम छ र म त्यससामु पराजित हुन पनि सक्छु । म एक्लै यो ग्यालरीलाई एउटा मञ्च बनाएर स्थापनाहरूविरुद्ध लडिरहेको देखिन सक्छु । यी चित्रमा त्यस्तो खाले ऊर्जा छ । एउटा शक्ति छ । म कतैकतै घटनासामु निरीह बनेको छु । किनभने म रङ्गमार्फत हतियारको प्रतिकार गर्न खोजिरहेको छु । रङ्गको पारदर्शिता सजिलो र महत्त्वपूर्ण हतियार हो । यो मेरो मनोदशा सार्वजनिक गर्ने सबैभन्दा सरल माध्यम पनि हो ।

हिंसा झट्ट सुन्दा चित्रका लागि निकै आक्रामक विषयवस्तु हो तर निर्भीकता चित्रकारको अर्को अपरिहार्य गुण पनि हो ।

म एउटा चित्र गर्दागर्दै दुई रातसम्म निदाउन सकिनँ । कारण त्यो एउटी बालिकाको विषय थियो जसमा उसकी मितिनी भर्खर बमले उछिट्टिएर टुक्राहरूमा अनुवाद भएकी थिई । बालिका र उसकी मितिनी । यी दुई अत्यन्त कोमल सम्बन्धका पात्र हुन् । तिनको समय र निर्दोषिता न्यानो रङ्ग माग गर्छन् । तर तिनीहरूबीचको अविश्वसनीय घटना म कठोर रेखाकृति र रङ्गमार्फत गर्न बाध्य थिएँ । एक ठाउँ मैले आफ्नै आँसु पनि त्यसमा टाँसेको छु । भलै त्यसले कुनै अर्थ दिँदैन । त्यसको अस्तित्व नै विलय भइसकेको हुन्छ । पानीको थोपा बन्नुअघि आँसुले एक निमेष मात्र आफ्नो औचित्य देखाउन सक्छ । तैपनि चित्रकारले त्यसलाई आफ्नो भावनाको साक्षीका रूपमा पोते के बिग्रन्छ ? अनुभवसँग लतपतिएका आँसु मेरा प्रेरणा हुन् ।

कुनैकुनै क्यानभास मैले पत्रिकाका समाचार र तस्बिर टाँगेझैँ देखिन सक्छन् । त्यसमा पनि एक खाले निर्जन दूरी छ । त्यसलाई मैले यसरी हेरेको छु, घटना र समाचार र चित्र अर्थात् घटना र समाचारबीचको दूरी, समाचार र चित्रबीचको दूरी । यद्यपि अहिले घटना र समाचारबीचको दूरी प्रविधि र व्यावसायिकताका हिसाबले न्यून हुँदै गएको छ । समाचार र चित्रबीचको दूरी भने उत्तिकै मर्यादित र स्तरीय हुनुपर्छ भन्ने सोचाइका कलाधर्मीहरू मलाई असल लाग्छन् । तिनीहरू चित्रकार र फोटोग्राफरबीच चरित्र र भाषागत मौलिक भिन्नता छ भन्ने चरितार्थ गर्न खोज्छन् ।

यी चित्रले, तैपनि, आशा देखाउन खोजिरहेका छन् । म त्यो फिल गर्न सक्छु । तर मेरो फिलिङले न्याय पाउन सकेको छ ? वा कतै म आफूलाई पुष्टि गर्न सकिरहेको छु ? कतै रगतले अबिरको सन्देश दिएको छ भने कतै अबिरले रगतको अर्थ बोकेको छ । अबिरले पवित्रता र आशाको लक्षण दिन्छ भने रगतले असफलता र अन्त्यको । यी चित्रको सार हो– म अबिर चाहन्छु । युद्धउन्मादीहरू रगत पोतिएका क्यानभास नै सिङ्गो देश बुझ्न चाहन्छन् । किनभने तिनले थोकका थोक हतियार बढाउन पाउँछन् र हतियारको सौदा हुँदा आफ्नो विजय सम्भव देख्छन् । त्यस्तो प्रवृत्तिलाई म कायर व्यक्तित्व झल्किने रङ्गको प्रभाव दिन खोज्दै छु ।

'मलाई के कारण पनि बढी मन पर्‍यो भने,' क्रिस्टिनाले भनेकी थिई- 'यी निर्दोष अनुहारहरू साहसी देखिएका छन् ।'

'त्यही कारण तिनीहरू बलिदानी भएका छन्,' मैले भनेँ ।

हो, कायरहरू आफू भने कस्तरी जिउन चाहन्छन् भन्ने वर्णन मैले गर्न खोजेको छु ।

'साहसी र कायर परिभाषित गर्नु राजनीतिक आलोचना हो जुन तिमी गर्दै छौ र मलाई लाग्छ, आफू कुन पक्षमा छौ भन्ने प्रस्ट गर्नु तिम्रो साहस हो,' उसले भनेकी थिई- 'विशेष गरी अहिलेको अवस्थामा ।'

हो, किनभने मैले लिएको पक्ष दुवै थरी युद्धउन्मादीहरूविरुद्ध सङ्घर्ष हो र यो तेस्रो पक्ष हो । यो पक्ष दुवै थरीका आँखामा पर्न सक्छ किनभने ती दुवै थरी यो पक्षलाई आफ्नो हतियारविरुद्ध उभिएको पाउँछन् । म यी चित्रमार्फत जुन धावा बोल्दै छु त्यसका लागि मेरा रङ्गहरूले पक्षमा मत दिइरहेका छन् र म बलवान् भएको छु । तर के म यसरी सुरक्षित हुन सक्छु ?

'एक्सक्युज मी ।' उफ्, क्रिस्टिना मोरी फेरि टुप्लुकिई !

मैले उसलाई वास्ता नगरी ब्रस चलाइरहेँ । पल्पसाले निधारमा बिन्दी लगाएकी थिई तर बिन्दी अलि लाम्चो देखिएको छ । रेखा लामो भयो भने रङ्गले पुर्न सकिन्छ । तर रङ्ग पोत्दापोत्दै क्यानभासै गन्हुङ्गो हुने भइसक्यो ।

'मलाई थाहा छ तिमी सुने-नसुनेझैँ गर्दै छौ ।'

'हो ।'

'म अब जान्छु ।'

'मैले रोकेको छैन ।'

'तिमी मलाई त्यो पेन्टिङ दिने कि नदिने ?'

'कुन ?'

'फेरि बुझ पचाउँदै छौ ।'

'मलाई थाहा छैन,' मैले भनेँ- 'तिमीलाई कुन पेन्टिङ लग्नुपरेको हो ?'

'ऊ !' उसले औँला तन्काई, मैले हेरिनँ ।

त्यो त्यही क्याफेको हो । क्याफे अर्थात् ग्यालरी । ग्यालरी अर्थात् रिसोर्ट । हरेक कोठालाई ग्यालरी बनाउने मेरो ध्याउन्न छ । म त्यो डिजाइन गर्दै छु यहाँ कूचीमार्फत । त्यस्ता पदयात्री हुन्छन् जो होटलकोठा रोज्दा ग्यालरीमा बसेको फिल गर्न सकून् । म तिनैलाई लक्ष्य गरिरहेको छु । कलादीर्घाजस्ता होटल रुम खोज्ने पर्यटकहरू सीधै त्यो रिसोर्ट पुगून् । आर्ट ग्यालरी अर्थात् रिसोर्ट । क्रिस्टिनाले रोजेको चित्रमा म चित्रकार कि डिजाइनर भन्ने प्रश्न उपस्थित हुन सक्छ ।

कलाकोठाहरू बनाउँदै छु दुई थरी । स्टुडियो रुम एक थरी र ग्यालरी स्विट्स अर्को थरी । सौखिन वा आरामी बास चाहनेहरू अलि बढी खर्चेर ग्यालरी स्विट्स बसून् । र सीधा पहाडसम्मुख ग्यालरीबाट तिनीहरू प्रकृतिसँग प्रत्यक्ष संवाद गर्न सकून् । ठूल्ठूला सिसावाल झ्यालका पर्दा खोल्नेबित्तिकै उनीहरू आफ्नो परिवेशमा ऋतु भोग्न पाऊन् ।

'जुन दिन तिमी यो पेन्टिङअनुसारको डिजाइनको ग्यालरी रिसोर्ट अर्थात् आर्ट सेन्टर कम होटल अर्थात् सुन्दर क्याफेसहितको ग्यालरी बनाइसक्छौ,' ऊ भन्छे- 'म त्यहाँ बस्ने पहिलो पाहुना हुनेछु ।'

'चार दिन पूरै हिँडेर जानुपर्छ ।'

'तिमी मलाई के ठानिरहेका छौ ?' ऊ ठुस्किएजस्तो गर्छे । म उसको गालामा ब्रस चलाइदिन्छु । रातो डाम बस्छ । ऊ मस्किएकी हो ? होइन रहेछ, ठुस्किन्छे। उसको अनुहारमा नेपाली केटीको जस्तो लज्जा देखिने गरेको छ । दुई-चार वर्ष बसी भने उसलाई कसैले पनि विदेशी भन्न सक्नेछैन । लामो कालो कपाल । त्यही हो, अलि बढी अग्ली छ र आँखा बढी नै नीला छन् । तर मान्छेहरू झुक्किनेछन् ।

कोठा राम्रो हुनलाई खाली ठाउँ चाहिन्छ । भित्तामा चित्र चाहिन्छ । त्यस रिसोर्टका रुमहरू म त्यस्तै निर्माण गर्न चाहन्छु । सेता भित्ता, घामका किरणसँगै स्थानीय फूलको बास्ना र बतास सोझै प्रवेश गर्ने झ्याल ।

'यो पेन्टिङ मेरा आँखासामु रचना भएको हो,' ऊ फेरि जिद्दी गर्छे- 'यो त्यस्तो पहिलो चित्र हो । त्यस कारण म यो नलिई जान्नँ ।'

म दिन चाहन्नँ किनभने पल्पसाको नाममा मैले सिर्जना गर्न आँटेको पहाडी क्याफे अर्थात् ग्यालरी हो यो जुन मेरो भविष्य हो । यो कति प्रिय छ, म उसलाई सम्झाउन सक्दिनँ । उसलाई बुझाउन मलाई धेरै सकस पर्नेछ । रातो इँटाको चोकभित्रको ग्यालरीमा बसेर मैले स्लेट ढुङ्गामा कमेरो लिपिएको त्यस्तो ग्यालरी-चित्र सिर्जना गरेको छु जसलाई म पल्पसाको नाउँ कुँद्ने स्मारक बनाउन सक्नेछु । यो बिक्री गर्न सकिने चित्र होइन ।

'लौ एकपटक म डिस्टर्ब गरूँ, है ?' उसले भनी । मैले अझै वास्ता गरिनँ ।

मोबाइल फोन निकालेर उसले मेरो फोटो खिची । रातो बत्ती बलेजस्तो वा अनुहारमा टर्च लाइट बालेजस्तो भयो । फोन गरेको भान पारी फोटो खिच्ने यस काइदाले पनि मलाई हैरान गरेको छ । कतिपय आगन्तुकहरू फोटो खिच्ने

अनुमति पाइन्न भन्ठानेर फोन गरेजस्तो गरी फोटो उतार्छन् यो ग्यालरीमा। के यो फोटो स्टुडियो हो ?

'कफी लियौ ?'

'अहँ,' उसले भनी।

'किन ?'

'पेन्टिङ दिन्छु भनेका छैनौ,' उसले घुर्की थपी।

'तिमी कहिले फर्किने ?'

'होटल ?' उसले सोधी।

'होइन,' मैले भनेँ- 'आम्स्टर्डम।'

त्यसपछि ऊ रिसले उठी। म उसलाई भगाउन चाहन्छु, बस। तर त्यति टाढा होइन। यतै वरपर घुमोस्, काठमाण्डूको फेरो मारोस्। रन्किएर निस्की। गालामा रातो डाम लिएर कहाँ गई ? जहाजको टिकट सार्दै आएकी थिई। कैयौँपल्ट देश फर्किन खोजी तर सकिरहेकी थिइन। समाचार पनि पठाएजस्तो लाग्दैन। मैसँग रत्तिइरहेकी छ। त्यही कारण सानो कुराले पनि चित्त दुखाउने भएकी छ। यो उसको कमजोरी हो। खासमा उसले ढाँटेकी रहिछ यहाँको द्वन्द्वको समाचार टिप्न आएको भनेर। तातो राजनीतिक समाचार होइन, पूर्वेली आधुनिक कलासम्बन्धी लामो लेख तयार गर्न आएकी रहिछ। नत्र मसँग किन हिमचिम बढाउँथी ?

पल्पसा सिरिज सकेपछि म पूर्णतः तनावमुक्त हुनेछु। बल्ल उसलाई चोखो दृष्टिले हेर्न सक्नेछु। म पहाडबाट फर्केदेखिन् चित्र नगरी बसेको कुनै दिन छैन। क्षणहरू चित्रमय भएका छन्। नपोतेको क्षण मानसपटलमा रेखा नाचिरहेको हुन्छ। कहिलेकाहीँ रङ्गसँग खेल्दाखेल्दै रेखाले मस्तिष्क हुँडलिरहेको हुन्छ। चित्रबिना म आफू बाँचेको महसुस गर्न सक्दिनँ। आफू बाँचेको बोध गर्न पनि म चित्र गरिरहेको छु। चित्र र मलाई यति नजिक पल्पसाले पुऱ्याएकी छ। उसले मलाई यतिसारो तनावमा पारेकी छ। अब त अभ्यस्त हुन थालिसकेको छु। तनाव मेरो श्वास बनेको छ भने चित्र त्यसको प्रश्वास। मिर्मिरे हुन थालिसके पनि म रातको हतारमा हुँदिनँ। जीवनका विडम्बनाहरू स्वाभाविक लाग्न थालेका छन्। हामी दैनिक यति धेरै विषयसँग घनिष्ठ हुन्छौँ जसलाई बुझ्ने सामर्थ्य र चाख हुँदैन।

क्रिस्टिना मसँग बढी नै लहसिरहेकी छ। उसको यो स्वभाव देखेर म प्रभावित हुन सक्छु। ऊ मलाई चाहन्छे भने कस्तो किसिमले ? किन ? म केही वर्ष पल्पसाको गाढा सम्झनाबाट मुक्त हुन सक्नेछैन।

धेरैबेर भयो क्रिस्टिना आइन। के ऊ हल्यान्ड फर्की ? वा कतै मेरो प्रतीक्षा गर्दै छे ? कतै रेस्टुरेन्टतिर वा आफ्नो होटलमा ? वा मेरो घर पुगेर बसिरहेकी छ ? कहाँ छ ऊ जो ग्यालरीबाट हिँडेको तीन घण्टा भइसकेको छ र मलाई हस्तक्षेप गर्न आइरहेकी छैन।

ऊ आफ्नो देश फर्केकी हुन सक्छ।

किनभने राति उसले मलाई धेरै केरकार गरेकी थिई। उसले सोधेकी थिई- 'तिमीले मलाई किन किस गरेको ?'

उसको प्रश्नले मेरा ओठमा बसेको मिठास एक्कासि पातलियो। सतर्क भएर मैले भनेँ- 'तिमीले आँखा किन बन्द गरेकी त ?'

'मेरो प्रश्नको जवाफ त्यो होइन,' उसले भनी।

'म झुक्किएको हुँ।'

'तिमी ढँटुवा हौ।'

'होइन, के भयो भने तिमी कोमल औँलाले मेरो नाक चलाइरहेकी थियौ,' मैले भनेँ- 'र म बत्तिएँ।'

'तिमी मलाई प्रेम गर्दैनौ।'

'तिमी घनिष्ठ साथी हौ,' मैले उसको कानानेरि राखिरहेको औँला हटाउँदै भनेँ- 'र रहिरहनेछ्यौ।'

'त्यसो भए किन किस गर्‍यौ ?'

'मैले गल्ती गरेँ ?'

'साथी भन्छौ र किस पनि गर्छौ,' उसले हपारी।

'म माफी चाहन्छु।'

'अन्योलग्रस्त मान्छेलाई माफ गर्न सक्दिनँ।'

'किन ?'

'तिमीले मलाई प्रेम गरेर किस गरेका होइनौ।'

'हुन सक्छ।'

'किसको अर्थ तिमी बुझ्न नसक्ने रहेछौ,' उसले भनी- 'तिमी मसँग वासनाको सम्बन्ध राख्न चाहन्छौ ।'

म केही बोलिनँ । ऊ रुन आँटी । मलाई दिक्क लाग्यो ।

'तिमी के चाहन्छ्यौ ?' मैले सोधेँ ।

'तिमी सच्चा भएको हेर्न,' उसले भनी ।

'कसरी ?'

'तिमी पल्पसा सम्झेर मसँग लहसिँदै छौ,' उसले भनी- 'त्यो म चाहन्नँ ।'

'पल्पसाको ईर्ष्या किन गर्छ्यौ ?'

'ऊ बिचरीको ईर्ष्या होइन,' उसले भनी- 'उसको गहिरो सम्झना पालेर तिमी विगतप्रति आसक्त भएकामा मलाई ईर्ष्या लागेको हो ।'

'म के गरूँ त ?'

'तिमी भन्न सक्छौ कहिले त्यसबाट मुक्त हुन्छौ ?'

'सक्दिनँ ।'

ऊ फेरि रुन्चे देखिई । पछाडि लर्केको कपाल गुजुल्टो पारेर टाउकामा बाँधी ।

'तिमी के आफ्नो ब्वाई-फ्रेन्ड छाड्छ्यौ ?'

'मैले तिमीलाई कतिपल्ट भनिसकेँ,' उसले भनी- 'तिमीसँगको मित्रतामा ऊ प्रसन्न छ । उसलाई मेरो चिन्ता छैन ।'

'हामी यसरी एउटै कोठामा सुतेको थाहा पाएर पनि ?'

'अँ,' उसले भनी- 'म पहिला आम्स्टर्डममै केटा साथीहरूको घरमा सुतेको उसलाई थाहा छ । हामी खुलस्त छौँ । तिमी र हामीबीच यही भिन्नता छ । ऊ मलाई विश्वास गर्छ ।'

'किस गरेको थाहा पाएर तिम्रो केटाले मलाई के ठान्ला ?'

'जे ठान्ने हो मेरैबारेमा ठान्छ,' उसले भनी ।

'तिमी यो बताउँछ्यौ ?'

'हाम्रो विश्वासको आधार यही हो,' उसले भनी- 'उसलाई थाहा छ म केही पनि लुकाउँदिनँ ।'

म छक्क परी ऊबाट अलि पर बसेँ । उसलाई हेरेँ, रातो बल्बको रिमरिमे प्रकाशमा गुजुल्टिएको कपाल फेरि फुका भएर उसको सुन्दर अनुहार छोपिन लागेको थियो ।

'तिमीले म पश्चिमा केटी हुँ भन्ने सोच्यौ ।'

'होइन त ?'

'तिमीले के सोच्यौ भने पश्चिमा केटीहरू सजिलै अरूसँग सुतिदिन्छन् ।'

'मैले त्यसरी सोचेको होइन,' मैले भनेँ- 'तिमी कलापारखी हौ । पूर्वीया वा पश्चिमा भन्ने मैले सोचेको होइन ।'

'राति कसरी पेन्टिङ गर्छौ भन्ने हेर्न म यहाँ बसेकी हुँ,' उसले भनी- 'म तिम्रो अध्ययन गर्न आएकी हुँ । असल साथीको यसरी फाइदा उठाउने हो ?'

'सरी,' मैले भनेँ ।

'सरी नभन,' उसले भनी- 'तिमी चाहन्छौ भने म तिम्री गर्लफ्रेन्ड बन्न सक्छु ।'

'तिमी आफ्नो ब्वाई-फ्रेन्डलाई धोका दिन्छ्यौ ?'

'धोका होइन त्यो,' उसले भनी- 'म उसलाई बताउन सक्छु– मैले तिमीलाई किन प्रेम गर्न थालेँ भनेर । हामी समझदारीमै छुट्टिन सक्छौँ ।'

'ए,' मैले सोधेँ- 'तिमीले मलाई प्रेम गर्न थालेकी छ्यौ ?'

'थालेकी थिएँ,' उसले भनी ।

'थिएँ ?'

'अब छाड्न सक्छु ।'

'तिमीमा पनि त्यही समस्या रहेछ,' मैले भनेँ- 'प्रेम त्यति सजिलो छ ? स्विच अन गर्दैमा हुने अनि बटन दबाउँदैमा अफ हुने ?'

'म तिमीजस्तो दोहोरो धारणा राख्नेसँग अलमलिन सक्दिनँ ।'

'मैले के गर्नुपर्छ ?'

'आफूबारे प्रस्ट हुन सक्नुपर्छ,' उसले भनी- 'तिमी पल्पसालाई मिस गरिरहेका छौ भन्ने मलाई थाहा छ । तिमी उसको सम्झनाबाट मुक्त हुन सक्दैनौ । तर मलाई तिमी पल्पसा भुलाउने माध्यम नबनाऊ ।'

'अनि ?'

'र मलाई कुइरिनी ठानेर जे पनि चल्छ भन्ने सोचाइ नराख ।'

'राख्दिनँ ।'

'म कसरी पत्याऊँ ?'

'तिम्रो पत्यारका लागि मैले के गर्नुपर्छ ?'

'प्रस्ट भन,' उसले भनी ।

'के ?'

'डु यु लभ मी ?'

म चुप लागेँ। उसलाई हेरेँ, ऊ मलाई जिज्ञासु आँखाले हेरिरहेकी थिई।

उसले थपी- 'तिमीलाई थाहा छ लभ गर्छु भन्नुको अर्थ के हुन्छ।'

म अझै बोल्न सकिनँ।

'तिमीले पल्पसालाई पनि वास्तवमै प्रेम गरेका होइनौ।'

'कसरी ?'

'प्रस्ट छ,' उसले भनी- 'तिमी उसको सुन्दरता र तिमीप्रतिको सकारात्मक धारणाबाट आसक्त भएका हौ। तिम्रो फ्यान थिई ऊ र तिमी त्यसै लहसिएका हौ।'

'आसक्ति प्रेम होइन ?'

'भएको भए,' उसले भनी- 'तिमी गोआमा ऊसँग बेखबर छुट्टिँदैनथ्यौ। काठमाण्डूमा झुक्किएर भेटेका हौ फेरि। उसलाई खबरै नगरी पहाड जाने थिएनौ। गए पनि खबर पठाइरहनुपर्थ्यो तिमीले।'

'मेरो स्वभाव ...,'

'हो, स्वभावैले तिमी कसैलाई प्रेम गर्न सक्दैनौ,' उसले भनी- 'किनभने तिमी एकोहोरो कलाकार हौ। एकान्तलाई प्रेम गर्छौ। एक्लै संसार चियाएर काममा रमाउन सक्छौ। तिमी कसैको साथ चाहँदैनौ।'

'एकान्त मन पराउनुको अर्थ कसैलाई प्रेम गर्न नसक्नु हो ?'

'प्रेम गरेको दिनदेखि तिमी एकान्तलाई पहिलाजस्तै भोग्न सक्दैनौ,' उसले भनी- 'तिमीजस्ता व्यक्तिले त्यसो गर्न गाऱ्हो हुन्छ।'

'म त्यसरी नै हुर्किएँ।'

'तर बदलिएनौ।'

'हुन सक्छ।'

'तर म तिमीलाई मन पराउँछु।'

'ए, हो ?'

'पल्पसा पनि तिमीलाई मन पराउँथी,' उसले भनी।

'हो।'

'तिमीलाई मन पराउनु एउटा कुरा, तिमीबाट प्रेम पाउनु अर्को कुरा।'

म फेरि चुप लागेँ।

'तिमी रङ्ग मन पराउँछौ, त्यसैलाई प्रेम गर्छौ किनभने त्यसैसँग तिमी आफूलाई भुलाउन सक्छौ, तिमी राम्रो चित्रकार हौ,' उसले भनी।

'हो !'

'म तिम्रो कामलाई प्रेम गर्छु, बस ।'

'थ्याङ्क यु ।'

'हो !'

'म तिम्रो कामलाई प्रेम गर्छु, बस ।'

'थ्याङ्क यु ।'

म फेरि ब्रस चलाउन थालेँ । उसले हेरिरही । उसका आँखाअघि म रङ्गहरूमा व्यस्त भएँ । म पल्पसाको अनुहार निकालिरहेको थिएँ ।

'यसो भनेर तिमीप्रतिको मेरो सम्मान कम हुँदैन ।'

'मलाई विश्वास छ,' मैले भनेँ ।

'हामी असल साथी, घनिष्ठ साथी रहनेछौँ,' उसले भनी ।

'हो ।'

'तर के थाहा ?'

'के ?'

'म तिमीलाई प्रेम गरिरहेकी छु कि ?'

'खोइ त किस गरेको ?' मैले मन्द मुस्कानसहित उसलाई हेर्दै सोधेँ ।

मेरो छातीमा मुक्का हान्दै ऊ जिस्किई- 'अनि खोइ त तिमीले आँखा बन्द गरेको ?'



# २८

'तपाईं रङ्गहरू कसरी मिसाउनुहुन्छ ?' जापानी महिलाले नम्र स्वरमा सोधी। आँखीभौँ मतिर ठाडा पारी।

'धेरै सजिलो छ,' मैले भनेँ- 'मनमा जे गुज्रेको छ त्यही पोत्छु म त।'

उसको श्रीमान् ध्यानपूर्वक अर्को क्यानभास नियालिरहेको थियो। ऊ भन्दै थियो- 'एउटा शैली छ तपाईंको।'

मैले ऊतिर हेरेँ। चस्मा छातीसम्म झुन्डिएको डोरी चलाउँदै ऊ अझै त्यो क्यानभास हेरिरहेको थियो। उसले थप्यो- 'यहाँ रङ्गको मिश्रण नजानिँदो किसिमले सरल छ। तपाईं कसरी रङ्ग मिसाउनुहुन्छ भने मानौँ तपाईं दूधमा पानी घोल्दै हुनुहुन्छ।'

'कस्तो स्वाभाविक छ, हगि ?' युवतीले आफ्ना श्रीमान्लाई सही थाप्न लगाउने गरी भनी।

'रङ्गको भाषा दर्शकको दृष्टिकोणमा भर पर्छ,' मैले भनेँ।

उनीहरू अङ्ग्रेजी सजिलै नबुझ्ने भएकाले मैले अलि सुस्तसँग त्यही वाक्य दोहोऱ्याएँ- 'तपाईं कसरी हेर्नुहुन्छ त्यसै गरी रङ्ग प्रस्तुत हुन्छ।'

दुवैले टाउको हल्लाए। आफ्नै भाषामा मसिनो स्वरले खासखुस गर्न थाले। एक जोर गौँथली डालीमा बसेर गाउन थालेजस्तो। फेरि आ-आफूले हेरिरहेको क्यानभासमा दृष्टिपात गर्न थाले। उनीहरू ग्यालरीमा आफैँ अलमलिन लागेपछि म बाहिरको कोठा फर्कें।

मलाई विदेशीभन्दा नेपाली दर्शक, त्यो पनि अझ किशोर, युवा वर्गका छन् भने व्याख्या गरिरहन मन लाग्छ। विकसित देशतिरका पर्यटक त सानैदेखि

आफ्नै रुचि र ग्यालरीहरूको भ्रमणबाट खारिँदै चित्र कसरी हेर्नुपर्छ भन्नेमा पारङ्गत भइसकेका हुन्छन् । तर ग्यालरीमा कति नै पो नेपाली दर्शक आउँछन् र ?

'ऊ ... यो चित्र,' लोग्नेचाहिँले मलाई कोट्याउँदै भन्यो- 'तपाईंको कुनै योजना वा सपनाजस्तो लाग्छ ।'

'ठीक भन्नुभयो, यो मेरो आगामी लक्ष्य हो,' मैले भनेँ- 'यो डिजाइनमा म एउटा आर्ट सेन्टर स्थापना गर्दै छु ।'

हरेक कोठा ग्यालरीजस्तो हुने पहाडी रिसोर्ट म रचना गर्दै छु जहाँ जोकोही सुन्दर क्याफेसहित कफी र कलाको वातावरण पाउन सक्छ ।

'ओहो !' उसले रस लियो- 'यसमा तपाईं बढी खुल्न सक्नुभएको छ । यो सिरिज मलाई धेरै मन पर्नुको कारण यसमा तपाईंको वेदना र योजना दुवै हुनु हो ।'

हो, उसलाई म बढी के भनूँ ? पल्पसा-शृङ्खला सिध्याएको धेरै भयो, तैपनि हिजैजस्तो लाग्छ । ताजा फूल मगमगाएझैँ मेरो यो ग्यालरी यसैले सुन्दर बनाएको छ । जसको पनि आँखा लाग्नुको रहस्य हो– यसमा म घामको रेखाजस्तै पोखिएको छु र रङ्गसँगै पोतिएको छु ।

'तपाईंका चित्र कत्तिको बिक्री हुन्छन् ?' श्रीमतीचाहिँ मछेउ सोध्न आइपुगी । त्यसका लागि उसले क्षमा माग्दै भनेकी थिई- 'तपाईं माइन्ड गर्नुहुन्न भने म एउटा कुरा सोधूँ ?'

'हाम्रो समाज सभ्य हुन बाँकी छ,' मैले भनेँ । उसले फेरि आँखीभौँ उचाली ।

'कला चिन्न सक्दैन,' मैले तर्क गरेँ- 'पैसा हुनेहरू महँगा चित्र किन्छन्, तिनलाई राम्रो के नराम्रो के खास चासो हुँदैन । महँगा चित्रले घरको शोभा बढाउँछ भन्ठान्छन् ।'

उसले आँखीभौँ उचालिरही । 'पैसा हुनेहरूले चित्र किन्छन् भने त्यो आफैँमा राम्रो बानी होइन र ?' उसले सोधी ।

'एक त हामीकहाँ पैसावाल नै कति छन् र ?' मैले भनेँ- 'जति छन् तिनीहरू आफ्नो पैसाको तुजुक मात्र देखाउन खोज्छन् । पैसा धेरै हुनुको जिम्मेवारी बुझ्न सक्दैनन् । धनी भनेको पैसावाल मात्र होइन, उसले के खरिद गर्छ भन्ने पनि हो । धनसँग शक्ति हुन्छ तर समझदार धनीहरू आफ्नो धनको वशमा पर्दैनन् । तिनीहरू धनलाई शोभा मात्र ठान्छन् ।'

'कसरी ?'

'पैसावालमध्ये देशदेशावर घुमेर जान्नेबुझ्ने टोपलिएकाहरू पेन्टिङ झुन्डिएका घरको इज्जत हुन्छ भन्नेसम्म ठान्छन्,' मैले भनें- 'तर तीमध्ये धेरैजसो पेन्टिङलाई घरको अनिवार्य सदस्य स्वीकार गर्नुभन्दा बढी फेसन हो भन्ने मान्यता राख्छन् ।'

'सभ्यताको एउटा चरण हो, हगि ?' उसले भनी ।

'पैसाको बलले असल चित्र खरिद हुँदैन,' मैले भनें- 'आफ्नो घर कसरी सुन्दर हुन्छ भन्ने जान्न पहिला त आफैँ सुसंस्कृत हुनुपर्छ ।'

'हो,' ऊ उभिरहेकी थिई, भनी- 'त्यो त हो ।'

मैले थपेँ- 'सुन्दर मनले मात्र सुन्दर चित्र चिन्न सकिन्छ ।'

ऊ टोलाई ।

'जस्तो तपाईं हुनहुन्छ,' मैले उसको प्रशंसा गरेँ- 'तपाईंहरू अघि नै देखि एकचित्तले चित्रहरू नियाल्दै प्रश्न गर्दै हुनुहुन्छ । यही त्यसको प्रमाण हो ।'

ऊ गाला रातो पार्दै आफ्नो श्रीमान् भुलिरहेको ग्यालरी प्रवेश गरी । भित्र फेरि गौँथली सुनिए ।

ऊ फेरि आई ।

'तपाईं आफ्ना चित्र किनिऊन् भन्ने चाहनुहुन्छ ?' उसले सोधी ।

'निश्चय नै,' मैले भनें- 'मेरो बाँच्ने आधार यही हो ।'

'त्यसो भए बिक्री सजिलै हुने चित्र बढी बनाउनुहुन्छ त ?'

'राम्रो प्रश्न गर्नुभयो,' मैले भनें- 'तर म त्यसो गर्दिनँ ।'

'किन ?'

'दर्शकले रुचाउनेजस्तो चित्र बनाउन थाल्ने हो भने म सच्चा चित्रकार हुन सक्दिनँ,' मैले भनें- 'म त्यति बेला रचनाकार होइन, उत्पादक हुन पुग्छु ।'

ऊ फर्की ।

मैले कम्प्युटर अन गरेँ । उम्लेको पानी कपमा भरेँ र कफी हालेँ । कफीको धूलोमा पश्चिम पहाडको सुगन्ध थियो । आफ्नो पहाडको गन्धले मलाई झकझक्याइरहेछ । यो मेरो विशेषता हो वा कमजोरी ? जे होस्, केही महिनादेखि

निरन्तर म यो बास्नाले गलिरहेको छु। यसले मलाई आफ्नो पहाडप्रतिको आसक्ति वा प्रेम झल्काइरहेको छ। म यसबाट मुक्त हुन सक्दिनँ। यसले मलाई ऊर्जा दिइरहेको छ। म चङ्गाझैँ तानिएको छु त्यो पहाडतिर जो डोरी बनेर मलाई खिचिरहेको छ।

पहाडको एउटा भौगर्भिक इतिहास छ। म त्यसको एउटा सांस्कृतिक उत्पादन हुँ। त्यसको नाता गाढा छ। मैले त्यो पहाडबाट आफ्नो व्यक्तित्व बनाएको छु। मेरो छवि त्यसकै कलेवरमा कुँदिएको छ। जतिसुकै सहरी जीवनमा ढल्दै गए पनि मभित्र त्यही पहाड उभिएको छ। त्यो मलाई चुनौती दिइरहन्छ। म भौगोलिक रूपमा जतिसुकै टाढा र सांस्कृतिक रूपमा अलग हुँदै गए पनि त्यसको प्राकृतिक स्नेहले मलाई बाँधिरहेको छ। भूगोल र संस्कृतिको जुन छाप मेरो किशोरवयसम्म परेको छ त्यसबाट मुक्त हुन म सक्दिनँ।

इमेल चेक गरेपछि एक-दुई कल फोन गर्नुपर्नेछ। पत्रिका पनि सुकाउनुपर्छ। ढोकामुनि छिराउँदा साइकल-ब्वाईले बलेँसीको पानीमा रुझाएछ।

म एउटा समाचारबाट आन्दोलित छु जसबारे चित्र सुरु गर्नै मलाई दुई साता लागिसकेको छ। हरेक दिन रन्थनिन्छु, केही आकृति रच्न खोज्छु, सक्दिनँ। आज भने केही न केही रेखा तान्न थाल्नेछु।

ग्यालरीको कुनापट्टि मैले ठिक्क गरेको क्यानभास सत्तरी वर्षीया एउटी वृद्धाबारे हो। ती वृद्धा सदरमुकामतिर हिँडिरहेका बेला खिचिएको तस्बिरसहितको समाचारले मलाई अरू चित्र रचना गर्न पनि रोकेको छ। ती वृद्धा 'जनअदालत' को फैसलापछि गाउँ छाड्न बाध्य भएकी हुन्। गाउँमा 'अदालत' बसेको दिन सबै महिलाले घरघरायसी सुनाउने क्रममा उनकी बुहारीले पनि आफ्नी सासूसँगका समस्या सुनाएकी रहिछन्। त्यो सामान्य मामिला हो, हरेक घरमा हुने, तर फैसला उनका विपक्षमा गयो।

सात दिनभित्र गाउँ छाड्ने आदेश पाएपछि उनकी बुहारीले फैसलाविरुद्ध आफैँ पुनरावेदन दिएकी पनि थिइन् किनभने उनलाई सासूप्रति त्यस्तो कठोर निर्णयको कल्पनै थिएन। तर भइसकेको आदेश कसरी उल्टिन्थ्यो ?

सानो पोको झोला बोकेर चाउरी परेका गाला, आँसु भरिएका आँखा र कुप्रो शरीरकी मनमैयाँ ओरालो झरिरहेका बेला संवाददाताले भेटेका रहेछन्। त्यो

ओरालो मेरो पहाडको हो । त्यही ओरालामा शताब्दियौँदेखि मानिस ओर्लिरहेका छन् । तर उनका अगाडि उपस्थित समय फरक छ । त्यस क्षणले मलाई कुतकुत्यायो र मैले 'ओरालोमा वृद्धा' शीर्षक पेन्टिङ गर्ने प्रेरणा पाएँ । तर सकिरहेको छैन ।

आज जसै गरे पनि त्यसमा काम थाल्नेछु किनभने भुल्दै गएपछि आन्तरिक ऊर्जा अर्कै विषयतिर मोडिन सक्नेछ । पत्रिकाको त्यो कटिङ छेउमा राखेको छु, घरीघरी हेर्ने गर्छु । धेरैबेर हेर्दा आँखा रसाउँछन् । आँखाको रङ्ग हाल्ने हो भने त्यसमा पूरै नीलो पोत्नुपर्नेछ । दुई दिनदेखि पैदल हिँड्दा पनि उनलाई सदरमुकाम बजार पुग्न अझै आधा दिन बढी लाग्नेछ ।

'बजारमा तपाईंको को छ त आमै ?' भनेर संवाददाताले सोध्दा उनले भनेकी रहिछन्- 'चिनेका मान्छे क्वै छन् कि भन्ने आस गरेकी छु ।'

'यस्तो उमेरमा पनि यस्तो सजाय ?'

'उनीहरूले मार्छु त भनेका थिएनन्, नभनेको कुरा गर्नु हुँदैन बाबू, बुहारीले बिराई, उसले फैसला सच्याउन भनेर पुकारा पनि गरी,' उनले भनिन्- 'तर म आफैँ घरबाट हिँडेँ । डर त लागिहाल्छ नि !'

'होइन र बाबू ?' उनले सोधेकी रहिछन् ।

त्यो कटिङ फेरि पढिरहेका बेला कसैले ढोका ढकढक गऱ्यो । 'एकै छिन,' म कराएँ । जापानी दम्पतीलाई पनि अपुङ्गे तातो कप दिएँ । महिलाले भनी- 'हामी आजचाहिँ तपाईंको यो पुस्तक किन्छौँ । भोलि पनि आउनेछौँ । यसको मोल कति होला ?'

त्यो मेरो चित्र-पुस्तक हो जसमा मैले आफ्ना कलाको मान्यता र अभ्यासको वर्णन गरेको छु । मैले पुस्तकको पुछारपृष्ठमा मुद्रित मूल्य देखाएँ । उसले क्यालकुलेटर निकालेर त्यो नेपाली मूल्यलाई डलर हो वा यनमा रूपान्तर गर्न थाली । लोग्नेचाहिँ आफ्नी श्रीमतीलाई 'म्यापल ट्री' सम्झाइरहेको थियो जुन रूखहरू ऋतुपिच्छे जापानमा आफ्ना पातहरूलाई फरक रङ्ग दिन्छन् । 'तिमी सम्झिन्छ्यौ ?' क्यालकुलेटरमा व्यस्त श्रीमतीलाई ऊ सम्झाइरहेको थियो- 'पोहोर हामी पात झर्ने सिजनमा पहाड चढेका थियौँ । शरद्याममा राताम्मे पहाड हेर्न मान्छे ओहो कतिविधि ओइरिएका थिए !'

'हो, हाम्रोतिरका पहाड रातो-रातो हुँदै पहेँलिएर जान्छन्,' उसले भनी- 'पहिला हरियो, रातो अनि पहेँलो ।'

'हिउँ परेपछि पूरै सेतो,' मैले हस्तक्षेप गरेँ- 'होइन त ?'

'हो, त्यसैले त वर्षमा चार सिजन हुन्छ भनेको,' श्रीमतीले भनी- 'पातको रङ्गले सिजन छुट्टयाउँछ ।'

'तपाईंका यी चित्रमा पनि पहाड, ऋतु र रङ्गबारे त्यस्तै सम्बन्ध देखिन्छ,' लोग्नेले भन्यो- 'हामी त्यही सम्झिँदै थियौँ । रङ्गको चेतना आउने नै त्यसरी हो । होइन ?'

'हो,' मैले भनेँ- 'म यिनै पहाडले फूलमार्फत स्थापित गरेका रङ्गको चेतनामा हुर्किएको हुँ ।'

उनीहरू के भन्न खोज्दै थिए, ढोकामा ढकढक बढ्यो । म बाहिर आउनुअघि श्रीमतीले सोधी- 'तपाईं कुन चित्रमा बढी सन्तुष्ट हुनुहुन्छ ?'

'कुनैमा पनि छैन ।'

'किन ?'

'सन्तुष्टि वा बढी सन्तुष्टि पाउन थालेँ भने,' मैले भनेँ- 'मेरो जिज्ञासा पूर्ति हुन्छ । कलामा पूर्ण सन्तुष्टि वा पूर्णता सम्भव हुँदैन ।'

उसले मेरो अनुहार हेरी । कफीको पहिलो सुरुप ओठमा लाग्दा-नलाग्दै म ढोकातिर बढेको थिएँ । अपरिचित व्यक्तिहरू रहेछन् ।

'बस्नोस्,' मैले सोफा देखाएँ र आफूचाहिँ भित्तातिरको कुर्चीमा फर्कें । यो कुर्ची मैले ताइवानबाट मगाएको हो । एक वर्षमै हल्लिने भइसकेको छ । कामदार हुन् भने मर्मत गर्न यिनैलाई दिनुपर्ला ।

'तपाईंहरूको परिचय ?' मैले सोधेँ । किनभने तिनीहरू कलाका पारखीजस्ता देखिन्थेनन् ।

तिनीहरू नबोली भित्ता र टेबलतिर हेरिरहेका थिए । भित्ता हेरे पनि तिनले चित्रमा ध्यान दिएका थिएनन् भन्ने म बुझ्न सक्छु । चित्रकारको खुबी पनि हो दर्शक चिन्ने । लवाइ हेर्दैमा तिनीहरूमा चित्रकलाको स्वाद लिने छाँट देखिन्थेन । त्यसैले अलि अप्ठ्यारो भयो ।

'केही काम थियो कि ?'

सेतो कमिज लगाउनेले कड्केर भन्यो- 'तपाईंसँग केही कुरा बुझ्न आएका हौँ ।'

'के कुरा ?' मैले हत्तपत्त भनेँ ।

'तपाईंसँग चिनजान गरौँ भनेर पनि हामी आएका हौँ,' अर्कोचाहिँले नम्रतावश भन्यो । उसले आफ्ना आँखा अन्यत्रै पुऱ्याएको थियो । उसको बित्थामा जुँगा चल्दोरहेछ । खास प्रभाव परेन मलाई उसको । अर्को भने उभिएरै पछाडिपट्टिको भित्तामा झुन्डिएको क्यालेन्डर र त्यसमा मैले केरमेट गरेका अक्षर नियालिरहेको थियो । दुइटा भित्ताका तीनटा क्यानभासमा अर्को अडिरहेको थियो । ऊ घरी एउटा हेर्थ्यो, घरी अर्को । आँखा लगाउनु एउटा कुरा, चित्र बुझ्नु अर्को कुरा । बाँकी एक जनालाई मैले ध्यान दिइनँ ।

'कफी लिनुहुन्छ ?' मैले सोधेँ । किनभने उनीहरू छिट्टै फर्कनेजस्तो लागेन । मलाई इमेल चेक गर्न हतार भइसकेको थियो ।

'हामी सुरक्षाकर्मी हौँ,' पहिलो वक्ताले भन्यो ।

म झस्किएँ । अनुहारमा मैले कुनै परिवर्तन आउन भने दिइनँ । भित्र ग्यालरीमा जापानी दम्पती आफैँ व्यस्त हुनुपर्छ । फुलन आइपुगेकी छ कि ?

'अनि ?'

'तपाईंसँग केही बुझ्नुपर्ने भएर,' उसले कारण खोल्न खोज्यो तर खोलेन ।

'कस्तो कुरा ?'

'हामीसँगै जानुपर्ला तपाईं,' अर्कोले अलि कडा स्वरमा भन्यो ।

'कहाँ ?'

'हिँड्नोस् न,' तेस्रोले करै गऱ्यो । र जुरुक्क उठ्यो ।

म काँप्न थालेको थिएँ । तर भरसक आफू डराएको उनीहरूले चाल नपाऊन् भन्नेमा म उत्तिकै सजग भएँ ।

'मेरो काम छ,' मैले भनेँ- 'अहिल्यै त म निस्कन सक्दिनँ । भित्र ग्यालरीमा विदेशीहरू छन्, तिनलाई मैले टाइम दिएको छु । म व्यस्त चित्रकार हुँ ।'

मोबाइल बज्यो । साथीले गरेको रहेछ । मैले उसलाई पनि टाइम दिएको छु, ऊ बसेको क्याफे पुग्नु छ । तर मैले आफ्नो परिस्थिति खुलाउन चाहिनँ । केही सङ्केत पनि गरिनँ । ल, ल आउँदै छु, अर्डर गर्दै गर मात्र भनेँ । त्यो मेरो गल्ती थियो ।

पहिलोले फेरि मुख फोऱ्यो- 'तपाईं फर्केर आफ्नो काम गर्न सक्नुहुन्छ ।'

'कतिबेर लाग्ला ?' मैले भनें- 'आफ्ना पाहुनालाई छाडेर कसरी जाऊँ ?'

'हिँड्नोस्,' अर्कोले फेरि कर गऱ्यो । उसले ग्यालरीतिरको ढोका हेऱ्यो । भित्र जापानी गौँथलीहरूको सानो स्वर थियो ।

'सुरक्षा निकायलाई सहयोग नगर्ने मेरो मनसाय होइन,' मैले भनें- 'तर तपाईंहरूको अभिप्राय मैले बुझिनँ ।'

'कस्तो अभिप्राय ?'

'तपाईंहरू मलाई पक्राउ गर्न आउनुभएको हो ?'

'पक्राउ नै त होइन,' पहिलोले भन्यो ।

'भन्नाले ?'

'त्यसलाई यसरी नै बुझ्नोस्,' दोस्रोले भन्यो- 'हामी तपाईंलाई लिन आएका हौँ ।'

'त्यही त म जान्न खोज्दै छु,' मैले भनें- 'मलाई पक्राउ गर्न आउनुभएको हो भने पुर्जी पनि त ल्याउनुभएको होला ।'

'यो कुरा धेरै बढाउन फाइदा छैन,' तेस्रोले लगभग धम्कीको स्वरमा भन्यो- 'हामी तपाईंसँग केही कुरा बुझ्न चाहन्छौँ ।'

'यहीँ बुझे हुन्न ?' मैले फेरि जिकिर गरेँ- 'तपाईंहरूले मलाई आफ्नो परिचयपत्र पनि देखाउनुभएको छैन ।'

'यहीँ बुझेर हुने भए हामी किन तपाईंलाई लैजाने कुरा गरिरहन्थ्यौँ ?' दोस्रोले भन्यो ।

त्यसै बेला मैले उसको कमिजभित्र रिभल्बर देखेँ। भित्ताको पात्रो हेर्दै उभिरहेको व्यक्तिको ढाडमा पनि त्यस्तै हतियारको आभास पाएँ । त्यसपछि म आत्तिएँ ।

'मैले आफ्ना मान्छेहरूलाई खबर गर्नुपर्छ,' मैले भनें ।

फोनतिर हात बढाउन लाग्दा पहिलोले रोक्यो ।

'तपाईं भलादमी देखिनुहुन्छ तर बढ्ता चलाखी राम्रो होइन,' उसले भन्यो । उसको भनाइ सरासर चेतावनीपूर्ण थियो । मैले प्रतिकार गर्न सकिनँ । तर भनें- 'एमनेस्टी इन्टरनेसनलले सबैभन्दा धेरै नागरिक बेपत्ता पार्ने देशको सूचीमा नेपाललाई राखेको छ। मानव अधिकारवादीहरूको यत्रो चासो छ अहिले ।'

'डलर-खेती गर्नेहरूको उपदेश भट्टयाउने होइन,' पहिलोले अझ कड्केर भन्यो।

'ती पर्यटक के ठान्दा हुन् ?' मैले भनें।

'त्यसको केही माने छ ?' उसले हकाऱ्यो।

'त्यसै त नेपाल आउनेको सङ्ख्या घटिरहेको छ,' मैले बिन्तीको स्वरमा भनें- 'त्यसमाथि आफ्नै आँखासामु यसरी अकारण पक्राउ गरिएको देख्दा उनीहरू आतङ्कित हुँदैनन् ?'

'धेरै कुरा गर्ने होइन, ल जाऊँ,' भनेर दोस्रोले हात समातेपछि मेरो केही लागेन।

कम्प्युटर अफ गर्न पनि भ्याइनँ। कफी पनि सकिएको थिएन। फुलन आइपुगेकी भए ग्यालरीबाट देख्न सक्ली। ग्यालरी र यो कोठाबीच ढोका राख्ने मेरो आफ्नै ढिपीको परिणाम हो यो।

निस्कन लाग्दा लोग्नेचाहिँले बाहिर आएर खुसुक्क सोध्यो- 'त्यो पल्पसा सिरिजको मोल म थाहा पाउन सक्छु ?'

'सरी महोदय,' मैले भनें- 'त्यसको मोल छैन।'

'राख्न भ्याउनुभएको छैन ?'

'कहिल्यै राख्दिनँ हुँला।'

'म कसरी खरिद गर्न सक्छु ?'

'दुःख नमान्नुहोला,' मैले भनें- 'त्यो सिरिज बिक्रीका लागि होइन। अरू जुनै पनि तपाईं रोज्न सक्नुहुन्छ। कृपया मलाई बुझिदिनुहोला।'

ऊ वाल्ल पऱ्यो। त्यहीँ उभिरह्यो। उसलाई के थाहा म अचानक बाहिरिँदै छु भन्ने! मैले उसलाई भन्न पनि चाहिनँ। म यस्ता कलापारखीलाई आफू बन्धक बनेको सुनाएर के पाउँछु ? उनीहरू विचलित भएको म हेर्न सक्दिनँ। मलाई आफ्ना पेन्टिङजत्तिकै प्रिय लाग्छन् चरा, फूल, बालबालिका र कलापारखीहरू।

ढ्याक्क ढोका बन्द गरेर तल सडकमा निस्कँदा म उनीहरू पाँचै जनाको घेराबन्दीमा थिएँ। सडकमा हिँड्ने र वरिपरि पसलतिर बस्नेहरूले म अपहरित भएको चाल पाउन सक्थेनन्। सुरक्षाकर्मीकै गतिमा म लम्किएको थिएँ। कोही परिचितलाई भेट्न पाए पनि खबर दिन हुन्थ्यो !

अस्ति भर्खर बम विस्फोटन भएको चोक घुमेपछि छेउमा अड्याइराखेको भ्यानतिर एउटाले सङ्केत गऱ्यो । म लुसुक्क त्यसमा पसेँ । विस्फोटनमा परेका ठेलावालको अनुहार सम्झिएँ । तिनको परिवारको बिचल्ली भएको थियो । सानी छोरीलाई लिएर ठेलामा सामान हालिरहेका बेला उनी बजारिएका थिए । उनकी छोरी भाग्यले दुई मिटर पर उभिएकीले जोगिई । उनको ज्यान गएको दिन मैले ग्यालरीमा बेचैनसाथ बिताएको थिएँ । खालि त्यही छोरीका तोरीका गेडाजस्ता आँखाको झझल्को आइरहेको थियो । उसका आँखा अहिले पनि यतै सडकमा कतै देखिएलान् जस्तो लाग्यो ।

सय मिटरजति पनि भ्यान गुडेको थिएन, दुईतिर बसेका जवानले टाउकोलाई घुँडासम्म झारेर मेरा आँखामा पट्टी बाँधिदिए । बाहिरबाट कसैले पनि गाडीभित्र मलाई देख्न नसक्ने भयो । म अर्थात् आँखामा पट्टी बाँधिएको एउटा अपहरित जसलाई कहाँ लगिएको हो र किन, केही थाहा छैन । जुनसुकै हिरासत होओस् एउटा झ्याल भए हुन्थ्यो ताकि म दिन र रात छुट्ट्याउन सकूँ ।



## अन्त्यमा,

--------

दृश्य बेपत्ता भएको धेरै भयो । कुनै खोजखबर हुन नसकेपछि मैले उसबारे जम्मा गरेका तथ्य र प्रभावका आधारमा यस उपन्यासलाई अन्तिम रूप दिएँ । उपन्यासको परम्परागत ढाँचाप्रति म सच्चा हुन सकेँ-सकिनँ, थाहा छैन । यो एक व्यक्तिको जीवन हो । लेखेर सकिएको साँझ ठमेलको एउटा रेस्टुरेन्टमा एक्लै बसिरहेको थिएँ । बारपट्टिबाट मधुरो सङ्गीत आउँदै थियो । मोबाइलमा एउटा नौलो नम्बर देखा पऱ्यो । स्क्रिनमा अपरिचित नम्बर छ भने अनौठो व्यक्तिसँग नयाँ विषयमा कुरा हुन सक्छ । उठाएँ ।

'हेलो,' एउटी केटीको स्वर आयो- 'नारायण बोल्नुभएको हो ?'

'हो, भन्नुस् ।'

'नमस्ते,' उसले भनी- 'मेरो नाम जेमिनी । म अमेरिकाबाट हालसालै काठमाण्डू आएकी हुँ । तपाईंलाई भेट्न चाहन्छु ।'

'केका लागि होला ?'

उसले कुरा खोल्न चाहिन । यत्ति भनी- 'तपाईं सम्पादक हुनुहुँदोरहेछ । मेरो आशा छ, तपाईं मलाई सहयोग गर्न सक्नुहुन्छ ।'

कस्तो सहयोग मैले बुझिनँ । उसले फोनमा विस्तार गर्न चाहिन । 'कुनै दिन अफिस आउन सक्नुहुन्छ' भनेर पन्छाउन खोजेँ । समय पाए अहिल्यै भेट्छु भन्ने ढिपी कसी । काठमाण्डूमा धेरै समय छैन भनी । छिट्टै फर्किनुपर्ने रहेछ । हत्ते गर्छे भने म उसलाई किन नभेटूँ ? कसैलाई किन भेट्ने र नभेट्ने निधो गर्न पर्याप्त आधार खोज्नु पत्रकारको स्वभाव होइन । अफिस फोन गरेँ- 'केही अर्जेन्ट त छैन ?'

आज खासै जटिल समाचार छैन । घटनाहरू सरल हुन थालेका छन् । दुई-तीन ठाउँ सामान्य भिडन्त भएको हो । बाह्र-चौध जना त हरेक दिन मरिरहेकै छन् । ठूलो कुरा भएन । विचारपृष्ठहरू तयार भइसकेका छन् । म अलि सुबिस्तामै थिएँ । तर के थाहा कुनै पनि बेला कहीँ पनि ठूलो घटना हुन सक्छ । यस्तो अभरपर्दो याम छ । र जेका लागि पनि जतिखेर पनि तम्तयार रहनुपर्छ ।

जिन, टनिक वाटर र कागती आइपुग्यो । स्न्याक्स अर्डर गर्दै गरुँला भनेर वेटरलाई सम्झाएँ । क्यासेट अलि ठूलो गर्न सिफारिस गरेँ । ऊ सीधा बारतिर

भोलुम ठूलो गर्न हिँड्यो । बाहिर सडकमा चालचुल कम छ । पर्यटकहरू निख्रँदै छन् । क्रिसमसअघि धेरै जना घरै फर्किन चाहन्छन् । अर्को साता 'द इकोनोमिस्ट' को डबल अङ्क आउँछ । आज कुनै किताब ल्याएको छैन । म्यागेजिन पनि भएन । 'हेराल्ड ट्रिब्युन' अचाक्ली महँगो छ । त्यहाँतल पसलमा अरू अखबार छैनन् । म आज केही पढ्न चाहन्नँ । तर एक्लै रौँरौँती बसिरहन पनि सक्दिनँ । दृश्य ओझेल परेपछि म अलि आत्तिएको छु । धन्य उसको उपन्यास टुङ्ग्याएँ । आफ्नो लेखिसकेपछि अरूको पढ्ने जाँगर चल्छ । तर पढिहाल्ने पुस्तक हातमा छैन । ड्रिङ्क सकेर पुस्तकपसल चहारुँला । हामीकहाँ समीक्षाका आधारमा पुस्तक बिक्दैन । समीक्षक नहुनुको दुःख पाठकलाई छ । तर राम्रै पुस्तक पनि कत्ति पो निस्कन्छन् र ? असल लेखक धेरै नभएको समाज बौद्धिक अर्थमा दरिद्र नै हुन्छ । यही पुस्तक पनि मलाई दृश्यले लेख्न हौस्याएको हो । विषय भने आफैँले छानेको हुँ ।

एक दिन मैले उसलाई सोधेँ- 'कस्तो किताब लेख्नुपर्छ भन्ने तिमी ठान्छौ ?'

'त्यस्तो लेख,' उसले भनेको थियो- 'जुन तिमीले पढ्न पाएका छैनौ ।'

हे दैव ! म यसो घोत्लिएँ । 'त्यसो भए,' मैले भनेँ- 'तिम्राबारे लेख्छु ।'

'किन ?'

'तिमीजस्तो चित्रकारबारेको पुस्तक मैले पढ्न पाएको छैन ।'

'धत् मूर्ख,' उसले हकार्‍यो- 'बायोग्राफी त ठूला कलाकारको पो लेखिन्छ !'

'तिमी झन् मूर्ख रहेछौ,' मैले भनेँ- 'ठूला कलाकारको बायोग्राफी वा तिनको जीवनमा आधारित पुस्तक त धेरै छन् । मलाई असाध्यै मन पर्ने त्यस्तै एउटा पुस्तक 'लस्ट फर लाइफ' हो, भ्यानगगका बारेमा लेखिएको ।'

'भ्यानगग महान् कलाकार हुन् ।'

'तिमीलाई तुलना गर्न खोजेको होइन,' मैले भनेँ- 'मेरो आशय के हो भने साधारण चित्रकारको पुस्तक मैले पढ्न पाएको छैन । साधारण भन्नाले तिमीजस्ता चित्रकार जसको पृष्ठभूमि र जीवन मेरैजस्तो छ । तिम्राबारे लेख्दा मैले आफ्नाबारे कसैलाई भनिरहेको वा आफ्नो अनुभूति अरूलाई सुनाइरहेजस्तो हुन सक्छ ।'

'तिम्रो मर्जी,' उसले भन्यो- 'मैले के गर्नुपर्छ ?'

'अन्तर्वार्ता दिनुपर्छ,' मैले सर्त राखेँ- 'जहिलेसम्म म सन्तुष्ट हुन सक्दिनँ ।'

'लभसभको कुरा धेरै नहाल है त !' उसले हाँस्दै भन्यो ।

'कत्ति न रोमान्टिक हुँ भन्ठान्या होला !'

'म छैन ?'

'देखियो ।'

'के ?'

'तिमीले प्रेम गरेको ।'

'मैले गरेँ तर त्यो विषय नकोट्याएकै जाती ।'

'प्रेमबिना पनि तिम्रो जीवनबारे लेख्न सकिन्छ ?' मैले भनेँ- 'प्रेम कुनै पनि उपन्यासको अचार हो ।'

'तिमी मेराबारे उपन्यास लेख्छौ ?'

'उपन्यासभन्दा कम नाटकीय छैन तिम्रो कथा ।'

'हेर्ने आँखा हुन्,' उसले भन्यो- 'सोझो रेखालाई पनि विभिन्न आकृति दिन सकिन्छ ।'

'म रेखाकार होइन,' मैले भनेँ- 'शब्दाकार दिन प्रयास गर्नेछु ।'

'फरक छैन शब्द र रेखामा,' उसले भन्यो- 'आँखाका लागि दुई माध्यम मात्र हुन् ।'

'हामी फरक माध्यमका मानिस हौँ त्यसो भए ।'

'माध्यमभन्दा विषय र विषयभन्दा कला ठूलो हो,' उसले भन्यो ।

'होइन,' मैले भनेँ- 'कलाभन्दा जीवन ठूलो हो ।'

'जीवनलाई तिमीले के ठानेका छौ ?' उसले भन्यो- 'कला जीवनबाट टाढा हुँदैन । कला र जीवनलाई फरक राख्नु हुँदैन । जहाँ कला छ त्यहाँ जीवन छ र जहाँ जीवन छ त्यहाँ कला ।'

'त्यसो भए मैले तिम्रो जीवनबारे लेख्नु पनि कला हो ?'

'ठीक भन्यौ,' उसले भन्यो- 'तिमी पनि कलाकार हौ ।'

'भइसकेको छैन ।'

'हुनेछौ,' उसले भन्यो- 'लेख्यौ भने ।'

'तर तिमी आफ्नो प्रेम लुकाउन किन खोज्छौ ?' मैले भनेँ- 'त्यसबिना म तिम्रो कथा अर्थात् रेखालाई विभिन्न आकृति दिएर लेख्न सक्नेछैन ।'

'तिमीलाई लाग्छ म प्रेमी हुँ ?'

'हौ,' मैले भनेँ- 'तर असफल ।'

'हाऽहाऽ,' उसले भन्यो- 'मेरो लभ सार्वजनिक भयो भने अरू केटी छेवै नपर्लान् नि !'

'तिम्रो त्यस्तो दाउ छ भने मिलाएर लेखिदिउँला ।'

'जस्ट किडिङ,' उसले भन्यो- 'म आफूलाई सम्पूर्ण रूपमा बुझाउन प्रयास गर्छु । र तिमी पनि नढाँटी लेख्ने प्रयत्न गर । मैले ढाँट्ने र तिमीले पनि कुरा चपाएर लेख्ने हो भने त्यस्तो पुस्तक बरु नलेखेकै जाती !'

माघको एउटा चिसो रात मैले यसको खेस्रा थालें । धेरै फेरफार गर्नुपर्‍यो । उसलाई धेरै दिन अन्तर्वार्ता गरे पनि पछिपछि नपुग लाग्न थाल्यो । लेख्दै जाँदा कौतूहल बढ्दै जान्छ । जिज्ञासा बढ्दै जान्छ । फेरि सोध्नुपर्ने हुन्छ । धेरै ठाउँ ऊ प्रस्ट हुन नसकेकाले पनि उपन्यास पूर्ण हुन सकेको छैन । यो व्यक्तिगाथाजस्तो भएको छ । किनभने मैले दृश्यबाहेक अरूसँग अन्तर्वार्ता गरेकै छैन । यो सम्पूर्णतः उसको कथा हो । उसकै जीवन हो । उसको दृष्टिकोण र अनुभव हो । अरूको चित्रण खुलस्त हुन सकेको छैन भने त्यो मेरो कमजोरी हो । दृश्यका आँखाबाट मैले अरूको चरित्र निकालेको छु । चित्रकारका आँखाबाट हेरिएका अरू पात्रहरूलाई न्याय गर्न सकेको छु भन्नेमा म विश्वस्त छैन । तर कहिल्यै कुनै पनि लेखाइ पूर्ण हुन सक्दैन । केही न केही बाँकी हुन्छ । अभाव खट्किन्छ । त्यो रिक्तता फेरि भर्न सकिन्छ ।

यो उपन्यास उसको अनुभव र हेराइमा आधारित भए पनि पूर्ण रूपमा ऊ आफैं खुल्न नसकेकामा म अचम्भित छैन । उसको कथा भए पनि मैले सुनेको र बुझेको उसको चित्रण हो यो । त्यसैले दृश्यको जीवनगाथाभन्दा बढी मैले चिनेको दृश्यको कथा हो यो । अझ भनूँ, मेरो बुझाइको यो उसको 'वानसाइड स्टोरी' हो । पल्पसालाई पनि मैले भेटिनँ । कम्तीमा उसलाई मात्र भेट्न सके पनि मैले ती दुईबीचको सम्बन्ध र पल्पसाकै दृष्टिकोण फस्ट ह्यान्ड पाउन सक्थेँ । त्यो बढी परिपक्व हुने थियो । दृश्यको पछिल्लो जीवन पल्पसाबाट डोरिएको छ । उसकै नाममा पहाडमा ऊ त्यत्रो योजना बुनिरहेको थियो । ऊ असमयमै सिकार भई । ऊ बाँचेकी भए म पक्कै भेट्ने थिएँ । म उसलाई भेट्न धेरै उत्सुक थिएँ। काठमाण्डूमा बाल्यकाल गुजारेकी पल्पसाको दृष्टिकोण पश्चिमी सभ्यताले पूर्ण थियो । दृश्य बरु प्रान्तीय वातावरणमा हुर्किएको हो, पल्पसाले भने अन्तर्राष्ट्रिय वातावरणमा खारिन पाई । यिनका व्यवहार आफ्नो हुर्काइ, पढाइ, सङ्गत र

भोगाइले फरक छन् । त्यही भिन्नताबीचको सङ्घर्ष छ यिनको सम्बन्धमा । सम्बन्धका सङ्घर्षहरू सधैँ चाखलाग्दा हुन्छन् । मेरो रुचि यस्तै विषयमा छ । नत्र म यसलाई उपन्यासको आकार दिन इच्छुक नहुन सक्थेँ ।

फुलनसँग भने अहिले पनि सम्पर्क हुन्छ । ऊ फरासिली छ तर दृश्य पक्राउ परेपछि उसको होसहवास उडेको छ । अस्ति पनि फोन गर्दै थिई- 'केही खबर पाइयो दाइ ?'

दृश्य बेपत्तै भइरह्यो भने ऊ गाउँ फर्किन विवश हुन सक्छे । गाउँ फर्की भने 'मिलिसिया' बन्न के बेर ? 'एक धुरी एक पाखुरी' भनिरहेका छन् । घानमा पर्न सक्छे । जङ्गल लगिन सक्छे । लहैलहैमा आफैँ बत्तिन पनि सक्छे । गायक किशोर विदेश उडिसकेको फुलनले सुनाई । जाने बेला उसले भन्यो रे, 'फर्केपछि म तिमीसँग रिलेसन बनाउन चाहन्छु ।'

'के भन्यौ त ?'

'मलाई टेन्सन नदेऊ भनेँ,' उसले भनी- 'रिलेसन इज टेन्सन !'

काठमाण्डूमा दृश्यको खास साथी भनेको छिरिङ हो जस्तो देखिन्छ । ऊ आफैँ व्यस्त फोटोग्राफर हो जसलाई भेट्न सजिलो छैन । कत्ति महिना विदेशतिर हुन्छ । मैले यो उपन्यास अझ पूर्ण बनाउने हो भने ऊ हिँडेको पहाडी बाटो एकपल्ट घुम्नुपर्थ्यो । तर मेरो पेसाको व्यस्ततासँगै ऊजसरी भ्रमण गर्न स्थिति प्रतिकूल छ । उसकै बारेमा पनि मैले केही पृष्ठभूमि राम्ररी बुझ्न पाएको छैन । जस्तो– ऊ कसरी काठमाण्डू बोर्डिङ पठाइयो ? उसका बाआमा कसरी बिते ? कुन लहरमा चित्रकार बन्यो ? किन त्यतिसारो एकलकाँटे भयो ? स्कुल-कलेजका दिनहरू कसरी बिते ? उसको व्यक्तित्व र स्वभाव कसरी त्यस्तो बन्यो ? धेरै ठाउँ छन् जहाँ म आफैँ कुइराको काग भइरहेको छु । त्यो रिक्तता चित्रमा हुने रङ्गको शून्यताजस्तो हो । दर्शक आफैँले अर्थ्याउन सक्ने खाली ठाउँजस्तै यस उपन्यासमा पनि प्रशस्त त्यस्ता प्रसङ्ग छन् जसमा पाठकको कल्पनाशक्ति उपयोग हुनेछ । जेठ १९ को राति र त्यसपछि सिद्धार्थ भेटेर उसमा धेरै परिवर्तन आएको छ । त्यसअघि ऊ सरदर काठमाण्डौले तन्नेरी मात्र थियो । एकचित्तले बहकिन्थ्यो र चित्र गर्थ्यो । त्यसपछि ऊ फरक भएको छ ।

सिद्धार्थसँग उसको सम्बन्ध साधारण छैन । सिद्धार्थले कसरी कुन बाटो पहाड लग्यो र कसरी कहाँबाट छुट्टियो भन्ने पनि प्रस्ट छैन । उसका बारेमा बुझ्न

नजिकको अरू कोही छैन । ऊ धेरै जाने रेस्टुरेन्ट, बारतिर वेटरहरू खासै उसलाई सम्भिँदैनन् । ऊ कमैसँग हिमचिम गर्छ । मैले उसको सही चित्रण गर्न सकेको छैन भने त्यो उसको दोष होइन तर उसको एक्लो जिन्दगीको परिणाम हो ।

मलाई लागेको एउटा खसखस भने मेटाएँ । क्रिस्टिनाका बारेमा । ऊ किन एक्कासि दृश्यलाई केही नभनी टाप कसी ? त्यसबारे मलाई धेरै कौतूहल थियो । फुलन निन्याउरिएकी होली भनेर दृश्य अपहरित भएपछि म ग्यालरी गएको थिएँ । फुलन की-बोर्डमा अल्भिरहेकी रहिछ । ऊ दृश्यका तर्फबाट चिठीपत्रहरू फर्काउने गर्दिरहिछ, सधैँ । हुन पनि दृश्य कति भ्याओस् ? ऊ कहिले महिनौँसम्म कसैलाई केही नपठाई बस्न सक्छ । फुलनले उसको इमेल व्यवस्थापन गर्ने गरेको मैले त्यही दिन चाल पाएँ । तर ऊ हैरान देखिई ।

'हेर्नुस् न दाइ,' उसले गुनासो गरी- 'दृश्य दाइले पासवर्ड चेन्ज गर्नुभएछ ।'

'ए,' मैले कम्प्युटरतिर निहुरिँदै भनेँ- 'कहिले गऱ्यो होला ?'

'पक्राउ परेको अघिल्लो दिनसम्म पुरानै थियो,' उसले भनी ।

'त्यसो भए ल पख,' भनेर उसलाई सिटबाट उठाएर आफू बस्दै मैले भनेँ- 'अब पासवर्ड ट्राई गरौँ ।'

'कसरी ?'

'उसको सबभन्दा प्रिय के थियो ?'

ऊ अकमकिई । घोरिन थाली । के होला ? घोत्लिँदाघोत्लिँदै मेरो टाउकामा बिजुली परेजस्तो भयो । फटटट टाइप गरेँ- 'पल्पसा क्याफे' ।

हो त । उसले अरू कुन पासवर्ड राखोस् ? इमेल खुलेपछि फुलन दुई बित्ता उफ्रिई । के ऊ स्कुलमा हाइजम्प गर्थी ? जे होस्, उसको अनुहार धपक्कै बलेको थियो । के मैले उसको इमेल पढ्नु हुन्छ ? म उठेँ, ऊ बसी । 'ल हेर्नुस् त दाइ,' उसले औँला तन्काएर देखाउँदै भनी- 'क्रिस्टिनाको कति धेरै मेल !'

'खोल्नु हुन्छ ?'

'उसलाई भनिदिनुपरेन ?'

'खोल, खोल,' मैले उक्साएँ- 'के तिमी दृश्य गिरफ्तार भएको जानकारी दिन्छ्यौ ?'

'नदिने ?'

'खै ?' म उभिरहेँ । त्यसरी अर्काको व्यक्तिगत पत्र हेर्न मलाई धक लाग्छ । तर फूलनलाई त्यो अधिकार दृश्यले दिएको छ भने म किन हच्किने ?

एउटा पत्रमा क्रिस्टिनाले लेखेकी रहिछ- 'म बिदावारी नभई किन फर्कें भन्ने तिमीलाई लागिरहेको होला । मैले गहिरिएर सोचेँ– तिमीसँगै बसूँ कि नबसूँ ? आफ्नो ब्वई-फ्रेन्डलाई बिर्सूं कि नबिर्सूं ? तिमी पहाडबाट फर्केपछि म धेरै दिन बिलखबन्दमा परेकी थिएँ । एक दिनको घटनाले मलाई परिवर्तन गरिदियो । जुन दिन म तिमीसँग ठुस्केर ग्यालरीबाट निस्केकी थिएँ, त्यसको भोलिपल्ट मेरो बर्थडे थियो । तिमीले मलाई बर्थडे विस गरेनौ । न उपहार नै दियौ । मैले तिमीलाई आफ्नो डे सम्झाएकी थिएँ । तिमी भुलक्कड हौ वा मसँग टाढा, मैले खुट्ट्याउन सकिरहेकी थिइनँ ।

'मेरो ब्वई-फ्रेन्डले के गऱ्यो थाहा छ ? उति टाढाबाट मेरो होटलमा फोन गरेर स्टाफलाई भनसुन गरीवरी एकाबिहानै मेरो बेडमा फूलहरू पठाउन लगायो। उसले बर्थडे विस गरेको आफ्नै अक्षरको पत्र फ्याक्स पनि गऱ्यो । मैले बिहान ढोका खोल्दा बुके र त्यससँगै फ्याक्स पाएँ । तिमी सोच्न सक्छौ म कति भावुक भएँ त्यतिखेर । मैले ठानेँ, मेरा लागि यही केटो, यही मेरो उल्लू, यही मेरो ब्वाँसो, यही मेरो ब्वई-फ्रेन्ड मरिहत्ते गर्छ । केहीबेरमा स्टाफले ह्याप्पी बर्थडे लेखेर ठूलो केक पनि ल्याइदिए । त्यही दिन मैले ट्राभल एजेन्सी गएर टिकट मिलाएँ । मैले ठीक गरेँ भन्ने तिमीलाई लागेको भए म धन्य हुनेछु । त्यसभन्दा बढी तिमी चित्र बनाउन मग्न छौ भन्ने थाहा पाउन सकेँ भने मलाई धेरै सन्तोष हुनेछ । मैले तिमीलाई निराश तुल्याएकी भए माफ गर्नेछौ ।'

त्यसपछि फूलनलाई छाडेर म फर्कें ।

'नमस्ते,' जेमिनी आइपुगी । मैले आफ्नो अगाडि बस्न इसारा गरेँ । उसलाई हेरेँ, सानो ब्याग कुर्चीको कुइनेटामा राखेर कपाल सम्याउन थाली । त्यही एक्काइस-बाइस वर्षकी हुँदी हो । वा बढीमा तेइस-चौबीस ।

'तपाईंलाई डिस्टर्ब त गरिनँ ?' उसले सोधी ।

'म फुर्सदमा थिएँ,' मैले भनेँ- 'के ड्रिङ्क गर्छ्यौ ?'

'के लिँदै हुनुहुन्छ ?'

'जिन र टनिक ।'

'म स्प्राइट मिसाउँछु' भनेर उसले पर बारतिर हेरी । वेटर आयो ।

केहीबेर उसले मेराबारेमा जान्न खोजी । पत्रकारिता, राजनीति, द्वन्द्व, अन्तर्राष्ट्रिय परिस्थिति र देश कता जाँदै छ भन्नेबारे उसका रुचि स्वाभाविक थिए ।

सुरक्षा फौज र माओवादीबीच भिडन्त र बदलिँदो परिस्थितिप्रति केही चोटिला प्रश्न गरी । हामीले ड्रिङ्क थप्यौँ । उपन्यास सकिएर हलुको भएकाले म धेरैबेर पिउनै चाहिरहेको थिएँ । उसले घनिष्ठ साथीजस्तो साथ दिन थाली । रमाइलो मानिरहेकी थिई, केही कुराको तलासीमा उसका आँखा घरीघरी चिम्सा बन्थे । पछि बल्ल रहस्य खोल्न थाली ।

'मेरी एउटी साथी बेपत्ता छ,' उसले भनी ।

उसको गुह्य त्यो रहेछ । किन ऊ मेरो सहयोग खोज्दै छे भन्ने मलाई मधुरो प्रकाश आउन थाल्यो । तर म कस्तो सहयोग गर्न सक्छु र ?

'पत्रकारहरूको माओवादीसँग सम्पर्क हुन्छ,' उसले भनी- 'तपाईंहरू मान्छे छुटाउन सक्नुहुन्छ ।'

'सकिँदैन,' मैले भनेँ- 'हाम्रो समाचारले धेरथोर दबाव दिन भने सक्छ ।'

'म दुवै सहयोग चाहन्छु,' उसले भनी- 'तपाईंलाई बुझाउन सकेँ भने समाचार आउन सक्छ र माओवादी नेतृत्वसँग पहल गरिदिन पनि सक्नुहुन्छ भन्ने मेरो आशा हो ।'

'दोहोरो सम्पर्क हुँदैन,' मैले भनेँ- 'आवश्यक पर्दा उनीहरू आफैँ सम्पर्क गर्छन् । प्रायः सेटेलाइट फोनबाट गर्ने भएकाले स्क्रिनमा नम्बर देखिँदैन ।'

वेटर नजिकै आएर उभियो । स्न्याक्स अर्डर भएको थिएन । मैले ऊतिर हेरेँ । उसले डिनर नै लिने चाहना देखाई । मेनु पल्टाई । म उसलाई हेरिबसेँ । मध्यम उचाइ, खिरिलो शरीर, हलुका खरानी रङ्गको पातलो स्विटर । स्विटरको चेन घाँटीसम्मै कसेकी थिई । केहीबेर उसले आफ्नो पढाइ र अमेरिका-बसाइबारे बताई । थेसिस लेख्न अर्को वर्ष यतै आउने विचारमा रहिछ ।

'म यहाँ आउँदा साथी हराएको धेरै भइसकेको रहेछ,' उसले भनी ।

'कहाँबाट हराएकी ?'

'काठमाण्डूबाहिर डुल्न निस्केकी थिई ।'

'कता ?'

'पश्चिमतिर हुनुपर्छ, यकिन छैन, कसैलाई पनि थाहा छैन ।'

'उसको घरमा कोही छैन ?'

'हजुरआमा हुनुहुन्छ,' उसले भनी । म झस्किएँ ।

'उसको नाम ?'

'पल्पसा ।'

उसले मेरो टाउकामा घन ठोकेजस्तो भयो । छ्याङ्ग भयो । अप्ठ्यारामा परेँ । ऊ मरिसकेकी छ तर अझै उसको परिवार बेपत्ता मात्र हो भन्ने भ्रममा रहेछ । पल्पसाप्रति परिवारको धुकचुक बाँकी रहेछ । आशा रहेछ अझै । उनीहरूलाई त्यस घटनाबारे थाहै रहेनछ । दृश्यको कमजोरीले यस्तो भएको हो । उसले हजुरआमालाई भन्न सकेको थिएन । पछि पनि भनेनछ । मलाई यो थाहै थिएन । उसले भन्नुपर्थ्यो तर म अब के गरूँ ? टोलाइरहेँ ।

उसलाई अहिले नभनूँ, कुनै न कुनै दिन भन्नुपर्छ । भनिनँ भने पनि किताब बजारमा आएपछि सबैलाई थाहा हुनेछ । म बेइमान ठहरिनेछु । यस केटीलाई मेराबारेमा थाहा छैन । मैले दृश्य र पल्पसाबारे उपन्यास लेखेको छु भन्ने अरूलाई कुनै सुइँको छैन । ऊ मरिसकी भनेर लेखेको उपन्यास छाप्न प्रकाशकलाई दिन ठिक्क पारेकै दिन उसकी साथी आइपुगेकी छ र मैसँग सहयोग माग्दै छे । निकैबेर औडाहा भयो । ड्रिङ्क थपेँ । ऊ पास्ता लिँदै थिई । मभित्र हुँडलिएको छाल उसले कसरी चाल पाओस् ?

एक मन सोच्छु– दृश्यले नभनेर केही बिगारेन । ऊ त्यो बसमा नचढेको भए पनि त्यही हुन्थ्यो जुन हुनेहुनामी भइसक्यो । यत्ति हो, दृश्यलाई पनि पल्पसाका बारेमा थाहा हुने थिएन । तर उसको कर्तव्य थियो हजुरआमालाई भनिदिनु ।

'ऊ एउटा चित्रकारसँग प्रेममा परेको हजुरआमाको अनुमान रहेछ,' उसले भनी ।

'ए ।'

'मलाई पनि इमेलमा आफ्नो एकतर्फी प्रेमका बारेमा बताउने गरेकी थिई ।'

'कस्तो प्रेम ?'

'ऊ सेन्टिमेन्टल होइन,' उसले भनी- 'तर त्यो चित्रकारसँग नजाने के सुरमा बढी नै लहसिएकी थिई । भन्थी- ऊ मलाई वास्ता गर्दैन तर म उसका आँखाबाहिर भाग्न सक्दिनँ ।'

मैले चुपचाप उसलाई हेरिरहेँ ।

'कहीँ नपाएर नेपालमै गएर फसिस् भनेर मैले इमेल पठाएकी थिएँ । ऊ आफ्नो जीवनलाई नयाँ पाउन थालेकी छु भन्थी । जीवन के हो भन्ने बुझ्न थालेकी छु, सम्बन्ध के हो भन्ने बुझ्न थालेकी छु, समाज के हो, देश के हो, सङ्घर्ष के हो बुझ्न थालेकी छु भन्थी ।'

मैले कुनै प्रश्न गर्ने ठाउँ भेटिनँ। ऊ भन्दै गई- 'ऊ नेपाल यति चाँडै आउनेवाला थिइन। एक दिन बुवामुमासँग बढी नै ठाकठुक पर्‍यो। ऊ कुनै पनि नयाँ खाले जीवन रोज्न चाहन्थी जहाँ परिवारको परम्परागत मान्यताको छेकबार नहोओस्। ठुस्केरै यता आएकी हो। छुट्टिने बेला हामीले उसलाई एउटा पार्टी दिएका थियौँ तर त्यहाँ पनि ऊ खुलिन। भन्दै थिई- नेपाल फर्केर म केही गर्नेछु।

'के गर्नेछे हामीले गेस गर्न सकेनौँ तर ऊ कटिबद्ध थिई। उसले त्यति धेरै साथीहरू चट्ट छाडी। ऊ धेरै साथी भएकी केटी हो। केटा र केटी सराबरी साथी बनाउन खप्पिस। जोसँग पनि नझुक्ने तर कसैलाई झुकाउन पनि नखोज्ने। साथी बनाउने काइदा होला त्यो। म सक्दिनँ। ऊ त्यही कारण फरक थिई। एक्लै बस्न कहिल्यै कतै नसक्ने। तर एक्लै हुर्रिएर यता आई।'

'ड्रिङ्क थपूँ?'

'भो,' उसले भनी- 'म धेरै पिउँदिनँ। साथ दिन मात्र हो। तपाईंलाई बोर त लाग्या छैन?'

'छैन-छैन,' मैले भनेँ- 'म पनि धेरै पिउन सक्दिनँ। लागिहाल्छ। तर तिम्रो कुरा सुन्दा पिउन मन लागिरहेछ।'

'मेरो कि पल्पसाको?'

'भनूँ न दुवैको।'

'म भन्दै थिएँ,' उसले फेरि लहरो तानी- 'म त्यो चित्रकारलाई चिन्न सक्छु, एकपल्ट गोआमा भेटेकी छु, उसको ग्यालरी खोज्दै गएँ। ताला लागेको रहेछ। वरिपरि कसैले केही बताउन सकेनन्। धेरै भयो रे ग्यालरी नखुलेको। चित्रकार एकपल्ट हजुरआमालाई भेट्न गएको थाहा भयो तर उसको अर्को ठेगाना पाउन सकिनँ। उनीहरू दुवै जना घुम्न गएका हुन् कि भन्ने पनि लागेन। हजुरआमा भन्नुहुन्थ्यो, पल्पसा गएको धेरै दिनपछि चित्रकार आएको थियो र उसलाई पनि पल्पसा निस्केको थाहा रहेनछ। ऊ क्यामरा भिरेर हिँडेकी छ। तर यतिका महिनासम्म पनि नआएपछि कतै माओवादीले अपहरण गरेको हुनुपर्छ। हजुरआमासँग झट्टै फर्किन्नँ भनेकी थिई तर अब त अति भयो। हजुरआमा चिन्ता गर्दै हुनुहुन्छ। परिस्थिति ठीक छैन। ऊ हराएकी छ। यसरी हराउने मान्छे होइन। कसैले कतै बलजफ्ती लगेको हुनुपर्छ। म अमेरिका फर्किनुअघि उसबारे बुझ्न खोज्दै छु। उसका बुवामुमालाई मैले भनिदिनुपर्नेछ। त्यही भएर मैले तपाईंसँग सहयोग माग्न खोजेकी।'

म चुपचाप सुनिरहेको थिएँ। अलि बढी पिएछु। रोकिरहन सकिनँ, फ्याट्ट भनिहालेँ- 'ऊ अब फर्किन्न।'

उसले सीधा मेरा आँखामा क्वारक्वारती हेरी। अविश्वास गर्ने आँखा काँडाले झैँ हेर्छन्। मैले त्यस्सै भनिदिएँ भन्ने उसलाई लागेको होला। अवाक् भई। उचालिरहेको पानीको ग्लास टेबलमै राखी। मलाई हेरिरही।

मैले केही बोल्नुअघि उसले सोधी- 'तपाईं के भन्दै हुनुहुन्छ ?'

'ठीक भन्दै छु।'

'भन्नाले ?'

'तिमीले के बुझ्यौ ?'

'के मारिई ?'

'त्यही ठान।'

'कसरी थाहा पाउनुभयो ?'

'म पत्रकार भएर होइन,' मैले भनेँ।

'कसरी ठोकुवा गर्दै हुनुहुन्छ ?'

'तिमीसँग फुर्सद छ ?'

'किन ?'

'म तिमीलाई एउटा किताब पढाउन चाहन्छु।'

'किन ?'

'त्यसैमा सबै थोक लेखिएको छ।'

ऊ जिल्ल परी। हेर्दाहेर्दै उसका ओठ सुक्खा भए। आँखा रसाए। म बटारिएको देखेर ऊ बाथरुम गई। आई। फेरि मलाई क्वारक्वारती हेरी। वेटरसँग सिगरेट मागी। 'सरी मेडम,' उसले भन्यो- 'हामीसँग लुज सिगरेट छैन।'

'बट्टै लेऊ न त,' मैले अह्राएँ। उसले एक खिली सल्काई। मैले पनि उसको देखासिकी गरेर बट्टाबाट अर्को खिली निकालेँ। वेटरले लाइटर झोसिदियो। बन्द हुन ठिक्क बाँकी रेस्टुरेन्टको सुनसानमा उसले धूवाँ धेरै फाली। सिगरेटको सिकारु हो भन्ने त्यसैले छुट्ट्याउँथ्यो। बाहिर ठमेल झन् शान्त हुँदै गएको थियो। फाट्टफुट्ट कोही हिँडेको देखिन्थ्यो। नगरप्रहरीले लामो लट्ठी बजार्दै हिँडेको एउटै आवाजले पनि टाढैबाट तर्साउँथ्यो। बारबाट आउने सङ्गीत बन्द भइसकेको रहेछ।

'के पल्पसाकै बारेमा लेखिएको छ ?'

'तिमी के ठान्छ्यौ ?'

'मैले जान्न खोजेकी के भने तपाईंले भनेको किताबमा उही पल्पसाका बारेमा लेखिएको छ त ?'

'म तिमीलाई झुक्याउँला ?'

'तर कसरी थाहा पाउनुभयो ?'

'किनभने,' मैले भनेँ- 'म त्यसको लेखक हुँ ।'

ऊ छक्क परी । कतिसम्म भने उसका परेला झिमिक्कै गरेनन् । धेरैबेरसम्म । मलाई ठुङिरहे । म आत्तिने गरी । एक पब तानेको धूवाँ झुक्किएर उसको अनुहारतिर गयो । मैले हात चलाएर पन्छाएँ । ऊ अर्को पब तानेर सिलिङतिर उडाउँदै थिई । वेटर फेरि नजिक पऱ्यो- 'एक्सक्युज मी सर !'

'के भयो ?'

'बन्द गर्नुपर्ने बेला भयो ।'

'हामी बसिरहेको देखेनौ ?'

'प्रहरी आइपुग्छ सर ।'

'आउन देऊ,' मैले भनेँ- 'म आफैँ कुरा गरुँला ।'

'होइन सर,' उसले लत्तो छाडेन- 'हामीलाई लैजान्छ । भोलिदेखि हामीलाई नै दुःख दिन्छ । सरहरू आजका पाहुना, हामी त खोरमा सधैँका पाहुना हुनुपर्छ ।'

मलाई उसको भनाइ निको लागेन । जेमिनाले पनि ऊतिर रिसाएका आँखाले हेरी ।

'हिँडौँ,' मैले भनेँ ।

'मलाई त्यो किताब दिनोस् ।'

'अब प्रेसमा जाँदै छ,' मैले भनेँ- 'ड्राफ्ट पढ्ने भए म दिन्छु ।'

'फरक पर्दैन,' ऊ उठी ।

मैले उसलाई ए-फोर साइजका कागजमा कम्प्युटर प्रिन्ट भएको उपन्यासको मस्यौदा दिएँ । उभिँदाउभिँदै उसले आँखा ठूला पारेर हेरी, प्लास्टिकको पारदर्शी गाताभित्र ठूला अक्षरमा प्रस्ट लेखिएको थियो- 'पल्पसा क्याफे' ।



नारायण वाग्ले २०२५ सालमा तनहूँमा जन्मेका हुन् । उनी क्याम्पस पढ्न काठमाडौं आए, यहीँ पत्रकार बने । सोऱ्ह वर्षको पत्रकारितामा उनले देशविदेशका थुप्रै ठाउँ घुमेका छन्, थुप्रै घटना देखेका छन्, थुप्रै विषयमा लेखेका छन् र थुप्रै पुरस्कार पनि पाएका छन् ।



यो उनको पहिलो उपन्यास हो । यसकै लागि उनले प्रतिष्ठित मदन पुरस्कार र हालैका वर्षमा स्थापित आख्यान पुरस्कार पाएका छन् । दार्जिलिङले उनको साहित्यिक सम्मान पनि गरेको छ । सम्मान समारोहमा यस उपन्यासबारे प्रवचन दिँदै ख्यातिप्राप्त साहित्यिक चिन्तक तथा लेखक इन्द्रबहादुर राईले भनेका थिए- 'यो कुनै वाद वा सिद्धान्तमा बाँधिएर लेखिएको उपन्यास होइन । तर यसमा तीनचौथाइ आधुनिकता र एकचौथाइ उत्तरआधुनिकता छ ।'

**पल्पसा क्याफेले नेपाली साहित्यमा एउटा तरङ्ग ल्याएको छ । पात्रहरूमध्ये एउटी बालिकाको सानो कथा मात्रले पनि यो उपन्यास अमर बनेको छ ।**

- इन्द्रबहादुर राई